ग्रन्थको नाम : उपनिषत्सार
लेखक : श्रीशरत्कुमार भट्टराई

सर्वाधिकार : @ लेखकमा सुरक्षित

प्रकाशक : श्रीराजर्षिजनकस्मृतिकोष
विजयचोक, प्रयागमार्ग,
बत्तीसपुतली–९, काठमाडौं
फोन : ४४९४७५८

प्रकाशन मिति : वि.सं. २०६७ पुत्रदाएकादशी

प्रकाशित सङ्ख्या : ५०० प्रति

मूल्य : रु. २००।–

वितरक : साझाप्रकाशन
पुलचोक, ललितपुर
श्रीपशुपतिनाथशरण सहकारी सं.लि.
पशुपति, काठमाडौं

कम्प्युटर सेटिङ्ग : श्रीखड्गप्रसाद खनाल

मुद्रक : एन्.पी.टी.सी. लिमिटेड
विमासमिति मार्ग, सरस्वतीनगर
फोन नं. ४८११२२६, ४८११३७१

# समर्पण

मलाई यस श्रेयोमार्गमा
अघि बढ्न प्रेरणा दिने प्रातःस्मरणीया
माता, पिता र गुरुमातामा समेत
म यो ग्रन्थ सश्रद्ध
समर्पण गर्दछु ।

# प्रकाशकको भनाइ

यस कोषले आफ्ना स्रोत र साधनले भ्याएसम्म आध्यात्मिक विषयका अझ त्यसमा पनि विशेषरूपमा भक्ति र ज्ञानका विषयमा लेखिएका पुस्तकहरू प्रकाशन गर्दै आएको छ। श्रीशरत्कुमार भट्टराईका कृतिहरूमध्ये २०६३ सालमा ज्ञान र भक्ति, २०६४ सालमा रासपञ्चध्यायी, २०६५ सालमा ब्रह्मसाक्षात्कार र यस वर्ष उपनिषत्सारको प्रकाशन गर्न पाएकोमा कोषलाई खुशी लागेको छ ।

उपनिषत्सारमा समाविष्ट उपनिषद्हरू जिज्ञासु मुमुक्षुहरूका लागि अत्यन्त पठनीय हुने हामी ठान्दछौँ। किनभने भगवान् श्रीशङ्कराचार्यले भाष्य लेख्नुभएका एघार उपनिषद्को नै यसमा सार दिइएको छ। यसैलाई प्रस्थानत्रयीमा श्रुतिप्रस्थान पनि भनिन्छ। महत्त्वपूर्ण ग्रन्थ भएको हुँदा नै यसको प्रकाशनको अभिभारा यस कोषले सहर्ष अङ्गीकार गरेको हो । यस ग्रन्थमा परेका सबै उपनिषद्हरू अत्यन्त पठनीय र मननीय समेत छन् । यो उपनिषत्सारग्रन्थ अद्वैतवेदान्तका जिज्ञासुहरूलाई अत्यन्त उपयोगी हुने छ भन्ने कोषले ठानेको छ। अस्तु।

धन्यवाद !

वि.सं. २०६७ पुत्रदाएकादशी — श्रीराजर्षिजनकस्मृतिकोष

*प्रा.डा. दीर्घराज घिमिरे*
*चाबेल, काठमाडौँ*

फोन : ४४७९३७८



# आशंसा

## पावका नः सरस्वती

'उपनिषत्' ब्रह्म हो, आत्मा हो र स्वयं प्रत्यगात्मा हो । सद्लृ धातुमा उप र नि उपसर्गहरू लागेर यो शब्द निष्पन्न हुन्छ । यसमा प्रकृति, प्रत्यय र निपात गरी तीन प्रकारका सार्थक शब्द छन् । सार्थक भएपनि निपातमा द्योतकता रहन्छ, वाचकता होइन । नि तथा उप दुवै निपात हुनाले प्रकृत्यर्थलाई द्योतन गर्दछन्, स्वतन्त्र अर्थ दिँदैनन् । सद्लृ धातु प्रकृति हो । विकार, विश्राम, ज्ञान, अवसाद आदि अनेक अर्थ प्रकृतिभूत धातुमै छन् । तिनै अर्थ सङ्गति मिल्ने गरी अभिव्यक्त हुन्छन् निपातका सहयोगले ।

कुन कुन अर्थको द्योतक निपात हुन्छ, त्यो नियतै छ । उपका सोह्र अर्थ छन् । अर्थात् सोह्र अर्थको अभिव्यञ्जकता यसमा छ । तीमध्ये सामर्थ्य, दाक्षिण्य, दोषाख्यान, अत्यय, आचार्यकरण र व्याप्ति गरी ६ अर्थ साक्षात् र कथञ्चित् अन्य अर्थ पनि अभिव्यक्त हुनसक्छन् । नि को काम सोह्र अर्थ अभिव्यञ्जन गर्नेमा छ । तीमध्ये यहाँ निषेध, निश्चय, कौशल, सामीप्य, उपरम, आश्रय र अन्तर्भाव गरी सात अर्थ समन्वित छन् । जस्तै – प्रकृत्यर्थ विकार हो, जडको विकार हुन्छ, चेतनको हुँदैन । विकारी हेय हो भन्ने

भावना दृढ हुनुपर्छ। त्यस्तो दृढता उपको सामर्थ्यले बुझाउँछ। सामर्थ्य शक्ति हो। बुद्धि धर्म हो, शरीर धर्म होइन। नि–बाट प्राप्त निषेधको निषेध्य जड हुन्छ, चेतन हुँदैन भन्ने निश्चय उक्त सामर्थ्यका आधारमा हुन्छ, अनि अवशेषता चेतनमा पुग्दछ। यहाँसम्म पुग्न क्विप् प्रत्ययको पनि सहयोग छ। यसरी प्रकृति, प्रत्यय र निपात सबैको समष्टि अर्थनिरूपक 'उपनिषत्' पद हो र प्रणव पनि उपनिषत् हो। यसको वाच्यार्थ सोपाधिक चेतन हो। यो अर्थ 'उप निषीदति श्रेय अस्याम्' अधिकरण व्युत्पत्तिलभ्य छ। अपवाद न्यायले आत्मामात्र हो, वस्तुतः आत्मा त्यही हो। नित्य निरुपाधिक चेतन हो, ब्रह्म हो। वाच्यवाचकाभेदेन पनि उपनिषत् आत्मा हो भन्ने मानिएको छ। 'उपनिषत्' पदघटित प्रकृति, प्रत्यय र निपात समाविष्ट सबै अर्थ यसै रीतिले आत्मबोधकतामा टुङ्गिन्छन्। यसहेतु उपनिषत् प्रत्यगात्मा हो र तज्ज्ञानमा अपवर्गसाधकता निश्चित छ।

आत्मबोधकता प्रमाणवृत्तिमा रहन्छ। वृत्तिविशेष त्यो हो, विद्या त्यही हो। उपनिषदादिपदजन्य अर्थले विशेषताको आधान वृत्तिमा गर्छन्। जुन विशेष आधान हुन्छ, त्यो तद्विषयक वृत्ति हुन्छ। त्यस्तो वृत्तिले ज्ञानको मान्यता पाउँछ। आत्मविषयक भए उपनिषद् वृत्तिविशेष आत्मज्ञान हो। वृत्तिविशेष निर्माणमा करण हुनाले शास्त्र उपनिषत् हुन्। शास्त्रमा वृत्ति व्याप्यत्व छ। ग्रन्थिगर्भितत्व शास्त्रमा हुन्छ। त्यसैले ग्रन्थलाई पनि उपनिषत् भनिन्छ। यस्ता प्रयोग सबै औपचारिक हुन्। शङ्कराचार्यको स्पष्टोक्ति छ 'तादर्थ्याद्ग्रन्थोप्युपनिषदुच्यते'।

आत्मज्ञानका साधन उपनिषत् हुन् , फलानुषङ्गित्व साधनमा

रहन्छ नै । उक्त विषयको आकलन गरी नेपाली भाषामा जनसमक्ष ल्याउने काम विद्वान् चिन्तक शरत्कुमार भट्टराईबाट भएको छ । भट्टराईज्यूको अध्ययन वेदान्तको हो आरम्भमा, वेदान्त दर्शनकै भूमिबाट अधिकृत हुँदै उच्चतम पदसम्म रही राष्ट्रसेवामा धेरै वर्ष रहनु भयो । निवृत्तजीवन वेदान्तको स्वाध्यायाध्ययनबाट अतिवाहन हुँदैछ । जसबाट पूर्वाधीत विद्या उद्बोधित भएको छ । अनुसन्धानप्रधान दार्शनिक संस्था श्रीराजर्षिजनकस्मृतिकोषको संस्थापन उहाँकै सक्रियता तथा नेतृत्वमा भएको हो । त्यस माध्यमले प्रतिवर्ष चिन्तनप्रधान जनक पत्रिका र अद्वैतवेदान्तपरक ग्रन्थहरू प्रकाशन हुने गरेको सर्वविदितै छ । यसै क्रममा यस वर्ष अद्वैतवेदान्तधाराका एघार उपनिषत् लक्ष्यित छन् ।

शङ्कराचार्यले विशेष उत्कर्षमा राखेका छान्दोग्य र बृहदारण्यकोपनिषत् उपादेयतामा परेका ईशादि आठसमेत दश उपनिषत् र शाङ्करभाष्यका नामले चलेको श्वेताश्वतर उपनिषत् यसमा समाविष्ट छन् । दुष्प्रवेश्य, दुर्भेद्य तथा दुरवगाह्य उपनिषद् विषयवस्तुको जिज्ञासा श्रेयोन्मुखी सुकृत फल हो । जिज्ञासु अध्येतृ वर्गका निमित्त यो कृति मूलविषय प्रवेशमा द्वार हुनेछ । कृतिनिष्पत्तिहेतु अन्तर्यामी उमाधव पशुपतिभावित बुद्धि उन्मेष हो । त्यही उन्मेष सुकृतीको सत्कार्यप्रवर्तक हो । भट्टराईज्यूको प्रवृत्तिप्रयोजकता यसैमा छ । यस्तै प्रवृत्तिका निमित्त मेरो आशंसा छ । ॐ तत्सत् ।

दीर्घराज घिमिरे

वि.सं. २०६६ साल चैत्र २१ गते
चैत्रकृष्ण नवमी

प्रा.डा. दीर्घराज घिमिरे
चावहिल, काठमाडौँ

***शरत्कुमार भट्टराई***
विजयचोक, प्रयागमार्ग,
बत्तीसपुतली–९, काठमाडौँ

टेलिफोन : ४११००५८
४११००९५



# उपनिषत्सारको भूमिका

उपनिषद्लाई वेदको शिरोभाग र वेदको ज्ञानकाण्ड पनि भनिन्छ । उपनिषद् शब्द विशरण, गति र अवसादन अर्थ भएको उप एवं नि उपसर्ग लागेको षद्लृ धातुबाट क्विप् प्रत्यय भएर बन्दछ । यसको विशद व्युत्पत्ति र व्याख्या आचार्य शङ्करले उपनिषद्का आफ्ना विभिन्न भाष्यहरूमा गर्नुभएको छ । कठोपनिषद्को सम्बन्धभाष्यमा *'सदेर्धातोर्विशरणगत्यवसादनार्थस्योपनिपूर्वस्य क्विप्प्रत्ययान्तस्य रूपमुपनिषदिति'* भनेर लेख्नुभएको छ । यसको प्रतिपाद्य र वेद्य विषयमा पनि आचार्य शङ्करले सङ्क्षिप्त चर्चा गर्नुभएको छ । जस्तै– *'उपनिषच्छब्देन च व्याचिख्यासितग्रन्थप्रतिपाद्यवेद्यवस्तुविषया विद्योच्यन्ते । ये मुमुक्षवो दृष्टानुश्रविकविषयतृष्णाः सन्त उपनिषच्छब्दवाच्यां वक्ष्यमाणलक्षणां विद्यामुपसद्योपगम्य तन्निष्ठतया निश्चयेन शीलयन्ति तेषामविद्यादेः संसारबीजस्य विशरणाद्धिंसनाद् विनाशनादित्यनेनार्थयोगेन विद्या उपनिषदित्युच्यते ।'*

त्यसैगरेर मुण्डकोपनिषद्को सम्बन्धभाष्यमा पनि आचार्य शङ्करले यस्तो लेख्नुभएको छ । जस्तै – *'य इमां ब्रह्मविद्यामुपायन्त्यात्मभावेन श्रद्धाभक्तिपुरः सराः सन्तस्तेषां गर्भजन्मजरारोगाद्यनर्थपूगं विशातयति परं वा ब्रह्म गमयत्यविद्यादिसंसारकारणं चात्यन्तमवसादयति विनाशयतीत्युपनिषद् । उपनिपूर्वस्य सदेरेवमर्थस्मरणात् ।'*

श्रीमद्भगवद्गीतामा उपनिषद्लाई 'ब्रह्मसूत्रपदैः' (गीता.१३।४) भनिएको छ। यसको व्याख्या गर्दै स्वामी मधुसूदन सरस्वतीले यसरी टिप्पणी गर्नुभएको छ – *'ब्रह्मसूत्रपदैश्चैव-ब्रह्मसूत्र्यते सूच्यते किञ्चिद्व्यवधानेन प्रतिपाद्यत एभिरिति ब्रह्मसूत्राणि। 'यतो वा इमानि भूतानि जायन्ते, येन जातानि जीवन्ति, यत्प्रयन्त्यभिसं-विसन्ति' इत्यादीनि तटस्थलक्षणपराण्युपनिषद्वाक्यानि। तथा पद्यते ब्रह्मसाक्षात्प्रतिपाद्यत एभिरिति पदानि स्वरूपलक्षणं 'सत्यं ज्ञानमनन्तं ब्रह्म' इत्यादीनि तैर्ब्रह्मसूत्रैः पदैश्च।'*

विभिन्न विद्वान्हरूले उपनिषद्को व्याख्या आ-आफ्ना तरिकाले गरेको पाइन्छ। धर्मसम्राट् स्वामी करपात्रीज्यूले उपनिषद्को तात्पर्यका बारेमा यस्तो उल्लेख गर्नुभएको छ। जस्तै – प्रत्यक् चैतन्याभिन्न परमात्मालाई प्राप्त अथवा व्यक्त गराउने, निःसन्धिबन्धनात्मिका चिज्जडग्रन्थिस्वरूपा अविद्यालाई शिथिल गराउने, अविचारितरमणीय नामरूपक्रियात्मक मायामय विश्वप्रपञ्चलाई समूलोन्मूलन गरेर जीवलाई ब्रह्मात्माको बोध गराउने ब्रह्मविद्या नै उपनिषद् हो। त्यसका उत्पादक वा व्यञ्जक भएका हुनाले नै ईशावास्य, केन, कठ आदि मन्त्र ब्राह्मण वेदशीर्ष ग्रन्थहरू पनि उपनिषत्पदवाच्य हुन्छन्। यी मन्त्र एवं ब्राह्मण उभयस्वरूप वेदशीर्ष उपनिषद् हुन्। यी सबै नै अनादि, अविच्छिन्न, सम्प्रदायपरम्परया प्राप्त तथा अस्मर्यमाणकर्तृक भएका हुँदा अपौरुषेय वेदस्वरूप नै हुन्।

वेदशीर्ष उपनिषद्का आधारमा नै गीताको उपदेश भगवान् श्रीकृष्णबाट अर्जुनलाई भएको हो। यसैगरेर उपनिषद्हरूको समन्वय र व्याख्या सूत्रात्मकरूपमा गर्न नै महर्षि वेदव्यासले

ब्रह्मसूत्रको प्रणयन गर्नुभएको हो । त्यतिमात्र नभएर महाभारत, रामायण, पुराण, धर्मशास्त्र, विभिन्न पन्थ र सम्प्रदायहरूको प्रणयन र सिर्जना पनि यिनै विभिन्न मन्त्र, ब्राह्मण, आरण्यक र उपनिषद्का आधारमा भएका हुन् । उपनिषद्का अभावमा हाम्रा सम्पूर्ण धर्म, संस्कृति, सभ्यता, भाषा, आचारविचार र रीतिरिवाजको समेत परिकल्पनासम्म पनि गर्नसकिँदैन । यी सबैका मूल आधार उपनिषद्हरू नै हुन् ।

त्यसै गरेर उपनिषद्का बारेमा स्वामी अखण्डानन्दज्यूको विचार यस्तो छ – 'वेदशब्दको अर्थ ज्ञान हो । वेदपुरुषका शिरोभागलाई उपनिषद् भनिन्छ । उप अर्थात् व्यवधानरहित, नि अर्थात् सम्पूर्ण, षद् अर्थात् ज्ञान नै उपनिषद्का अवयवार्थ हुन् । यो सर्वोत्तम ज्ञान जुन ज्ञेयबाट अभिन्न एवं देश, काल, वस्तुका परिच्छेदबाट रहित जुन परिपूर्ण ब्रह्म हो, त्यो नै उपनिषद्पद्को अभिप्रेत अर्थ हो ।

चक्रवर्ती राजगोपालाचारीको मत यसप्रकारको छ – 'उपनिषद्का सारतत्त्वलाई वेदान्त भनिन्छ । ज्ञान, भक्ति र आफ्ना सम्पूर्ण कर्महरूमा भगवत् शरणागतिको भाव नै उपनिषद्को मथितार्थ हो ।

उपनिषद्का बारेमा विभिन्न विचार, परिभाषा, मत, व्युत्पत्ति, निर्वचन र मतमतान्तर देखिन्छन् । उपनिषद् अक्षयज्ञानको भण्डार हो । अनन्त, अपौरुषेय वेदवाङ्मयको ज्ञानकाण्ड नै उपनिषद् हो । जसलाई *'तत्कर्म यन्न बन्धाय सा विद्या या विमुक्तये'* भनिएको छ । यसको अर्को परिभाषा यस्तो छ *'उपनिषद्यते प्राप्यते ब्रह्मात्मभावोऽनया इति उपनिषद् ।'*

उपनिषद्हरू असङ्ख्य छन् । यी मध्ये धेरैजसो वेदकै प्राचीन

अङ्ग वा भाग वा शिरोभाग भए तापनि केही अर्वाचीन र प्रक्षिप्त पनि छन् । यिनीहरूको सङ्ख्या निश्चित छैन । मुक्तिकोपनिषद्मा १०८ उपनिषद्हरूको नाम देखिन्छ । पण्डित जगदीश शास्त्रीबाट सम्पादित र मोतीलाल बनारसीदासले दिल्लीबाट सन् १९९८ मा प्रकाशन गरेको उपनिषत्सङ्ग्रहमा १८८ उपनिषद्हरू छन् । जसको द्वितीय भागको शाक्तोपनिषदः खण्डको ५१ सङ्ख्यामा संस्कृत र अरबी भाषामा लेखिएको 'अल्लोपनिषद्' पनि समाविष्ट भएको देखिन्छ । मद्रासबाट प्रकाशित उपनिषत्सङ्ग्रहमा १७९ उपनिषद्हरूको नाम पाइन्छ । उपनिषद् वाक्य महाकोषमा २२३ उपनिषद्हरूको नामावली देखिन्छ । २२० उपनिषद्हरूको नामावली कल्याणको उपनिषद् अङ्क सङ्ख्या १ पूर्णसङ्ख्या २६६ मा मिति सन् १९४९ जनवरीमा प्रकाशित भएको देखिन्छ । जुन यसप्रकार छन् –

१. अक्षमालोपनिषद्, २. अक्षि–उपनिषद्, ३. अथर्वशिखोपनिषद्, ४. अथर्वशिर उपनिषद्, ५. अद्वयतारकोपनिषद्, ६. अद्वैतोपनिषद्, ७. अद्वैतभावनोपनिषद्, ८. अध्यात्मोपनिषद्, ९. अनुभवसारोपनिषद्, १०. अन्नपूर्णोपनिषद्, ११. अमनस्कोपनिषद्, १२. अमृतनादोपनिषद्, १३. अमृतबिन्दूपनिषद् (ब्रह्मबिन्दूपनिषद्), १४. अरुणोपनिषद्, १५. अल्लोपनिषद्, १६. अवधूतोपनिषद् (वाक्यात्मक एवं पद्यात्मक), १७. अवधूतोपनिषद् (पद्यात्मक), १८. अव्यक्तोपनिषद्, १९. आचमनोपनिषद्, २०. आत्मपूजोपनिषद्, २१. आत्मप्रबोधोपनिषद् (आत्मबोधोपनिषद), २२. आत्मोपनिषद् (वाक्यात्मक), २३. आत्मोपनिषद् (पद्यात्मक), २४. आथर्वणद्वितीयोपनिषद् (वाक्यात्मक एवं मन्त्रात्मक), २५. आयुर्वेदोपनिषद्,

२६. आरुणिकोपनिषद् (आरुणेय्युपनिषद्), २७. आर्षेयोपनिषद्, २८. आश्रमोपनिषद्, २९. इतिहासोपनिषद् (वाक्यात्मक एवं पद्यात्मक), ३०. ईशावास्योपनिषद् (उपनिषत्स्तुति, शिवरहस्यान्तर्गत, अहिलेसम्म अनुपलब्ध), ३१. ऊर्ध्वपुण्ड्रोपनिषद् (वाक्यात्मक एवं पद्यात्मक), ३२. एकाक्षरोपनिषद्, ३३. ऐतरेयोपनिषद् (अध्यायात्मक), ३४. ऐतरेयोपनिषद् (खण्डात्मक), ३५. ऐतरेयोपनिषद् (अध्यायात्मक), ३६. कठरुद्रोपनिषद् (कण्ठोपनिषद्), ३७. कठोपनिषद्, ३८. कठश्रुत्युपनिषद्, ३९. कलिसंतरणोपनिषद् (हरिनामोपनिषद्), ४०. कात्यायनोपनिषद्, ४१. कामराजकीलितोद्धारोपनिषद्, ४२.कालाग्निरुद्रोपनिषद्, ४३. कालिकोपनिषद्, ४४. कालीमेधादीक्षितोपनिषद्, ४५. कुण्डिकोपनिषद्, ४६. कृष्णोपनिषद्, ४७. केनोपनिषद्, ४८. कैवल्योपनिषद्, ४९. कौलोपनिषद्, ५०. कौषीतकिब्राह्मणोपनिषद्, ५१. क्षुरिकोपनिषद्, ५२. गणपत्यथर्वशीर्षोपनिषद्, ५३. गणेशपूर्वतापिन्युपनिषद् (वरदपूर्वतापिन्युपनिषद्), ५४. गणेशोत्तरतापिन्युपनिषद् (वरदोत्तरतापिन्युपनिषद्), ५५. गर्भोपनिषद्, ५६. गान्धर्वोपनिषद्, ५७. गायत्र्युपनिषद्, ५८. गायत्रीरहस्योपनिषद्, ५९. गारुडोपनिषद् (वाक्यात्मक एवं मन्त्रात्मक), ६०. गुह्यकाल्युपनिषद्, ६१. गुह्यषोढान्यासोपनिषद्, ६२. गोपालपूर्वतापिन्युपनिषद्, ६३. गोपालोत्तरतापिन्युपनिषद्, ६४. गोपीचन्दनोपनिषद्, ६५. चतुर्वेदोपनिषद्, ६६. चाक्षुषोपनिषद् (चक्षुरुपनिषद्, चक्षूरोगोपनिषद्, नेत्रोपनिषद्), ६७. चित्त्युपनिषद्, ६८. छागलेयोपनिषद्, ६९. छान्दोग्योपनिषद्, ७०. जाबालदर्शनोपनिषद्, ७१. जाबालोपनिषद्, ७२. जाबाल्युपनिषद्, ७३. तारसारोपनिषद्, ७४. तारोपनिषद्, ७५. तुरीयातीतो–

पनिषद् (तीताबधूतो.), ७६. तुरीयातीतोपनिषद्, ७७. तुलस्युपनिषद्, ७८. तेजोबिन्दूपनिषद्, ७९. तैत्तिरीयोपनिषद्, ८०. त्रिपाद्विभूति-महानारायणोपनिषद्, ८१. त्रिपुरातापिन्युपनिषद्, ८२. त्रिपुरोपनिषद्, ८३. त्रिपुरामहोपनिषद्, ८४. त्रिशिखिब्रह्मणोपनिषद्, ८५. त्रिसुपर्णो-पनिषद्, ८६. दक्षिणामूर्त्युपनिषद्, ८७. दत्तात्रेयोपनिषद्, ८८. दंत्तोपनिषद्, ८९. दुर्वासोपनिषद्, ९०. (१) देव्युपनिषद् (पद्यात्मक एवं मन्त्रात्मक) (२) देव्युपनिषद् (शिवरहस्यान्तर्गत-अनुपलब्ध), ९१. द्वयोपनिषद्, ९२. ध्यानबिन्दूपनिषद्, ९३. नादबिन्दूपनिषद्, ९४. नारदपरिव्राजको-पनिषद्, ९५. नारदोपनिषद्, ९६. नारायणपूर्वतापिन्युपनिषद्, ९७. नारायणोत्तरतापिन्युपनिषद्, ९८. नारायणोपनिषद् (नारायणाथर्वशीर्ष), ९९. निरालम्बोपनिषद्, १००. निरुक्तोपनिषद्, १०१. निर्वाणोपनिषद्, १०२. नीलरुद्रोपनिषद्, १०३. नृसिंहपूर्वतापिन्युपनिषद्, १०४. नृसिंहषट्चक्रोपनिषद्, १०५. नृसिंहोत्तरतापिन्युपनिषद्, १०६. पञ्चब्रह्मोपनिषद्, १०७. परब्रह्मोपनिषद्, १०८. परमहंस-परिव्राजकोपनिषद्, १०९. परमहंसोपनिषद्, ११०. पारमात्मिकोपनिषद्, १११. पारायणोपनिषद्, ११२. पाशुपतब्रह्मोपनिषद्, ११३. पिण्डोपनिषद्, ११४. पीताम्बरोपनिषद्, ११५. पुरुषसूक्तोपनिषद्, ११६. पैङ्गलोपनिषद्, ११७. प्रणवोपनिषद् (पद्यात्मक), ११८. प्राणबोपनिषद् (वाक्यात्मक), ११९. प्रश्नानेपनिषद्, १२०. प्राणाग्निहोत्रोपनिषद्, १२१. बटुकोपनिषद्, १२२. बह्वृचोपनिषद्, १२३. बाष्कलमन्त्रोपनिषद्, १२४. विल्वोपनिषद् (पद्यात्मक), १२५. विल्वोपनिषद् (वाक्यात्मक), १२६. बृहज्जाबा-लोपनिषद्, १२७. बृहदारण्यकोपनिषद्, १२८. ब्रह्मविद्योपनिषद्, १२९. ब्रह्मोपनिषद्, १३०. भगवद्गीतोपनिषद्, १३१. भवसंतरणोपनिषद्,

१३२. भस्म जाबालोपनिषद्, १३३. भावनोपनिषद् (कापिलोपनिषद्), १३४ भिक्षुकोपनिषद्, १३५. मठाम्नायोपनिषद्, १३६. मण्डल-ब्राह्मणोपनिषद्, १३७. मन्त्रिकोपनिषद् (चूलिकोपनिषद्), १३८. मल्लायुपनिषद्, १३९. महानारायणोपनिषद् (बृहन्नारायणोपनिषद्, उत्तरनारायणोपनिषद्), १४०. महावाक्योपनिषद्, १४१. महोपनिषद्, १४२. माण्डूक्योपनिषद्, १४३. माण्डूक्योपनिषत्कारिका (क) आगम (ख) अलातशान्ति (ग) वैतथ्य (घ) अद्वैत, १४४. मुक्तिकोपनिषद्, १४५. मुण्डकोपनिषद्,१४६. मुद्गलोपनिषद्, १४७. मृत्युलाङ्गूलोपनिषद्, १४८. मैत्र्यायण्युपनिषद्, १४९. मैत्रेय्युपनिषद्, १५०. यज्ञोपवीतोपनिषद्, १५१. याज्ञवल्क्योपनिषद्, १५२. योगकुण्डल्युपनिषद्, १५३. योगचूडा-मण्युपनिषद्, १५४. (१) योगतत्त्वोपनिषद्, १५५. (२) योगतत्त्वोपनिषद्, १५६. योगराजोपनिषद्, १५७. योगशिखोपनिषद्, १५८. योगोपनिषद्, १५९. राजश्यामलारहस्योपनिषद्, १६०. राधिकोपनिषद् (वाक्यात्मक), १६१. राधोपनिषद् (वाक्यात्मक), १६२. रामपूर्वतापिन्युपनिषद्, १६३. रामरहस्योपनिषद्, १६४. रामोत्तरतापिन्युपनिषद्, १६५. रुद्रहृदयोपनिषद्, १६६. रुद्राक्षजाबालोपनिषद्, १६७. रुद्रोपनिषद्, १६८. लक्ष्म्युपनिषद्, १६९. लाङ्गूलोपनिषद्, १७०. लिङ्गोपनिषद्, १७१. बज्रपञ्जरोपनिषद्, १७२. वज्रसूचिकोपनिषद्, १७३. वनदुर्गोपनिषद्, १७४. वराहोपनिषद्, १७५. वासुदेवोपनिषद्, १७६. विश्रामोपनिषद्, १७७. विष्णुहृदयोपनिषद्, १७८. शरभोपनिषद्, १७९. शाटय्राय-नीयोपनिषद्, १८०. शाण्डिल्योपनिषद्, १८१. शारीरकोपनिषद्, १८२. (१) शिवसङ्कल्पोपनिषद्, १८३. (२) शिवसङ्कल्पोपनिषद्, १८४. शिवोपनिषद्, १८५. शुकरहस्योपनिषद्, १८६. शौनकोपनिषद्,

१८७. श्यामोपनिषद्, १८८. श्रीकृष्णपुरुषोत्तमसिद्धान्तोपनिषद्, १८९. श्रीचक्रोपनिषद्, १९०. श्रीविद्यातारकोपनिषद्, १९१. श्रीसूक्तम्, १९२. श्वेताश्वतरोपनिषद्, १९३. षोढोपनिषद्, १९४. सङ्कर्षणोपनिषद्, १९५. सदानन्दोपनिषद्, १९६. सन्ध्योपनिषद्, १९७. संन्यासोपनिषद् (अध्यायात्मक), १९८. संन्यासोपनिषद् (वाक्यात्मक), १९९. सरस्वती–रहस्योपनिषद्, २००. सर्वसारोपनिषद् (सर्वोप.), २०१. स ह वै उपनिषद्, २०२. संहितोपनिषद्, २०३. सामरहस्योपनिषद्, २०४. सावित्र्युपनिषद्, २०५. सिद्धान्तविठ्ठलोपनिषद्, २०६. सिद्धान्तशिखोपनिषद्, २०७. सिद्धान्तसारोपनिषद्, २०८. सीतोपनिषद्, २०९. सुदर्शनोपनिषद्, २१०. सुबालोपनिषद्, २११. सुमुख्युपनिषद्, २१२. सूर्यतापिन्युपनिषद्, २१३. सूर्योपनिषद्, २१४. सौभाग्यलक्ष्म्युपनिषद्, २१५. स्कन्दोपनिषद्, २१६. स्वसंवेद्योपनिषद्, २१७. हयग्रीवोपनिषद्, २१८. हंसषोढोपनिषद्, २१९. हंसोपनिषद्, २२०. हेरम्बोपनिषद् ।

यी माथि उल्लेख भएका उपनिषद्हरूबाट मात्रै पनि उपनिषद्हरूको सङ्ख्या थाहा हुनसक्तैन । वेदका मन्त्रभागका जति संहिताहरू हुन्छन्, त्यति नै सङ्ख्यामा ब्राह्मण, आरण्यक सरह नै उपनिषद्हरू पनि हुन्छन् । वेदको सङ्ख्याको सम्बन्धमा *'अनन्ता वै वेदाः'* भनेर शास्त्रले भनेको छ । अहिलेसम्म प्राप्त प्रमाणका आधारमा वेदका शाखाहरूको सङ्ख्या महाभाष्यमा ११३१, स्कन्द पुराणामा ११३७ र मुक्तिकोपनिषद्मा ११८० उल्लेख भएको पाइन्छ । वेदका शाखाहरूको लोप भएझैँ उपनिषद्हरू पनि लुप्त भएका हुनसक्तछन् । *'नैव वेदाः प्रलीयन्ते महाप्रलयेऽपि ।'* भनेर मेधातिथिले उल्लेख गरेको भए तापनि हाल उपलब्ध नहुनुलाई युगधर्म वा विडम्बना नै हो भन्नुपर्दछ ।

उपर्युल्लिखित अल्लोपनिषद्बाहेक प्रायः सबै उपनिषद्हरू संस्कृत भाषामा लेखिएका छन्। प्रायः यी वेदका शिरोभाग हुन् र ज्ञानका भण्डार हुन्। तर केही उपनिषद्हरू पछि लेखिएका वा लेखाइएका पनि देखिन्छन्। उदाहरणका लागि माथि २२० उपनिषद्हरूमध्ये १५ औँ सङ्ख्यामा परेको अल्लोपनिषद्लाई लिन सकिन्छ। उपनिषद्को अत्यन्त महत्त्व देखेर मुगलशासनको समयमा अर्थात् मुगलसम्राट् अकबरका पालामा कुनै चाटुकार विद्वान्ले 'अल्लोपनिषद्' नामक अरबी र संस्कृत भाषामा सानू उपनिषद् लेखेका थिए। त्यसपछि उपनिषद्को महत्त्व न्यून गर्न म्याक्समूलरले एउटा 'मक्स्योपनिषद्' नामक उपनिषद् लेखेर 'सरस्वती' नामक मासिक पत्रिकामा छपाएका पनि थिए। अरू पनि यस्ता उपनिषद्हरू लेखिएका वा प्रकाशित भएका हुनसक्तछन्। यसप्रकारका कुकृत्यहरूबाट पनि उपनिषद्को शाश्वत महत्त्व एवं महिमामा कुनै फरक परेको देखिँदैन, बरू दिनानुदिन बढिरहेकै देखिन्छ।

हाम्रो पूर्वीय संसारमा मोक्षविद्यामा उपनिषद् शास्त्रको महत्त्व अनादिकालदेखि अहिलेसम्म अक्षुण्णरूपमा रहिआएको छ। यस शास्त्रको प्रभाव पश्चिमी संसारमा पनि पहिलेदेखि नै रहेको पश्चिमी दर्शनको अनुशीलनबाट थाहा हुन्छ। ईशाभन्दा धेरै पहिले ग्रीसमा जन्मेका महान् दार्शनिक सोक्रेटस्ले केनोपनिषद्को भाषा बोलेका थिए। केनोपनिषद्ले भनेको छ – *'यस्यामतं तस्य मतं मतं यस्य न वेद सः। अविज्ञातं विजानतां विज्ञातमविजानताम् ॥'* (केनोपनिषद् २।३) अर्थात् जुन महापुरुषले परब्रह्म परमेश्वरको साक्षात्कार गर्दछ उसले परब्रह्मलाई जानेँ भन्दैन। तर जसले

जानेँ भन्दछ त्यसले परब्रह्मलाई जानेको हुँदैन । यही कुरा सोक्रेटस्ले पनि आफ्नू जीवनको अन्तिम समयमा आफ्ना शिष्यहरूका प्रश्नहरूको उत्तर दिँदै भनेका थिए – 'I am wiser than my contemporaries because I alone know that I know nothing.'

त्यसपछि पनि पश्चिमी दार्शनिकहरूमध्येमा गोल्डस्टार, रोनाल्ड, डायसन, निक्सन, विल्सन, शोपेनहर आदि धेरै दार्शनिकहरूले उपनिषद्को अध्ययन, मनन र अनुसन्धान समेत गरेका थिए। उनीहरूले उपनिषद्को मुक्तकण्ठले प्रशंसा पनि गरेका थिए । प्रशंसकहरूमध्येमा जर्मनदार्शनिक शोपेनहर प्रमुख देखिन्छन्। उनले आफ्नू किताबमा उपनिषद्को गुणगान गर्दै लेखेका छन् – 'In the whole world, there is no study to elevating as that of the upanishadas. It has been the solace of my life and it will be the solace of beath.' अर्थात् यस सम्पूर्ण विश्वमा उपनिषद्हरू सरह जीवनलाई माथि उठाउँन सक्ने अरू कुनै पनि अध्ययनको विषय छैन। यसकै अध्ययनबाट मैले जीवनमा शान्ति प्राप्त गरेको छु र यसबाट नै मलाई मृत्युमा पनि शान्ति प्राप्त हुनेछ।

ईशावास्योपनिषद् आदि केही महत्त्वपूर्ण उपनिषद्हरू वेदका शिरोभाग र अपौरुषेय भएको कुरा निर्विवाद छ। यिनै उपनिषद्हरूमध्येका ११ उपनिषद्हरूमा भगवत्पाद आचार्य शङ्करले भाष्य लेख्नुभएको छ र तिनको मात्रै यस उपनिषत्सारमा सङ्क्षिप्त चर्चा गरिएको छ।

२०१७।१८ सालमा गुरुवर गोपालनिधि तिवारीज्यूसँग अद्वैत

( उपनिषत्सार )

वेदान्तको अध्ययन गर्दा मैले ईश, केन, कठ, प्रश्न, मुण्डक, माण्डूक्य, तैत्तिरीय, ऐतरेय, श्वेताश्वतर, छान्दोग्य र बृहदारण्यकोपनिषद् सामान्यरूपमा पढेको थिएँ । तर अल्लारेपन, उपनिषद्को महत्त्व थाहा नहुनु, पढाइमा ध्यान नदिनु र पढाइको जग कमजोर हुनु आदि विविध कारणहरूले गर्दा अपेक्षित ज्ञान आर्जन गर्न मैले सकेको थिइन । तीन दशकको लामू अन्तरालपछि मैले फेरि आफूलाई विद्यार्थीकै रूपमा पुऱ्याएर विद्वान् गुरुहरूसँग ती उपनिषद्हरू अध्ययन गर्नथालेपछि मैले यत्किञ्चित् बुझ्न थालेको छु । त्यही अध्ययन, श्रवण, मनन र लेखनको परिणाम नै यो सङ्क्षिप्त उपनिषत्सार हो । यो सार जिज्ञासु पाठकहरूलाई उपयोगी नै होला भन्ने मैले ठानेको छु । किनभने संस्कृत भाषाको ज्ञान नभएका र समय दिन नसक्ने पाठकहरूका लागि उपनिषद्हरूमा प्रवेश गरेर पार पाउँन मुश्किल हुने देखिन्छ । यसैकारण पनि मैले यसको लेखनमा बढी ध्यान दिएको हुँ । श्रद्धेय गुरु प्रा.डा. दीर्घराज घिमिरेज्यूबाट प्राप्त उत्साहप्रद आशंसाका लागि हार्दिक कृतज्ञता ज्ञापन गर्दछु । सम्पादन गर्न सहयोग गर्नुहुने आदरणीय दाजु विश्वनाथ रूपाखेती र कम्प्युटरकर्मी खड्गप्रसाद खनाललाई पनि म धन्यवाद अर्पण गर्दछु । अस्तु । ॐ ब्रह्मार्पणमस्तु ।

२०६७ पुत्रदाएकादशी
पूजनीया माताज्यूको पुण्यतिथि

विनीत
शारदकुमार घिमिरे

# विषयसूची

ॐ

तत्सद्ब्रह्मणे नमः

# ईशावास्योपनिषद्

ईशिता सर्वभूतानां सर्वभूतमयश्चयः ।
ईशावास्येन सम्बोध्यमीश्वरं तं नमाम्यहम् ॥

उपनिषद्हरूमा ईशावास्योपनिषद्लाई प्रथम उपनिषद् मानिएको छ। यो उपनिषद् शुक्लयजुर्वेदको अन्तिम चालीसौँ अध्याय हो। यजुर्वेदमा ३९ औँ अध्यायसम्म कर्मकाण्डसम्बन्धी मन्त्रहरू छन्। यसको ४० औँ अध्यायमा ब्रह्मज्ञानको निरूपण गरिएको छ।

श्रीशङ्कराचार्यको सम्बन्धभाष्यपछि यो उपनिषद् ॐ ईशाबाट शुरु भएको छ। जस्तै –

ॐ ईशा वास्यमिदं सर्वं यत्किञ्च जगत्यां जगत् ।
तेन त्यक्तेन भुञ्जीथा मा गृधः कस्यस्विद्धनम् ॥

शब्दार्थ :– जगत्याम् – सम्पूर्ण ब्रह्माण्डमा, यत् किञ्च– जे जति पनि, जगत् – जड र चेतनस्वरूप जगत् छ, इदम् – यो, सर्वम् – सबै, ईशा – ईश्वरबाट, वास्यम् – व्याप्त भएर रहेको छ । तेन – त्यस परमात्मा नै सबैतिर छ भन्ने ठानेर, त्यक्तेन– त्यागपूर्वक, भुञ्जीथा – भोग गर्ने गर । मा गृध – यस सांसारिक भोगमा हिरिक्क न होऊ। धनम् – सांसारिक धनसम्पत्ति,

कस्यस्वित् – कसैको पनि होइन, सबै मिथ्या हो ।

यस मन्त्रमा सर्वत्र भगवद्दृष्टिको वर्णन गरिएको छ । जगत्मा जे जति स्थावर र जङ्गम संसार छ, त्यो सबै नै परमात्माबाट व्याप्त छ । अर्थात् यो मिथ्याभूत चराचर ईश्वरद्वारा आच्छादनीय छ । ईश्वर नै चराचर जगत्का आत्मा हुन् भन्ने भावनाले युक्त भएर त्यागपूर्वक धनको उपभोग गर्नुपर्दछ । अरू कसैका धनको लोभ गर्नु हुँदैन ।

आत्मज्ञानीले पुत्रैषणा, वित्तैषणा र लोकैषणा समेतका एषणात्रयलाई त्याग गरेर आत्माको रक्षा गर्नु पर्छ भन्ने 'ईशा वास्यमिदम्' भन्ने मन्त्रको तात्पर्य हो । तल आउने 'कुर्वन्नेवेह' भन्ने मन्त्रले आत्मतत्त्वलाई ग्रहण गर्न नसक्ने अनात्मज्ञ पुरुषलाई लक्ष्य गर्दै भनेको छ । जस्तै –

कुर्वन्नेवेह कर्माणि जिजिविषेच्छतं समाः ।
एवं त्वयि नान्यथेतोऽस्ति न कर्म लिप्यते नरे ॥

शब्दार्थ, कर्माणि – शास्त्रीय कर्महरू, कुर्वन् – गर्दै, एव – निश्चय नै, इह – यस जगत्मा, शतं समाः – सय वर्षसम्म, जिजीविषेत् – बाँच्ने इच्छा गर्नु पर्दछ । एवम् – यसप्रकारको त्यागको भावनाले, कर्म – गरिने कर्म, त्वयि – तिमी, नरे – मान्छेमा, न लिप्यते – टाँसिने छैन । इतः – योभन्दा, अन्यथा – अर्को बाटो, न अस्ति – छैन ।

यस लोकमा अग्निहोत्रादि कर्म गर्दै सय वर्ष बाँच्ने इच्छा मान्छेले गर्नुपर्दछ । यसरी मान्छे हुँ भन्ने अभिमान राख्ने भएका तिम्रालागि योभन्दा अर्को बाटो छैन । जसबाट तिमीमा अशुभ

कर्महरू आइनलागून् ।

अज्ञानी पुरुषको निन्दा गर्दै उपनिषद्को अर्को मन्त्रले यस्तो कुरा भनेको छ । जस्तै –

असुर्या नाम ते लोका अन्धेन तमसावृताः ।
तांस्ते प्रेत्याभिगच्छन्ति ये के चात्महनो जनाः ॥

शब्दार्थ, असुर्या नाम – असुरहरूका नामबाट प्रसिद्ध भएका, लोकाः – नाना प्रकारका योनिहरू र नरकादि जुन लोकहरू छन्, ते – ती सबै, अन्धेन तमसा – अज्ञान र क्लेशरूपी घोर अन्धकारद्वारा, आवृताः – ढाकिएका छन् । ये के च – जुन कुनै पनि, आत्महन – आत्म हत्या गर्ने, जनाः – मान्छेहरू छन्, ते – तिनीहरू, प्रेत्य – मरेपछि, तान् – तिनै, भयङ्कर लोकहरूमा, अभिगच्छन्ति – बारम्बार जानेगर्दछन् ।

अद्वय परमात्मभावका अपेक्षाबाट विचार गर्ने हो भने देवताहरू पनि असुर नै हुन् । जहाँ कर्मफलको भोग गरिन्छ, ती लोकहरू सबै नै अज्ञान र अन्धकारयुक्त हुन् । अज्ञानीहरू आफ्नै स्वयंसिद्ध आत्मालाई नचिनीकनै अर्थात् ब्रह्मज्ञान नगरीकनै मर्दछन् भने त्यस्ता अज्ञानीहरू मरेपछि तिनै भयङ्कर नरकादि लोकहरूमा जान्छन् ।

माथिको मन्त्रमा उल्लेख भए अनुसार आत्मघातीहरू जन्ममरणारूप अन्धकारपूर्ण संसारमा घुमिरहन्छन्भने यसको विपरीत आत्मज्ञानीहरू मुक्त भएर जान्छन् । यही कुरा देखाउँदै अर्को मन्त्रले भन्दछ । जस्तै –

अनेजदेकं मनसो जवीयो नैनद्देवा आप्नुवन्पूर्वमर्षत् ।
तद्धावतोऽन्यानत्येति तिष्ठत्तस्मिन्नपो मातरिश्वा दधाति ॥

शब्दार्थ, ती परमात्मा, अनेजत् – चल्दैनन्, एकम् – एकमात्र छन् । मनसः – मनभन्दा पनि, जवीय – तीव्र गतियुक्त छन् । पूर्वम्– सबैभन्दा पहिलेका ती, अर्षत् – सबैलाई जान्दछन् । एनत्– यिनलाई, देवाः – देवताहरूले पनि, न आप्नुवन् – प्राप्त गर्न सकेनन् । तत् – ती परमात्मा, अन्यान् – अरू, धावतः – कुद्नेहरूभन्दा, तिष्ठत् – बसेर नै, अत्येति – उछिन्दछन् । तस्मिन्– उनै परमात्माको आधार पाएर नै मातरिश्वा – वायु आदि देवताहरू, अपः – पानी वर्षाउने आदि कर्महरू, दधाति – सम्पन्न गर्दछन् ।

ती परमात्मा आफ्नू स्वरूपबाट कहिल्यै विचलित हुँदैनन् । उनी एक छन् र मनभन्दा पनि तीव्र गतियुक्त छन् । उनी सबैभन्दा आदि र अनन्त पनि हुन् । उनी अचल भएर पनि गतियुक्त सबैलाई अतिक्रमण गर्न सक्तछन् । ती परमात्माकै सत्ता पाएर वायु, सूर्य, अग्नि, मेघ आदि देवताहरू श्वसन, ज्वलन, प्रकाशन र जलवर्षण आदि कामहरू गर्न प्रवृत्त हुन्छन् । उनकै प्रेरणाले प्राणीहरूले गर्ने वृत्तिरूप कर्महरूको सम्बन्धित अधिष्ठातृ देवताहरूले विभाजन गर्दछन् । सबै प्राणीहरू सांसारिक आफ्–आफ्ना कर्महरूमा प्रवृत्त हुने गर्दछन् ।

माथिको मन्त्रले भनेको कुरालाई नै दोहोऱ्याउँदै फेरि अर्को मन्त्रले पनि त्यही कुरा भनेको छ । किनभने ‘न मन्त्राणां जामितास्ति’ मन्त्रमा आलस्य रहँदैन भन्ने शास्त्रीय सिद्धान्त भएको हुँदा ज्ञानको कुरा दोहोऱ्याइ तेहेऱ्याइ वेदमन्त्रहरू भन्ने गर्दछन् । जस्तै –

तदेजति तन्नैजति तद्दूरे तद्वन्तिके ।
तदन्तरस्य सर्वस्य तदु सर्वस्यास्य बाह्यतः ।।

शब्दार्थ, तत् – ती परमात्मा, एजति – हिँड्दछन्, तत् – ती परमात्मा, न एजति – हिँड्दैनन्, तत् – ती परमात्मा, दूरे – टाढाभन्दा अति टाढा छन् । तत् – ती परमात्मा, उ अन्तिके – अत्यन्त नजिक छन् । तत् – ती परमात्मा, अस्य – यस, सर्वस्य– सम्पूर्ण जगत्का, अन्तः – भित्र परिपूर्ण छन् । तत् – ती परमात्मा, अस्य – यस, सर्वस्य – समस्त संसारका, उ बाह्यतः – बाहिर पनि छन् ।

ती परमात्मा हिँड्दछन् । ती परमात्मा हिँड्दैनन् । ती परमात्मा टाढा छन् र अत्यन्त नजिक पनि छन् । ती परमात्मा सबैका भित्र छन् र ती सबैका बाहिर पनि छन् ।

अभेददर्शी ब्रह्मज्ञानीको स्थिति कस्तो हुन्छ भन्ने सम्बन्धमा उपनिषद् भन्दछ –

**यस्तु सर्वाणि भूतान्यात्मन्येवानुपश्यति ।**
**सर्वभूतेषु चात्मानं ततो न विजुगुप्सते ॥**

शब्दार्थ, तु – परन्तु, यः – जुन मान्छे, सर्वाणि – सम्पूर्ण, भूतानि – प्राणीहरूलाई, आत्मनि एव – आत्मामा नै, अनुपश्यति– निरन्तर देख्तछ, च – र, सर्वभूतेषु – सम्पूर्ण प्राणीहरूमा, आत्मानम् – आत्मालाई देख्तछ । ततः – त्यसपछि ती ब्रह्मज्ञानी कसैलाई पनि, न विजुगुप्सते – घृणा गर्दैनन् ।

जुन ब्रह्मज्ञानी सम्पूर्ण भूतप्राणीहरूलाई आफ्नै आत्मामा देख्तछन् र सम्पूर्ण भूतप्राणीमा पनि आफ्नै आत्मा नै देख्तछन् ती ब्रह्मज्ञानी सर्वात्म्यदर्शनका कारण कसैसँग पनि द्वेष र घृणा गर्दैनन् । अर्को मन्त्रले पनि सोही कुराको समर्थन गर्दै भनेको छ । जस्तै –

**यस्मिन्सर्वाणि भूतान्यात्मैवाभूद्विजानतः ।**
**तत्र को मोह कः शोक एकत्वमनुपश्यतः ॥**

शब्दार्थ, यस्मिन् – जुन समयमा, विजानतः – महापुरुष ब्रह्मज्ञानीका अनुभवमा, सर्वाणि भूतानि – सम्पूर्ण प्राणीहरू एउटै, आत्मा – परमात्मस्वरूप, एव – नै, अभूत् – भइसकेका छन् भने, तत्र – त्यस अवस्थामा, एकत्वम् – एकमात्र परमात्मालाई, अनुपश्यतः – निरन्तर देख्न थालेपछि, कः – कुन, मोहः – मोह हो ? कः – कुन, शोकः– शोक हो ? अर्थात् मोह र शोकहरूले कहिल्यै पनि ब्रह्मज्ञानीलाई छुँदैनन् ।

जुन बेला ज्ञानी पुरुषका लागि सम्पूर्ण भूतप्राणीहरू आत्मा नै भइसकेका हुन्छन् र सबैमा एकमात्र आत्मामात्रै देख्नथाल्दछन् । त्यस्ता एकत्वदर्शी विद्वान्लाई मोह र शोक हुँदैन । यस मन्त्रमा के मोह र के शोक भनेर यसरी अविद्याका कार्यस्वरूप मोह र शोकलाई आक्षेपरूप असम्भवता देखाएर कारणसमेत संसारको अत्यन्त उच्छेद प्रदर्शन गरिएको छ ।

उपर्युक्त मन्त्रले जुन आत्माको वर्णन गरेको छ, त्यो आत्मा आफ्नो स्वरूपबाट कस्तो लक्षणले युक्त छ भन्ने सम्बन्धमा अग्रिम मन्त्रले भन्दछ । जस्तै –

**स पर्यगाच्छुक्रमकायमव्रवणमस्नाविरंशुद्धमपापविद्धिम् ।**
**कविर्मनीषी परिभूः स्वयम्भूर्याथातथ्यतोऽर्थान्**
**व्यदधाच्छाश्वतीभ्यः समाभ्यः ॥**

अर्थात् त्यो आत्मा सर्वगत, शुद्ध, अशरीरी, अक्षतः, स्नायुले

रहित, निर्मल, अपापहत, सर्वद्रष्टा, सर्वज्ञ, सर्वोत्कृष्ट र स्वयम्भू छ। त्यसै आत्माले नित्यसिद्ध संवत्सर नामक प्रजापतिका लागि यथायोग्य रीतिले कर्तव्य र पदार्थहरूको व्यवस्था गरेको थियो।

यस ईशावास्योपनिषद्को ९ औँ मन्त्रले जुन कर्मनिष्ठ कर्मठ मानिसहरू जीवनभरि नै कर्म गर्दै जीवित रहन चाहन्छन्। त्यस्ता कर्मीहरूको गतिको वर्णन गर्दै मन्त्र भन्दछ –

अन्धन्तमः प्रविशन्ति येऽविद्यामुपासते।
ततो भूय इव ते तमो य उ विद्यायां रताः॥

शब्दार्थ, ये – जुन मान्छेहरू, अविद्याम् – सकाम कर्मरूपी अविद्याको, उपासते – उपासना गर्दछन्, ते – ती मान्छेहरू, अन्धम् – अज्ञानरूप, तमः – घोर अन्धकारमा, प्रविशन्ति – प्रवेश गर्दछन्। त्यसैगरेर, ये – जुन मान्छेहरू, विद्यायाम् – विद्या अर्थात् उपासनामा, रताः – लाग्दछन्, ते – ती मान्छेहरू, ततः – कर्मीहरू जाने लोकभन्दा पनि, उ भूय इव – मानौँ अझै अन्धकारयुक्त, तमः – अँध्यारो लोकमा प्रवेश गर्दछन्।

जुन कर्मठहरू अविद्या अर्थात् कर्मको उपासना गर्दछन् त्यस्ता मान्छेहरू अविद्यारूप अन्धकारमा प्रवेश गर्दछन्। जुन मान्छेहरू विहित कर्मलाई छोडेर विद्या किंवा केवल देवताको उपासनामा नै मस्त वा सीमित रहन्छन्, त्यस्ता मान्छेहरू त्यसभन्दा पनि अर्थात् कर्मीहरू जानेभन्दा पनि अझै घोर अन्धकारमा प्रवेश गर्दछन्।

कर्म र उपासना अर्थात् समर्थ कर्म र केवल देवता ज्ञानबाट के कस्तो फल प्राप्त हुन्छ भन्ने सम्बन्धमा तलको मन्त्रले भन्दछ। जस्तै–

अन्यदेवाहुर्विद्ययान्यदाहुरविद्यया ।
इति शुश्रुम धीराणां ये नस्तद्विचचक्षिरे ॥

अर्थात् अघिल्लो मन्त्रमा विद्या वा देवताज्ञानबाट प्राप्त हुने फल र अविद्या वा कर्मबाट प्राप्त हुने फलका बारेमा बताइसकिएको छ। यसरी भिन्नाभिन्नै प्राप्त हुने कर्मफलका बारेमा हामीहरूले बुद्धिमान् पुरुषहरूबाट सुनेका थियौँ। जसले हामीहरूका लागि तिनको व्याख्या गरेका थिए। त्यसै कुरालाई उक्त कुराको विपरीत समुच्चयका रूपमा गरिने कर्मफलको बारेमा अगाडिको ११ औँ मन्त्रले यसरी व्याख्या गरेको छ। जस्तै –

विद्यां चाविद्यां च यस्तद्वेदोभयं सह ।
अविद्यया मृत्युं तीर्त्वा विद्ययाऽमृतमश्नुते ॥

अर्थात् विद्या किंवा देवताज्ञान र अविद्या अर्थात् कर्मसमेत दुवैलाई साथसाथै एकै व्यक्तिबाट अनुष्ठान गर्न योग्य हो भनेर जुन व्यक्तिले जान्दछ, त्यस व्यक्तिले अविद्या अर्थात् अग्निहोत्रादि कर्मबाट मृत्युलाई पार गर्दछ। त्यसपछि विद्या देवताज्ञानबाट अमृत अर्थात् देवत्वभाव प्राप्त गर्दछ। यहाँ आपेक्षिकरूपमा देवत्वभाव प्राप्त हुनुलाई नै अमरत्व प्राप्त हुने भनिएकोछ।

यसपछि व्यक्त र अव्यक्त उपासनाहरूलाई समुच्चय गर्ने इच्छाले यो उपनिषद् अरू उपासनाहरूको निन्दा गर्दै भन्दछ। जस्तै –

अन्धतमः प्रविशन्ति येऽसम्भूतिमुपासते ।
ततो भूय इव ते तमो य उ सम्भूत्यांरताः ॥

शब्दार्थ, ये – जुन मान्छेहरू, असम्भूतिम् – अव्यक्त प्रकृतिको

उपासते – उपासना गर्दछन्, ते – ती मान्छेहरू, अन्धं तमः – अज्ञानरूप अन्धकारमा, प्रविशन्ति – प्रवेश गर्दछन् । ये– जुन मान्छेहरू, सम्भूत्याम्– कार्य ब्रह्ममा, रताः – रत छन्, ते – ती मान्छेहरू, उ – पनि, भूय इव– धेरै जसो, तमः – अन्धकारमा प्रवेश गर्दछन् ।

जुन मानिसहरू असम्भूति अर्थात् प्रकृति वा कारण अथवा अविद्याको उपासना गर्दछन्, ती घोर अन्धकारमा पर्दछन् । यसैलाई अर्को शैलीमा भन्ने हो भने, कामना र कर्मको बीज भएको अज्ञानात्मिका अविद्याको जसले उपासना गर्दछन्, तदनुरूप नै अज्ञानरूप घोर अन्धकारमा तिनीहरू पस्तछन् । अर्कातिर जुन मान्छेहरू सम्भूति अर्थात् हिरण्यगर्भ नामक कार्यब्रह्ममा रत छन् भने तिनीहरू ता त्यसभन्दा पनि अत्यन्त अन्धकारमा प्रवेश गर्दछन् ।

माथि उल्लेख गरिएका दुवैथरी उपासनाहरूको समुच्चय कारणरूप जुन ती दुवैथरी फलहरूको भेद छ, यसलाई व्यक्त र अव्यक्त उपासनाको फल पनि भनिन्छ । तिनको वर्णन गर्दै यसपछि ईशावास्योपनिषद्को तेह्रौँ मन्त्रले भनेको छ । जस्तै –

अन्यदेवाहुः सम्भवादन्यदाहुरसम्भवात् ।
इति शुश्रुम धीराणां ये नस्तदविचचक्षिरे ॥

शब्दार्थ, सम्भवात् – अविनाशी ब्रह्म अर्थात् कार्यब्रह्मको उपासनाबाट, अन्यदेव – अर्कै फल, आहुः – बताइएको छ । असम्भवात् – अव्यक्तोपासनाबाट, अन्यत् – अर्कै नै फल, आहुः– भनिएको छ । इति– यसप्रकार, धीराणाम् – बुद्धिमान् पुरुषहरूको वचन, शुश्रुमः – सुनेका थियौँ । ये – जसले, नः – हामीहरूलाई, तत् – त्यस विषयमा, विचचक्षिरे – व्याख्या गरेर याथातथ्य कुरा बुझाएका थिए ।

सम्भूति अर्थात् कार्यब्रह्मको उपासनाबाट प्राप्त हुने भएको अणिमादि गरिएको अर्कै फल बताइएको छ । त्यसैगरेर असम्भूति अर्थात् अव्याकृत प्रकृतिको उपासनाबाट अरू नै फल भनिएको छ । यस्तो कुरा हामीहरूले बुद्धिमान् पुरुषहरूबाट सुनेका छौं । जुन कुरा हामीहरूलाई उनीहरूले व्याख्या गरेका थिए ।

यसरी सम्भूति र असम्भूतिको उपासनाहरूको समुच्चय देखाइएकोछ । यसका अतिरिक्त यो पुरुषार्थमूलक भएको हुँदा पनि तिनको समुच्चय हुनु समीचीन छ भन्दै तल आउने मन्त्रले पनि भन्दछ –

**सम्भूतिं च विनाशं च  यस्तद्वेदोभयंसह ।**
**विनाशेन मृत्युं तीर्त्वा सम्भूत्याऽमृतमश्नुते ॥**

जुन मान्छे सम्भूतिम् अर्थात् अविनाशी कार्यब्रह्मलाई र विनाशम्– विनाशशील देवादिलाई सँगसँगै जान्दछ, त्यो मान्छे कार्यब्रह्मको उपासनाबाट मृत्युलाई पार गर्दछभने अर्कोबाट प्रकृतिलयरूप अमरत्व प्राप्त गर्दछ ।

शास्त्रले भनेको प्रकृतिलयसम्म समस्त फल अर्थात् गाई, भूमि, सुन, चाँदि आदि, मानुषसम्पत्ति र दैवीसम्पत्तिबाट समेत मानिस सम्पन्न हुन्छ । यहाँसम्म नै संसारको गति रहन्छ । त्यसभन्दा अगाडिको भने सम्पूर्ण एषणाहरूको त्यागरूप संन्यासको फल सर्वात्मभाव हो ।

यसरी यहाँ प्रवृत्ति र निवृत्तिरूप दुई प्रकारका वेदका अर्थहरूको उल्लेख गरियो । यिनमा जुन पुरुष आजीवन कर्म गर्दै बाँच्न चाहन्छन्, तिनले अपरब्रह्मविषयक विद्याका साथ बाँच्नुपर्दछ ।

अब अमृतत्व कुन मार्गबाट प्राप्त हुन्छ भन्ने सम्बन्धमा वर्णन गरिन्छ। जुन सत्य हो, त्यही नै आदित्य हो। यस आदित्य मण्डलमा जुन पुरुष छ र जुन पुरुष दाहिँने आँखामा छ, त्यो सत्य हो। जसले त्यस ब्रह्मको उपासना गर्दछ र शास्त्रोक्त कर्म गर्दछ, त्यसले अन्तकाल आउने बेलामा तलको मन्त्रद्वारा आत्मप्राप्तिको द्वारको याचना गर्दछ। जस्तै–

हिरण्मयेन पात्रेण सत्यस्यापिहितं मुखम्।
तत्त्वं पूषन्नपावृणु सत्यधर्माय दृष्टये॥

शब्दार्थ, पूषन् – सबैको भरणपोषण गर्ने भएका हे भगवन्! सत्यस्य – सत्यस्वरूप तपाईंको, मुखम् – मुखलाई हिरण्मयेन – ज्योतिर्मय, पात्रेण – भाँडाले, अपिहितम् – छोपेको छ, सत्यधर्माय– आत्मज्ञानमा लागेको मेरो, दृष्टये – आफ्नै आत्माको दर्शनका निमित्त, तत् – त्यस ढकनी वा बिर्कोलाई, त्वम् – तपाईं, अपावृणु– हटाइदिनुहोस्।

आदित्य मण्डलमा रहेको सत्य अर्थात् ब्रह्मको मुख हिरण्मय अर्थात् ज्योतिर्मय पात्रले ढाकिएको छ। हे पूषन्! सत्यको उपासना गरेको कारण नै जसको सत्य नै धर्म भएको छ, त्यस्तो यथार्थ धर्मको अनुष्ठान गर्ने भएको मलाई आफ्नू सत्यस्वरूप आत्माको उपलब्धिका लागि त्यस बिर्कोलाई तपाईं उघारिदिनुहोस्। आत्मज्ञानका लागि मेरो अज्ञान हटाइदिनुहोस्।

पूषन्नेकर्षे यम सूर्य प्राजापत्य व्यूह रश्मीन् समूह।
तेजो यत्ते रूपं कल्याणतमं तत्ते पश्यामि योऽसावसौ पुरुषः सोऽहमस्मि॥

शब्दार्थ, पूषन् – हे पोषणस्वरूप भगवन् ! एकर्षे – हे एक्लै हिँड्ने भएका भगवन् ! यम – हे सर्वनियन्त्रक भगवन् ! सूर्य – हे किरण, प्राण र रसलाई स्वीकार गर्ने भगवन्! प्राजापत्य – प्रजापतिका प्रिय, रश्मीन् – यी रश्मिसमूहलाई व्यूह – एकत्रित गराइदिनुहोस् । तेजः – तेजलाई, समूह – आफ्नै तेजमा मिलाउनु होस् । यत् – जुन, ते – तपाईंको, कल्याणतमम् – अत्यन्त कल्याणमय, रूपम् – जाज्वल्यमान् दिव्यस्वरूप छ । तत् – त्यस, ते – तपाईंको दिव्य स्वरूपलाई, पश्यामि – देख्तछु । यः– जुन, असौ – यो सूर्यको आत्मा हो, असौ – त्यो, पुरुषः – परम पुरुष, अहम् – म, सः – त्यो अस्मि – हुँ ।

हे जगत्का पोषक पूषन् ! हे एक्लै संसारमा परिभ्रमण गर्ने एकर्षे ! हे सबैलाई नियन्त्रण गर्ने यम ! हे किरण, प्राण र रसलाई स्वीकार गर्ने भएका सूर्य ! हे प्रजापतिका छोरा प्राजापत्य ! तपाईं आफ्ना किरणहरूलाई समेट्नुहोस् । तपाईं आफ्ना पोल्ने भएका तेजपुञ्जलाई शान्त गर्नुहोस् । हे भगवन् ! तपाईंको जुन अत्यन्त कल्याणमय परम सुन्दर स्वरूप छ, त्यसलाई आत्मस्वरूप तपाईंका कृपाबाट म देख्तछु । यो जुन आदित्य मण्डलमा । रहेको पुरुष छ, त्यो नै म हुँ ।

यस ईशावास्योपनिषद्को उपान्त मन्त्रले मरणोन्मुख उपासकले गरेको प्रार्थनाको वर्णन गरेको छ । जुन यसप्रकार छ । जस्तै–

**वायुरनिलममृतमथेदं भस्मान्तं शरीरम् ।**
**ॐ क्रतो स्मर कृतं स्मर क्रतो स्मर कृतं स्मर ॥**

शब्दार्थ, अथ – यसपछि, वायुः प्राण र इन्द्रियहरू,

अमृतम् – अविनाशी, अनिलम् – समष्टिवायुतत्त्वमा, प्रविशतु – प्रवेश गरोस्, इदम् – यो, शरीरम् – स्थूल शरीर, भस्मान्तम् – खरानीमा परिणत होस् । क्रतो – हे सङ्कल्पात्मक मन ! अथवा यज्ञमय भगवन् ! स्मरः – मलाई सम्झनुहोस् । कृतम् – मैले गरेका कर्महरूलाई, स्मर – सम्झनुहोस् । यहाँ क्रतो स्मर र कृतं स्मरको पुनरुक्ति आदरका लागि हो ।

यस मन्त्रमा ॐ भनेर यहाँ उपासनाका अनुसार सत्यस्वरूप अग्निसंज्ञक ब्रह्मलाई नै अभेदरूपबाट भनिएको हो । किनभने ॐ ब्रह्मको प्रतीक हो । हे क्रतो ! हे सङ्कल्पात्मक मन ! तिमी यस समयमा मेरो जुन स्मरणीय हो, त्यसैको स्मरण गर । बाल्यावस्थादेखि लिएर यस अवस्थासम्म मैले जुन जुन कर्महरूको अनुष्ठान गरेँ, तिनै तिमी स्मरण गर । यहाँ *'क्रतो स्मर र कृतं स्मर'*को पुनरुक्ति गरिएको सम्मानका लागि गरेको देखिन्छ ।

अन्तिम मन्त्रले म्रियमाण पुरुषले अग्निसँग आफ्नू मार्गको याचना गर्दै प्रार्थना गरेको कुराको वर्णन गरेको छ –

**अग्ने नय सुपथा राये अस्मान् विश्वानि देव वयुनानि विद्वान् ।**
**युयोध्यस्मज्जुहुराणामेनो भूयिष्ठां ते नम उक्तिं विधेम ॥**

शब्दार्थ, अग्ने – हे अग्निका अधिष्ठातृ देवता ! अस्मान् – मलाई, राये – कर्मफलका लागि, सुपथा – असल मार्गबाट, नय– लैजाऊ, देव – हे देव ! विश्वानि – सम्पूर्ण, वयुनानि – कर्म वा ज्ञानहरूलाई, विद्वान् – तपाईं जान्नु हुन्छ । अस्मत् – हाम्रा, जुहुराणाम् – अत्यन्त खराब, एनः – पाप भए, युयोधि – नाश गरिदिनुहोस् । ते – तपाईंलाई, भूयिष्ठाम् – बारम्बार,

**नमउक्तिम्** – नमस्कार, **विधेम** – गर्दछौं ।

हे अग्ने ! हामीलाई कर्मफल भोगका लागि उत्तर मार्गबाट लिएर हिँड । हे देव ! तपाईं हाम्रा सबै ज्ञान र कर्महरूका जानिफकार हुनुहुन्छ । तपाईं हाम्रा सम्पूर्ण पाखण्डपूर्ण पापहरूको नाश गरिदिनुहोस् । हामीहरू तपाईंलाई बारम्बार नमस्कार गर्दछौं ।

यसरी यस ईशावास्योपनिषद्को सङ्क्षिप्त चर्चा गर्ने क्रममा केही समीक्षा पनि गर्ने धृष्टता गरेको छु । श्रीशङ्कराचार्यले भाष्य लेख्नुभएको यस ईशावास्योपनिषद्मा परेको पूषन्नेकर्षे भन्ने मन्त्र शुक्लयजुर्वेद संहितामा देखिँदैन । दुवैमा परेका मन्त्रहरू मध्येमा पनि मन्त्रहरूको क्रमसमेत फरक परेको देखिन्छ । कुनै कुनै मन्त्रमा भने पाठभेदसमेत देखिन्छ । जस्तै – संहिताको छैठौं मन्त्रको अन्तिम शब्द *'न विचिकित्सति'* हो भने सोही शब्दको ठाउँमा उपनिषद्मा *'न विजुगुप्सते'* परेको देखिन्छ । त्यसैगरेर संहिताको ११ औं मन्त्र *'सम्भूतिं च विनाशं च...'* हो भने उपनिषद्मा *'विद्यां चाविद्यां च'* भन्ने मन्त्र परेको छ । संहिताको १२ औं मन्त्र *'अन्धं तमः'* बाट शुरु भएको छ र त्यस मन्त्रको अन्त्यमा *'विद्यायां रता'* भन्ने शब्दहरू परेका छन् भने उपनिषद्को त्यसै मन्त्रमा *'सम्भूत्यां रताः'* भन्ने शब्दहरू परेका छन् । संहिताको १४ औं मन्त्र *'विद्यां चाविद्यां च'* बाट शुरु भएर *'विद्ययामृतमश्नुते'* मा टुङ्गिएको छ भने उपनिषद्मा *'सम्भूतिं च विनाशं च'* बाट शुरु भएर *'सम्भूत्याऽमृतमश्नुते'* मा पुगेर समाप्त भएको छ ।

संहिताको १५ औं मन्त्र *'वायुरनिलम्'* हो भने उपनिषद्मा *'हिरण्मयेन पात्रेण'* भन्ने परेको देखिन्छ । त्यसैगरेर संहिताको १६ औं मन्त्र *'अग्ने नय सुपथा'* छ भने उपनिषद्मा 'पूषन्नेकर्षे'

भन्ने मन्त्र परेको छ। संहितामा यो मन्त्र नै समाविष्ट भएको देखिँदैन। संहिताको *'अग्ने नय सुपथा'* भन्ने मन्त्र उपनिषद्को अन्तिम १८ औँ मन्त्रमा परेको छ। संहिताको अन्तिम १७ औँ मन्त्र *'हिरण्मयेन पात्रेण'* हो र उपनिषद्मा यो मन्त्र १५ औँ मन्त्रमा परेको छ। उपनिषद्को अन्तिम मन्त्र 'अग्ने नय सुपथा' हो। संहितामा जम्मा १७ मन्त्रहरू मात्रै छन् भने उपनिषद्मा १८ मन्त्रहरू छन्। यसरी संहितामा परेका मन्त्रहरूभन्दा उपनिषद्मा एउटा मन्त्र बढी परेको देखिन्छ। यसका अतिरिक्त मन्त्रहरूका क्रममा र शब्दावलीमा पनि पार्थक्य देखिन्छ। यसो हुनुमा काण्वशाखाको संहिता र माध्यन्दिनीयशाखाको संहिताका मन्त्रहरूमा देखिएको पाठभेदले गर्दा नै हो। आद्य जगद्गुरु श्रीशङ्कराचार्यले आफ्नू भाष्य काण्वशाखाको संहितामा रहेको उपनिषद्मा लेख्नुभएको हो। स्मरणीय के छ भने ११ उपनिषद्हरूमध्ये ईशावास्योपनिषद् र मुण्डकोपनिषद् वेदका संहिताभाग अन्तर्गत पर्दछन् भने अरू नौ उपनिषद्हरू ब्राह्मणभाग अन्तर्गत पर्दछन्। अस्तु। श्रीकृष्णार्पणमस्तु।



# केनोपनिषद्

येनेरिताः प्रवर्तन्ते प्राणिनः स्वेषु कर्मसु ।
तं वन्दे परमात्मानं स्वात्मानं सर्वदेहिनाम् ॥
यस्य पादांशुसम्भूतं विश्वं भाति चराचरम् ।
पूर्णानन्दं गुरुं वन्दे तं पूर्णानन्दविग्रहम् ॥

केनोपनिषद् सामवेदको तलवकार ब्राह्मण अन्तर्गत पर्दछ । यस उपनिषद्मा चार खण्डहरू छन् । प्रथम खण्डमा शङ्कराचार्यको लाम् सम्बन्धभाष्य आउँछ । त्यसपछि *'ॐ केनेषितं पतति प्रेषितं मनः'* भन्ने प्रथम मन्त्रबाट उपनिषद्को प्रथम खण्ड शुरु भएर *'यत्प्राणेन न प्राणिति'* भन्ने आठौँ मन्त्रमा गएर यो खण्ड समाप्त हुन्छ ।

केनोपनिषद्को द्वितीय खण्ड *'यदि मन्यसे सुवेदेति दहरमेवापि'* मन्त्रबाट शुरु भएर *'इह चेदवेदीदथ सत्यमस्ति'* भन्ने पाचौँ मन्त्रमा पुगेर दोस्रो खण्ड सकिन्छ ।

तृतीय खण्ड *'ब्रह्म ह देवेभ्यो विजिग्ये'* मन्त्रबाट शुरु भएर *'स तस्मिन्नेवाकाशे'* भन्ने बाह्रौँ मन्त्रमा गएर यो खण्ड समाप्त हुन्छ ।

केनोपनिषद्को चतुर्थ खण्ड *'सा ब्रह्मेति हो वाच'* भन्ने मन्त्रबाट शुरु भएर *'यो वा एतामेवं वेदापहत्य'* भन्ने नवौँ मन्त्रमा पुगेर यो

चतुर्थ खण्ड पनि पूर्ण हुन्छ ।

यसरी बाहिरीरूपमा हेर्दा यस उपनिषद्मा जम्मा ३४ मन्त्रहरूमात्रै समाविष्ट भएका पाइन्छन् । कलेवर र मन्त्रका दृष्टिकोणले यो उपनिषद् स्वल्परूपको देखिन्छ, तर ज्ञानको दृष्टिकोणले भने यस उपनिषद्को अत्यन्त ठूलो महत्त्व भएको पाइन्छ ।

यस उपनिषद्मा श्रीशङ्कराचार्यले अरू कुनै पनि भाष्यपरम्परामा नभएका दुईथरी भाष्यहरू अर्थात् पदभाष्य र वाक्यभाष्य लेख्नुभएको छ । प्रसिद्ध टीकाकार स्वामी आनन्दगिरिले यस उपनिषद्मा भाष्यकारले किन दुईथरी भाष्य लेख्नु भएको हो भन्ने सम्बन्धमा स्पष्ट पार्दै वाक्यभाष्यको टीका लेख्ने क्रममा शुरुमा नै लेखेका छन्– *'केनेषितम्'* इत्यादि सामवेदीय शाखा अन्तर्गत ब्राह्मणोपनिषद्को पदशः व्याख्या गरेर पनि भगवान् भाष्यकार सन्तुष्ट हुनुभएन । किनभने त्यस भाष्यमा त्यसको अर्थलाई शारीरकशास्त्रानुकूल युक्तिहरूद्वारा निर्णय गरिएको थिएन ।

उपर्युक्त उद्धरणबाट आचार्य शङ्करले पहिले पदभाष्य लेखेको थाहा हुन्छ । यसमा उपनिषद्को पदशः व्याख्या भने भएको थियो तर युक्तिप्रधान वाक्यहरूबाट त्यसको विवेचना भने भएको थिएन । त्यसैकारण उहाँले वाक्यभाष्यको पनि रचना गर्नु आवश्यक ठान्नुभएको देखिन्छ । पदभाष्यको रचना अरू भाष्यहरू सरहै गरेको पाइन्छ । पदभाष्यमा खास गरेर मूलको पदशः व्याख्या गरिएको छ । वाक्यभाष्यमा भने विषयको युक्तियुक्त विवेचना गर्नेतर्फ प्रयत्न गरेको पाइन्छ ।

सम्बन्धभाष्यमा आचार्यले अनुबन्धचतुष्टय अर्थात् अधिकारी, विषय, सम्बन्ध र प्रयोजनको पनि सङ्क्षेपमा उल्लेख गर्नुभएको

छ । जुन पुरुष यस जन्ममा र पूर्व जन्ममा गरेका शुभकर्मका संस्कारबाट चित्त शुद्ध भएर अनित्य संसारबाट विरक्त भएको छ त्यसैलाई नै प्रत्यगात्मविषयक जिज्ञासा हुनसक्तछ । यही कुरालाई *'केनेषितम्'* इत्यादि प्रश्नोत्तरको रूपमा यसमा देखाएको छ । यसै प्रत्यगात्माको ब्रह्मत्वविज्ञानबाट नै कामना र कर्मको प्रवृत्तिको कारण संसारको बीज भएको अज्ञान पूर्णरूपमा निवृत्त हुनसक्तछ ।

ब्रह्मज्ञान वस्तुप्रधान भएको हुँदा यो पुरुषको अधीन हुन सक्तैन । त्यसकारण यस केनोपनिषद्मा 'केनेषितम्' इत्यादि मन्त्रहरूद्वारा दृष्ट र अदृष्ट बाह्य साधन र साध्यहरूदेखि विरक्त भएको मान्छे नै प्रत्यगात्मविषयक ब्रह्मजिज्ञासामा लाग्न सक्ने यथार्थता देखाइएको छ । शिष्य र आचार्यका बीचमा भएको प्रश्नोत्तरका रूपमा यो उपनिषद् आएको छ । यस उपनिषद्को ज्ञेयविषय अत्यन्त सूक्ष्म भएको हुँदा जिज्ञासुका सुगमताका लागि नै यसप्रकारको शैली यस उपनिषद्ले लिएको हुन सक्तछ । यसमा युक्ति र तर्कद्वारा पनि बुझाउने प्रयास गरेको देखिन्छ । कुनै शिष्यले प्रत्यगात्मविषयक ज्ञान बाहेक अरू कुनै पनि माध्यमबाट त्यस निर्भय, नित्य तथा निरतिशय ब्रह्मको ज्ञान नहुने देखेपछि श्रोत्रिय ब्रह्मनिष्ठ गुरु समक्ष विधिपूर्वक गुरूपसत्ति गरेर ब्रह्मजिज्ञासा गरेको कल्पना गर्दै यहाँ यो आख्यायिका प्रस्तुत गरेको देखिन्छ । गुरुसमक्ष शिष्यको प्रेरक विषयक जिज्ञासा अथवा प्रश्न यस्तो छ । जस्तै –

ॐ केनेषितं पतति प्रेषितं मनः ।
केन प्राणः प्रथमः प्रैति युक्तः ।
केनेषितां वाचमिमां वदन्ति ।
चक्षुः श्रोत्रं क उ देवो युनक्ति ।'

अर्थात् यो मन कसद्वारा इच्छा गरिएर र प्रेरित भएर आफ्ना विषयतिर जान्छ ? कसबाट प्रयुक्त भएर प्रथम अर्थात् प्रधान प्राण चल्दछ ? कसको इच्छाले मानिस बोल्दछ ? कुन देवताले चक्षु र श्रोत्रलाई प्रेरित गर्दछन् ?

उपर्युक्त मन्त्रमा शिष्यले सोधेका चारथरी प्रश्नहरूको उत्तर दिँदै गुरु दोस्रो मन्त्रमा भन्दछन् । जस्तै – *'श्रोत्रस्य श्रोत्रं मनसो मनो यद्वाचो ह वा वाचं स उ प्राणस्य प्राणश्चक्षुषश्चक्षुरतिमुच्य धीराः प्रेत्यास्मा-ल्लोकादमृता भवन्ति.'* अर्थात् जुन कानको कान मनको मन र वाणीको वाणी हो त्यही प्राणको प्राण र आँखाको आँखा पनि हो भनेर जुन धीर पुरुषले जान्दछ, त्यो संसारबाट मुक्त भएर जान्छ र अमर हुन्छ ।

यसरी उक्त मन्त्रले आत्मालाई सर्वनियन्तृत्वका रूपमा देखाएको छ । यस्तो आत्मालाई नचिनेर जसले श्रोत्रादिमा नै आत्मभाव राख्तछ, त्यसले तिनकै उपाधिले युक्त भएर यस संसारमा आएर जन्मने र मर्ने काम गर्दछ । त्यसकारण श्रोत्रादिको श्रोत्रादिरूप ब्रह्म नै आत्मा हो भनेर जसले जान्दछ र श्रोत्रादिमा आत्मभाव त्याग्दछ, त्यो सबै सांसारिक आसक्ति त्यागेर अमृत अर्थात् अमरणधर्मा हुन्छ । ती व्यक्ति नै धीर हुन्, जसले यसप्रकार ब्रह्मतत्त्व जान्दछन् । किनभने विशिष्टबुद्धिमत्व नभईकन श्रोत्रादिमा आत्मभावलाई त्याग गर्न सकिँदैन ।

उपर्युक्त अनुसार ब्रह्मलाई श्रोत्रादिको पनि श्रोत्रादिरूप हो भनेर गुरुले शिष्यलाई उपदेश गरेर ब्रह्म अर्थात् आत्माको अज्ञेयत्व र अनिर्वचनीयत्वको पनि गुरुले उपदेश गरेका थिए ।

यसपछि तेस्रो मन्त्र शुरु हुन्छ । जस्तै –*'न तत्र चक्षुर्गच्छति न*

*वाग्गच्छति नो मनो न विद्मो न विजानीमो यथैतदनुशिष्यादन्यदेव तद्विदितादथो अविदितादधि, इति शुश्रुम पूर्वेषां ये नस्तद्वयाचचक्षिरे.'* अर्थात् ब्रह्मसम्म नेत्रेन्द्रिय पुग्न सक्तैन । वाणी जान सक्तैन । मन पनि पुग्न सक्तैन । अतः जसरी शिष्यलाई त्यस ब्रह्मको उपदेश गर्नु पर्दथ्यो, त्यो हामीहरू जान्दैनौँ अर्थात् हाम्रो बुद्धिवृत्तिमा चढ्दैन । त्यो ब्रह्म विदितभन्दा भिन्नै र अविदितभन्दा पर छ भन्ने कुरा हामीहरूले पूर्वपुरुषहरूबाट सुनेका हौँ । जुन पूर्वपुरुषहरूले हामीहरूलाई व्याख्यान गरेका थिए ।

यसरी ब्रह्म आँखा, वचन र मनबाट नजानिने भयो । जुन वस्तु इन्द्रियहरूको विषय हुन्छ, त्यही वस्तुलाई जाति, गुण, सम्बन्ध र क्रियारूप विशेषणहरूद्वारा कसैलाई उपदेश गर्न सम्भव हुन्छ, तर ब्रह्म ती जाति आदि विशेषणहरूयुक्त होइन । त्यसकारण शिष्यहरूलाई आचार्यहरूद्वारा ब्रह्मको प्रतीति गराउन अत्यन्त कठिन हुने देखिन्छ । ब्रह्म विदितभन्दा अरू र अविदितभन्दा पर भनेर श्रुतिले जुन भनेको छ त्यो भनेको श्रोत्रादिको अविषयक ब्रह्म विदितभन्दा अन्य अर्थात् पृथक् हो । व्याकृत वस्तुमात्रै विदित हुन्छ । ब्रह्म अव्याकृत भएको हुँदा अविदितभन्दा पर भनिएको हो । जुन वस्तु विदित हुन्छ त्यो अल्प, मरणशील र दुःखयुक्त हुन्छ । आफ्नू आत्माभन्दा अरू वस्तु विदित र अविदितभन्दा भिन्नै हुनसक्तैन । अतः यस मन्त्रको अर्थ आत्मा अर्थात् प्रत्यगात्मा नै ब्रह्म हो भन्ने बुझ्नु पर्दछ ।

यसरी प्रकृत ब्रह्म विदित र अविदितभन्दा पर भएपछि त्यसलाई कसरी जान्ने भन्ने प्रश्नको उत्तरमा श्रुति भन्दछ – त्यो ब्रह्म आचार्यहरूका उपदेश परम्पराबाट मात्रै जान्न सकिन्छ ।

त्यो ब्रह्म तर्कले, प्रवचनले, मेधाले, बहुश्रुत, तप तथा यज्ञादिले पनि जान्न सकिँदैन भनेर पूर्ववर्ती आचार्यहरूले भनेका छन् भन्ने समेत यस मन्त्रको भनाइ भएको देखिन्छ ।

ब्रह्म वागादि इन्द्रियहरूभन्दा अतीत र अनुपास्यसमेत भएको कुरा फेरि चारौँ मन्त्रले पनि बताएको छ । जस्तै –

**यद्वाचानभ्युदितं येन वागभ्युद्यते ।**
**तदेव ब्रह्म त्वं विद्धि नेदं यदिदमुपासते ॥**

अर्थात् जुन ब्रह्म वाणीद्वारा प्रकाशित हुँदैन, तर ब्रह्मबाट नै वाणी प्रकाशित हुन्छ, त्यसैलाई तिमी ब्रह्म भनेर जान । जसलाई संसारमा मान्छेहरू ब्रह्म भनेर उपासना गर्दछन्, त्यो ब्रह्म होइन । त्यसपछि यसैकुरालाई 'यन्मनसा' भन्ने पाचौँ मन्त्रले, *'यच्चक्षुषा'* भन्ने छैटौँ मन्त्रले, *'यच्छ्रोत्रेण'* भन्ने सातौँ मन्त्रले र *'यत्प्राणेन'* भन्ने आठौँ मन्त्रले पनि विभिन्न इन्द्रियहरू, मन र प्राणसमेतले ब्रह्मलाई विषय गर्न नसक्ने कुरा स्पष्टरूपमा बताएको छ ।

द्वितीय खण्डको शुरुमा नै ब्रह्मज्ञानको अनिर्वचनीयता बताउने क्रममा आचार्य शङ्कर आफ्नू भाष्यमा लेख्नुहुन्छ – यसरी हेयोपादेयदेखि विपरीत आत्मा नै ब्रह्म हो भनेर प्रतीति गराइएको शिष्यले आफैँ ब्रह्म भएको नठानोस् भन्ने अभिप्रायले तल आउने *'यदि मन्यसे'* भन्ने आदि कुराहरू आचार्यले भनेका हुन् । किनभने शिष्यमा निश्चित ज्ञान हुनु आवश्यक छ । तर *'सुवेदाहम्'* अर्थात् ब्रह्मलाई म राम्रोसँग जान्दछु भन्नु चाहिँ उपयुक्त हुँदैन । किनभने जुन वेद्यवस्तु वेत्ताको विषय हुन्छ, त्यसलाई राम्रोसँग जान्न सकिन्छ । जसरी डढाउने आगोको डढाउने विषय दाह्य पदार्थ नै

हुनसक्तछ । उसको स्वरूप हुन सक्तैन, अर्थात् अग्निले अग्निलाई डढाउँदैन । त्यसैगरेर ब्रह्म समस्त ज्ञाताहरूको आत्मा अर्थात् आफ्नू आत्मा आफैं नै हो । यही नै सबै वेदान्तहरूले राम्रोसँग निश्चय गरेको अर्थ हो ।

यस उपनिषद्मा पनि प्रथम खण्डको शुरुदेखि नै 'श्रोत्रस्य श्रोत्रम्' इत्यादि मन्त्रहरूद्वारा ब्रह्मको कुरा प्रतिपादन गरिएको छ । अझ यसै कुरालाई *'यद्वाचानभ्युदितम्'* भन्ने वाक्यद्वारा विशेषरूपले निश्चय गरिएको छ । त्यो ब्रह्म विदितभन्दा अरू हो र अविदितभन्दा माथि हो भनेर यस वाक्यबाट ब्रह्मवेत्ताका सम्प्रदायको निश्चय पनि भनिसकिएको छ । यस प्रकरणलाई *'अविज्ञातं विजानतां विज्ञातमविजानताम्'* भन्ने वाक्यबाट उपसंहार गरिएको छ । त्यसकारण म राम्रोसँग ब्रह्म जान्दछु भन्ने शिष्यको धारणालाई यहाँ आचार्यले निराकरण गर्न खोज्नु उपयुक्त देखिन्छ । ब्रह्मबाहेक अर्को कुनै ज्ञाता छैन भन्ने वृहदारण्यकोपनिषद्को पनि भनाइ पाइन्छ ।

यसरी विभिन्न श्रुतिहरूले ब्रह्मभन्दा भिन्न ज्ञाताको प्रतिषेध गरेको देखिन्छ । ब्रह्मलाई राम्रोसँग जान्दछु भन्नु मिथ्या नै भएको हुँदा आचार्यले यही कुरा शिष्यलाई यस मन्त्रबाट सम्झाएका छन् । जस्तै –

**यदि मन्यसे सुवेदेति दहरमेवापि नूनं त्वं वेत्थ ब्रह्मणो रूपम् ।**
**यदस्य त्वं यदस्य च वेदेष्वथ नु मीमांस्यमेव ते मन्ये विदितम् ॥**

अर्थात् यदि तिमी ब्रह्मलाई म राम्रोसँग जान्दछु भन्दछौ भने निश्चय नै तिमी ब्रह्मको अत्यल्प रूपमात्र जान्दछौ । तिमी र

देवताहरूले जानेको ब्रह्म पनि अल्प नै हो । अतः तिमीले जानेको ब्रह्म विचारणीय भएको म ठान्दछु ।

यसरी आचार्यले शिष्यका लागि ब्रह्मविचारणीय भएको कुरा भनेपछि शिष्यले एकान्तमा बसेर समाहित चित्त भएर आचार्यले उपदेश गरेको आगमलाई अर्थ सहित विचार गरेका थिए । त्यसरी विचार गरेको अर्थलाई उनले तर्कद्वारा निश्चय गरेर आत्मानुभव गरेका थिए । त्यसपछि आचार्यका नगिच गएर *'मन्येऽहमथेदानीं विदितं ब्रह्म'* त्यसरी शिष्यले भनेपछि उनले प्राप्त गरेको अनुभूतिलाई श्रुतिले यसरी व्यक्त गरेको छ –

**नाहं मन्ये सुवेदेति नो न वेदेति वेद च ।**
**यो नस्तद्वेद तद्वेद नो न वेदेति वेद च ॥**

अर्थात् ब्रह्मलाई जान्दिन भनेर पनि म भन्दिन । त्यसकारण म ब्रह्मलाई जान्दछु र जान्दिन पनि । हामी शिष्यहरूमध्ये जसले *'नो न वेद इति वेद च'* अर्थात् ब्रह्मलाई जान्दछु र जान्दिन पनि भनेर ब्रह्मलाई जसले जान्दछ त्यसैले ब्रह्मलाई जान्दछ ।

उपर्युक्त मन्त्रमा म ब्रह्मलाई राम्रोसँग जान्दछु भनेर मान्दिन र म ब्रह्मलाई जान्दिन भनेर भन्दिन पनि, किन भने म ब्रह्मलाई जान्दछु । यसरी परस्पर विरुद्ध जान्दछु र जान्दिन भन्ने भनाइलाई स्पष्ट गर्दै अर्को मन्त्रले भन्छ । यस मन्त्रले ज्ञातालाई अज्ञ र अज्ञलाई ज्ञानी भन्दछ । जस्तै –

**यस्यामतं तस्य मतं मतं यस्य न वेद सः ।**
**अविज्ञातं विजानतां विज्ञातमविजानताम् ॥**

अर्थात् ब्रह्म जसलाई ज्ञात छैन उसलाई ज्ञात हुन्छ । ब्रह्म जसलाई ज्ञात छ उसलाई ज्ञात हुँदैन । किनभने ब्रह्म जान्नेका लागि नजानिने हुन्छ र नजान्नेका लागि जानिने हुन्छ । अर्थात् ब्रह्म अरू मायिक वस्तुहरू जस्तो दृश्य नहुने हुँदा त्यो ब्रह्म विषयरूपले जान्न सकिँदैन ।

उपर्युक्त मन्त्रको तात्पर्य स्पष्ट पार्दै आचार्य शङ्कर पदभाष्यमा भन्नुहुन्छ – इन्द्रिय, मन र बुद्धि आदिमा आत्मभाव राख्ने असम्यग्दर्शी अज्ञानीहरूका लागि ब्रह्म विज्ञात अर्थात् ज्ञेय हुन्छ । विज्ञानीहरूको ब्रह्म आत्मस्वरूप भएको कारण इन्द्रियहरूको विषय हुनसक्तैन । त्यसैकारण ब्रह्म अविज्ञात अर्थात् अविदित हुन्छ । त्यो ब्रह्म ज्ञानस्वरूप हो । यस मन्त्रमा *'अविज्ञातं विजानताम्'* ले असम्यग्दर्शीलाई सङ्केत गर्दछ भने *'विज्ञातमविजानताम्'* ले सम्यग्दर्शीलाई सङ्केत गर्दछ ।

यसरी ब्रह्म जान्नेका लागि अविज्ञात हो भनेर निश्चय भयो । यदि ब्रह्म अत्यन्त अविज्ञात नै हो भने त संसारी मान्छे र ब्रह्मज्ञानीमा कुनै भेद नरहने भयो । यसका साथै *'अविज्ञातं विजानताम्'* अर्थात् जान्नेका लागि अविज्ञात भन्ने भनाइ पनि परस्पर आफैँमा विरुद्ध देखियो । यस अवस्थामा त्यो ब्रह्म सम्यक्प्रकारले कसरी जान्न सकिन्छ ? भन्ने सम्बन्धमा चारौँ मन्त्रले भन्दछ । जस्तै –

**प्रतिबोधविदितंमतममृतत्वं हि विन्दते ।**
**आत्मना विन्दते वीर्यं विद्यया विन्दतेऽमृतम् ॥**

अर्थात् जुन प्रत्येक बोधमा प्रत्यगात्मरूपले जानिन्छ ब्रह्म त्यही हो । त्यही ब्रह्मको ज्ञान हो । त्यस ब्रह्मज्ञानबाट अमृतत्वको प्राप्ति

हुन्छ । अमृतत्व आफूबाटै प्राप्त हुन्छ । विद्याबाट अज्ञानलाई निवृत्ति गर्ने शक्ति प्राप्त हुन्छ ।

यस मन्त्रको अर्थ स्पष्ट पार्दै भाष्यकारले आफ्नू वाक्यभाष्यमा लेख्नुभएको छ – *'प्रतिबोधविदितम्'* यो द्विरुक्ति हो । प्रतीति अर्थात् ज्ञान नै आत्मज्ञानको द्वार हो । 'बोधं प्रति बोधं प्रति' अर्थात् बोधबोधका प्रति यो द्विरुक्ति सम्पूर्ण प्रतीतिहरूमा ब्रह्मको व्याप्ति सूचित गर्नका लागि हो । बुद्धिजनित सम्पूर्ण प्रतीतिहरू तातेको फलामसरह नित्य विज्ञानस्वरूप आत्माबाट व्याप्त रहनाले त्यसैबाट ती प्रतीतिहरू अवभासित हुन्छन् । तर ती प्रतीतिहरूबाट पृथक् तिनको अवभासक आत्मा फलामको डल्लोमा व्याप्त भएको आगो जस्तै ती प्रतीतिहरूबाट सर्वथा विलक्षण उपलब्ध हुन्छ । अतः ती बौद्धप्रत्ययहरू आत्माको उपलब्धिका द्वार हुन् । त्यसकारण प्रत्येक बौद्धप्रत्ययका अवभासमा जुन प्रत्यगात्मस्वरूपबाट जानिन्छ त्यही नै ब्रह्म हो । त्यही नै मत अर्थात् ज्ञात हो । त्यही नै सम्यग्ज्ञान सहित प्रत्यगात्माको ज्ञान हो । विषय ज्ञान सम्यग्ज्ञान होइन ।

प्रत्यगात्मालाई आत्मस्वरूपले देख्नु पर्ने कुरा कठोपनिषद्मा पनि उल्लेख भएको छ । *'अमृतत्वं हि विन्दते'* अर्थात् आत्मज्ञानबाट अमरत्व नै प्राप्त हुन्छ । यो हेतुसूचक वाक्य हो । किनभने यस विपरीतको ज्ञानले मृत्यु प्राप्त हुन्छ । विषयहरूमा आत्मबुद्धि गर्नाले मृत्युको आरम्भ हुन्छ । अतः आत्मविज्ञान नै अमरत्वको हेतु हो ।

अमरत्व आत्माबाटै अर्थात् आत्माको नित्यात्मस्वभावबाटै प्राप्त हुन्छ । अरू कसैका आश्रयबाट अमरत्व प्राप्त हुँदैन । 'विन्दते' यसबाट अमरत्वको प्राप्तिमा आत्मविज्ञानको अपेक्षा रहने कुरा बुझ्नुपर्दछ । यदि अमृतत्व विद्याबाट उत्पन्न हुने भएको भए त्यो पनि कर्मफल जस्तै

अनित्य हुने थियो। त्यसकारण अमरत्व विद्याबाट उत्पाद्य होइन।

यदि अमृतत्व स्वतः प्राप्त हुन्छ भने विद्याको यसमा के भूमिका रहन्छ त ? भन्ने जिज्ञासा हुनसक्तछ। यस सम्बन्धमा विद्या अनात्मविज्ञानलाई निवृत्त गर्दै स्वाभाविक अमृतत्वको हेतु बन्दछ। किनभने *'वीर्यं विद्यया विन्दते'* अर्थात् विद्याद्वारा अज्ञानान्धकारलाई निवृत्त गर्ने सामर्थ्य प्राप्त हुन्छ। विद्याबाट वीर्य अर्थात् सामर्थ्य अर्थात् अनात्मको अध्यारोपरूप मायामा रहेको अन्धकार किंवा अज्ञानबाट पराभव नहुने खालको बल प्राप्त हुन्छ। विद्या अमृत अर्थात् अविनाशी हो। अविद्याबाट प्राप्त हुने बल नाशवान् हुन्छ। किनभने अविद्या विद्याबाट बाधित हुन्छ। तर विद्यालाई केही कुराले पनि बाध गर्नसक्तैन। अतः विद्याजनित वीर्य अमृत हुन्छ। त्यस्तो विद्या अमृतत्वको निमित्तमात्र हुन्छ। अर्को उपनिषद्ले पनि *'नायमात्मा बलहीनेन लभ्यः'* (मु.उ.३।२।४) अर्थात् यो आत्मा बलहीनले प्राप्त गर्न सक्तैन भनेको छ।

*'प्रतिबोधविदितम्'* को अर्को अर्थ पनि भाष्यकारले गर्नुभएको छ – सपनाबाट बिउँझेजस्तो जसका सम्पूर्ण विपरीत संस्कारहरू एकैपटक बाध हुन्छन्। त्यसबाट जे जानिन्छ, त्यही नै मत अर्थात् ज्ञात हो। अर्को शब्दमा भन्ने हो भने गुरुको उपदेश नै प्रतिबोध हो। त्यसबाट जानिएको नै मत हो।

यस *'प्रतिबोधविदितम्'* मन्त्रको अर्थ भाष्यकारको पदभाष्य अनुसार पनि उल्लेख गरिन्छ। *'प्रतिबोधविदितम्'* अर्थात् जुन बोधबोधका प्रति विदित हुन्छ। यहाँ *'बोध'* शब्दले बुद्धिबाट हुने प्रतीति अर्थात् ज्ञानलाई जनाउँछ। सम्पूर्ण प्रतीतिहरू अर्थात् ज्ञानका साक्षी र चिच्छक्तिस्वरूपमात्र भएका कारण ती प्रतीतिहरू ब्रह्ममा

लक्षियत हुन्छन् । अतः त्यस अन्तरात्माको ज्ञान प्राप्त गर्नका लागि यसबाहेक अरू कुनै बाटो छैन । अतः जुन समयमा ब्रह्मलाई प्रतीतिहरूको अन्तःसाक्षीस्वरूपले जानिन्छ, त्यसै समयमा नै त्यो ब्रह्म ज्ञात हुन्छ । यसलाई अझै स्पष्टरूपमा भन्ने हो भने यही ब्रह्मको सम्यग्ज्ञान हो । सम्पूर्ण प्रतीतिहरूको साक्षी हुनाले नै उसलाई सम्पूर्ण भूतहरूमा अनुस्यूत भएर रहेको भनिन्छ ।

*'प्रतिबोधविदितम्'* अनुसार प्रतिबोधमा प्रत्यगात्मरूपले जानिएको वस्तु नै ब्रह्म हो । त्यसै ब्रह्मलाई जानेर अर्थात् ब्रह्मज्ञानबाट नै अमृतत्त्व प्राप्त हुन्छ । मनुष्य योनि पाएको अमूल्य समयमा नै ब्रह्मज्ञान गरेर अमृतत्त्व प्राप्त गर्नसक्नु नै मनुष्य योनि पाएको सार्थकता हो, अन्यथा ठूलो हानि हुन्छ । यही कुरा पाचौँ मन्त्रले भनेको छ । जस्तै –

**ईह चेदवेदीदथ सत्यमस्ति न चेदिहावेदीन्महती विनष्टिः ।**
**भूतेषु भूतेषु विचित्य धीराः प्रेत्यास्माल्लोकादमृता भवन्ति ॥**

अर्थात् यदि यस जन्ममा ब्रह्मज्ञान गर्न सकियो भने अति राम्रो भयो । यस जन्ममा ब्रह्मज्ञान गर्न सकिएन भने ठूलो हानि भयो । धीर पुरुषहरू त्यस ब्रह्मलाई समस्त प्राणीहरूमा देखेर यस लोकबाट गएर अमर हुन्छन् ।

यस मन्त्रको व्याख्या आचार्यको पदभाष्यसमेतबाट सारांशमा गरिनेछ । यदि कुनै अधिकारीले समर्थ भएर यसै जन्ममा नै आत्मज्ञानद्वारा ब्रह्मप्राप्त गरिहाल्यो भने उसको जीवन सार्थक भयो । तर यदि उसले यस लोकमा जीवित रहँदैखेरि नै आत्मज्ञानद्वारा ब्रह्म प्राप्त गरेन भने उसको ठूलो हानि भयो । उसले आफ्नू जन्म, जरा,

मरण आदिको अन्तहीन संसृतिको दुश्चक्रमा घुमिरहनु पर्दछ र विभिन्न योनिमा घुमेर दुःख पाइरहनु पर्दछ ।

उपर्युक्त धीरपुरुषहरू अर्थात् ब्राह्मणहरू समस्त चर र अचरमा एउटै ब्रह्मस्वरूप आत्मतत्त्वको साक्षात्कार गर्दछन्। उनीहरू यस लोकबाट अमर भएर जान्छन्। अर्थात् ममता र अहंतारूप यस अविद्यात्मक लोकबाट उपरत भएर सबैमा आत्मैकत्वरूप अद्वैतभाव प्राप्त गरेर अमर अर्थात् ब्रह्म नै हुन्छन् । अर्को श्रुतिले पनि भनेको छ– *'स यो ह वै तत्परं ब्रह्म वेद ब्रह्मैव भवति'* (मु.उ.३।२।९) अर्थात् जुन पुरुष निश्चयपूर्वक त्यस परब्रह्मलाई जान्दछ त्यो ब्रह्म नै हुन्छ ।

यसै मन्त्रको अर्को वाक्यभाष्यमा शङ्कराचार्यले गर्नुभएको व्याख्याको सारांश पनि दिइन्छ । *'इह चेदवेदीदथ सत्यमस्ति'* भन्ने यस श्रुतिले आत्मसाक्षात्कारका लागि गर्नु पर्ने अवश्यकर्तव्यताको सङ्केत गरेको छ। यसको विपरीत अवस्थामा श्रुतिले *'महती विनष्टिः'* अर्थात् ठूलो हानि हुने कुरा बताएको छ । यसै मनुष्यजन्ममा नै आत्मसाक्षात्कार गर्नुपर्ने कुराको विधान श्रुतिले गरेको छ। यसै जन्ममा नै आत्मसाक्षात्कार गर्नसके ठीक भयो। यसबाट उसलाई परमार्थतत्त्व प्राप्त हुन्छ। उसको जन्म सफल हुन्छ। तर उसले यस मनुष्य जन्ममा नै ब्रह्मसाक्षात्कार गर्न सकेन भने उसले पाएको उसको मनुष्य जन्म त्यसै व्यर्थ हुन्छ । जन्ममरणको विच्छेदका लागि पनि आत्मज्ञान यसै मनुष्य जन्ममा गर्नु अति आवश्यक भएको कुरामा श्रुतिले जोड दिएको छ । आत्मज्ञानबाट के हुन्छ ? भन्ने सम्बन्धमा श्रुतिले *'भूतेषु भूतेषु विचित्य धीराः'* अर्थात् सम्पूर्ण चराचर प्राणीहरूमा रहेको एकमात्र आत्मतत्त्वलाई साक्षात्कार गरेर विवेकी अर्थात् धीर पुरुष मृत्युपछि अमरणधर्मा

अर्थात् नित्यविज्ञानामृतस्वभावयुक्त भएर जान्छ। अर्को शब्दमा भन्ने हो भने त्यस्तो पुरुष सधैँका लागि मुक्त भएर जान्छ।

केनोपनिषद्को तृतीय खण्डमा यक्षोपाख्यान भन्ने आख्यायिका आउँछ। मन्दबुद्धि भएका अधिकारीका लागि आख्यायिकाका माध्यमबाट ब्रह्मको उपदेश गर्दा बुझ्न सुगम हुने हुँदा यो उपाख्यान आएको देखिन्छ। यस खण्डमा अर्थवादद्वारा ब्रह्मको दुर्विज्ञेयता बताइएको छ। जुन पुरुष शमदमादि साधनले रहित र अभिमान तथा रागद्वेषादिले युक्त हुन्छ। त्यस्ता व्यक्तिलाई ब्रह्मज्ञान प्राप्त हुन सक्तैन। ब्रह्मज्ञान मिथ्या प्रतीतिको निरसनबाटमात्रै ग्रहण गर्न सकिन्छ। यो अर्थवाद शमदमादि साधनहरूको विधान गर्नका लागि अथवा सगुणोपासनाको विधान गर्नका लागि पनि आएको छ।

यस उपनिषद्को द्वितीय खण्डको तेस्रो मन्त्रले भनेको छ। जस्तै–

**यस्यामतं तस्य मतं मतं यस्य न वेद सः।**
**अविज्ञातं विजानतां विज्ञातमविजानताम् ॥**

अर्थात् ब्रह्म जाने भन्नेका लागि अविज्ञात र जानिन भन्नेका लागि ज्ञात हो। जान्नेका लागि अज्ञात र नजान्नेका लागि ज्ञात भनेको हुँदा मन्दबुद्धि पुरुषलाई यसबाट भ्रम उत्पन्न नहओस् भनेर नै यो आख्यायिका आएको कुरा शङ्कराचार्यले यस खण्डको शुरुमा नै आफ्नू भाष्यमा उल्लेख गर्नुभएबाट पनि यस आख्यायिकाको महत्त्व थाहा हुन्छ। यो खण्ड निम्न मन्त्रबाट शुरु भएको छ – *'ब्रह्म ह देवेभ्यो विजिग्ये तस्य ह ब्रह्मणो विजये देवा अमहीयन्त'* अर्थात् ब्रह्मले देवताहरूका निमित्त विजय गरे। त्यसैबाट देवताहरूले

गौरव प्राप्त गरे। देवताहरूमा अहङ्कार बढेर गयो।

त्यसरी देवताहरूमा अभिमान बढेपछि तिनीहरूको अभिमान मर्दन गर्न ब्रह्म साकार भएर दोस्रो मन्त्रमा यक्षका रूपमा प्रादुर्भाव हुन्छन्। तर यक्षरूप ब्रह्मलाई देवताहरू चिन्न सक्तैनन्। तेस्रो मन्त्रमा इन्द्रले अग्निलाई त्यस ब्रह्मरूप यक्षको जानकारी लिन पठाउँछन्। चौथो मन्त्रमा अग्नि अत्यन्त घमण्डका साथ आफ्नू परिचय दिन्छन्। पाचौँ र छैटौँ मन्त्रमा यक्षद्वारा अग्निको घमण्ड समाप्त गर्न परीक्षा हुन्छ र अग्नि असफल भएर फर्कन्छन्।

त्यसपछि सातौँ मन्त्रमा वायु यक्षको परिचय लिन जान्छन्। आठौँ र नवौँ मन्त्रमा वायुले अत्यन्त अहङ्कारका साथ आफ्नू परिचय दिन्छन्। दशौँ मन्त्रमा यक्षले वायुको अहङ्कार समाप्त गर्न परीक्षा गर्दछन्। तर वायु असफल भएर फर्कन्छन्।

त्यसपछि यक्षको परिचय लिन एघारौँ मन्त्रमा इन्द्र नै जान्छन्। तर अत्यन्त घमण्डी इन्द्रका सामुबाटै ब्रह्मरूप यक्ष अन्तर्धान भएको कुरा आख्यायिकाले वर्णन गरेको छ। बाह्रौँ मन्त्रमा यक्ष अन्तर्धान भएको त्यसै आकाशमा उमा प्रादुर्भाव भइन्। जस्तै –*'स्त्रियमाजगाम बहुशोभमानामुमां हैमवतीं ता होवाच किमेतद्यक्षमिति.'* अर्थात् सुनका गहनाहरूले विभूषित अत्यन्त राम्री हिमालयकी छोरी उमा अर्थात् पार्वतीरूपिणी ब्रह्मविद्यासँग इन्द्रले यक्ष को हो ? भनेर सोधे।

त्यसपछि चतुर्थ खण्ड प्रारम्भ हुन्छ। चतुर्थ खण्डको शुरुमा इन्द्रलाई उमाले दिएको उपदेशको प्रसङ्ग आउँछ। जस्तै – *'सा ब्रह्मेति होवाच ब्रह्मणो वा एतद्विजये महीयध्वमिति ततो हैव विदाञ्चकार ब्रह्मेति.'* अर्थात् ती विद्यादेवीले स्पष्टरूपमा नै ऊ ब्रह्म हो, तिमी ब्रह्मको विजयमा नै यसरी महिमान्वित भएका हौ

भनेर भनिन् । त्यसपछि इन्द्रले यो ब्रह्म हो भनेर जाने । त्यसअघि अग्नि र वायुले पनि यक्षरूपी ब्रह्मको सामीप्य पाएका थिए । त्यही कुरा दोस्रो मन्त्रले भनेको छ । जस्तै – *'तस्माद्वा एते देवा अतितरामिवान्यान्देवान्यदग्निर्वायुरिन्द्रस्ते ह्येनन्नेदिष्ठं पस्पृशुस्ते ह्येनत्प्रथमो विदाञ्चकार ब्रह्मेति.'* अर्थात् यसरी अग्नि, वायु र इन्द्र यी देवताहरूले यस समीपस्थ ब्रह्मलाई स्पर्श गरेका थिए । ती देवताहरूले पहिले पहिले यो ब्रह्म हो भनेर जानेका थिए । त्यसैकारण तिनीहरू अरू देवताहरूभन्दा श्रेष्ठ भएका थिए ।

अग्नि र वायुले ब्रह्मका बारेमा इन्द्रबाट नै सुनेका थिए । सोही कुरा तेस्रो मन्त्रले भनेको छ । जस्तै – *'तस्माद्वा इन्द्रोऽतितरामिवान्यान्देवान्स ह्येनन्नेदिष्ठं पस्पर्श स ह्येनत्प्रथमो विदाञ्चकार ब्रह्मेति.'* अर्थात् त्यसै कारण इन्द्र अरू सबै देवताहरूभन्दा श्रेष्ठ भए । किन भने इन्द्रले नै यस समीपस्थ ब्रह्मलाई स्पर्श गरेका थिए । अर्थात् इन्द्रले नै सर्वप्रथम यो ब्रह्म हो भनेर जानेका थिए ।

त्यसपछि केनोपनिषद्का अगाडिका मन्त्रहरूमा ब्रह्मविषयक अधिदैव आदेश र ब्रह्मविषयक अध्यात्म आदेशको प्रसङ्ग आउँछ । जस्तै – *'तस्यैष आदेशो यदेतद्विद्युतो व्यद्युतदा ३ इतीन्न्यमीमिषदा ३ इत्यधिदैवतम्.'* अर्थात् त्यस ब्रह्मको यो उपासनासम्बन्धी आदेश हो । जुन बिजुलीको चमक जस्तो र आँखा झिम्क्याउँदा प्रादुर्भूत भएजस्तो देखिन्छ, त्यो त्यस ब्रह्मको अधिदैवतरूप हो । त्यो अधिदैव अर्थात् देवताविषयक उदाहरण हो ।

त्यसैगरेर अर्को मन्त्रले भनेको छ । जस्तै – *'अथाध्यात्मं यदेतद्गच्छतीव च मनोऽनेन चैतदुपस्मरत्यभीक्ष्णं सङ्कल्पः.'* अर्थात्

यसपछि अध्यात्मउपासनाको उपदेश भनिन्छ – यस मनलाई जुन हिँडेजस्तो भनिन्छ त्यो ब्रह्म हो । त्यसरी उपासना गर्नु पर्दछ । किनभने यसबाट नै त्यस ब्रह्मको स्मरण र निरन्तर सङ्कल्प गरिन्छ ।

यस पाँचौ मन्त्रको पदभाष्यमा अधिदैवत र अध्यात्म आदेशलाई स्पष्ट पार्दै आचार्यशङ्करले यसरी व्याख्या गर्नुभएको छ । जस्तै– *'विद्युन्निमेषणवदधिदैवतं द्रुतप्रकाशनधर्मि, अध्यात्मं च मनः प्रत्ययसमकालाभिव्यक्तिधर्मीत्येष आदेशः.'* अर्थात् विद्युत् र निमेषोन्मेषका समान ब्रह्म शीघ्र प्रकाशित हुन्छ । यसलाई अधिदैवत आदेश भनिन्छ । त्यो ब्रह्म मनले प्रतीति गरेकै अवस्थामा नै अभिव्यक्त हुन्छ । यसलाई ब्रह्मको अध्यात्म आदेश भनिन्छ । यसैकुरालाई आचार्यले वाक्यभाष्यमा यसरी व्यक्त गर्नुभएको छ । जस्तै – मनले वस्तुतः ब्रह्मलाई विषय गर्दैन । किनभने ब्रह्म मनको अविषय हो । मन ब्रह्मसम्म पुग्न सक्तैन । यसको चर्चा यसै उपनिषद्का प्रथम खण्ड र द्वितीय खण्डमा भनिएको छ । जस्तै–

यन्मनसा न मनुते येनाहुर्मनो मतम् ।
तदेव ब्रह्म त्वं विद्धि नेदं यदिदमुपासते. ॥

यी मन्त्रहरूद्वारा व्याख्या भइसकेको छ । त्यो ब्रह्म मनको पनि मन भएको हुँदा मनले उसलाई विषय गर्न सक्तैन तापनि श्रुतिले यहाँ *'गच्छतीव'* अर्थात् मानो गएझैँ गर्दछ सम्म भनेको हो । त्यो मन ब्रह्मको स्वरूपभूत भएको कारण मन ब्रह्मका समीपमा नै रहन्छ भनिन्छ । किनभने विद्वान्हरू त्यसै मनले नै ब्रह्मको स्मरण गर्दछन् । त्यसै हुँदा *'गच्छतीव'* भनिएको हो । ब्रह्मद्वारा प्रेरित मन नै बारम्बार सङ्कल्प गर्दछ । अतः मनका

स्मरण र सङ्कल्प आदि साधनहरूद्वारा अधिदैव र अध्यात्मभावमा ब्रह्मको उपासना गर्नु पर्दछ भन्ने नै यस मन्त्रको तात्पर्य हो ।

ब्रह्म कुनै पनि करणको विषय हुन नसक्ने उद्घोष श्रुतिले सर्वत्र गर्दा गर्दै पनि यहाँ किन यस मन्त्रले उपासनाको विधान गरेको हो ? भन्ने सम्बन्धमा आचार्य आफ्नू पदभाष्यमा उल्लेख गर्नुहुन्छ । जस्तै – *‘एवमादिश्यमानं हि ब्रह्म मन्दवुद्धिगम्यं भवतीति ब्रह्मण आदेशोपदेशः, न हि निरुपाधिकमेव ब्रह्म मन्दबुद्धिभिराकलयितुं शक्यम्.’* अर्थात् यसरी आदेश गरेको ब्रह्म मन्दबुद्धि भएको अधिकारीले पनि बुझ्न सक्तछ । निरुपाधिक ब्रह्मको ज्ञान मन्दबुद्धि पुरुषलाई हुन सक्तैन ।

उपर्युक्त मन्त्रको आदेशलाई प्रत्यगात्मसम्बन्धी आदेश भनिन्छ । यसपछिभने वनसंज्ञक ब्रह्मको उपासनाको फलको वर्णन छैटौं मन्त्रले यसरी गरेको छ । जस्तै – *‘तद्ध तद्वनं नाम तद्वनमित्युपासितव्यं स य एतदेवं वेदाभि हैनं सर्वाणि भूतानि संवाञ्छन्ति.’* अर्थात् त्यो ब्रह्म नै वन अर्थात् सम्भजनीय हो । त्यस ब्रह्मलाई वन भन्ने नामले उपासना गर्नुपर्दछ । जसले ब्रह्मलाई सम्पूर्ण प्राणीहरूको प्रत्यगात्मरूपले जान्दछ उसलाई सम्पूर्ण भूतप्राणीहरू चाहना गर्दछन् ।

अन्त्यमा प्रथम खण्डको प्रथम मन्त्र *‘ॐ केनेषितं पतति प्रेषितं मनः’* बाट शुरु भएको आचार्य र शिष्यहरूका बीचको संवाद वा प्रश्नोत्तरका रूपमा ब्रह्मज्ञानविषयक वादकथाको उपसंहारको रूपमा शिष्यहरू आचार्यसँग भन्दछन् । जस्तै– *‘उपनिषदं भो ब्रूहीत्युक्ता त उपनिषद्ब्राह्मी वाव त उपनिषदमब्रूमेति.’* अर्थात् हे गुरो ! उपनिषद् भन्नुहोस् । यसरी शिष्यले भनेपछि गुरु भन्दछन्– मैले तिमीलाई उपनिषद् भनिसकें । अब म तिमीलाई

ब्राह्मणजातिसम्बन्धी उपनिषद् भन्दछु ।

उपर्युक्त अनुसार *'ॐ केनेषितम्'* देखि लिएर *'तद्ध तद्वनम्'* सम्मको उपनिषद् सुनाइसकेपछि पनि जब शिष्यले 'उपनिषद् भन्नुहोस्' भनेर आचार्यसँग भनेपछि आचार्यले शिष्यलाई उपनिषद् र आत्माको उपासना सम्बन्धी कुरा भनिसकेको बताएका थिए । आचार्यले शिष्यलाई अब तिमीलाई ब्राह्मी अर्थात् ब्रह्मको अथवा ब्राह्मण जातिको उपनिषद् सुनाउछु भनेका थिए । अहिलेसम्म ब्राह्मी उपनिषद् बताइएको छैन । केवल आत्मासम्बन्धी उपनिषद्मात्रै बताइएको छ । ब्राह्मी उपनिषद् अब बताइने कुरा सातौँ मन्त्रमा भनिएको छ । यसरी यस मन्त्रको सार भाष्यकारले आफ्नू वाक्य भाष्यमा व्यक्त गर्नुभएको छ ।

अब आठौँ मन्त्रले विद्याप्राप्तिको साधनको कुरा गर्दै भन्दछ । जस्तै– *'तस्यै तपो दमः कर्मेति प्रतिष्ठा वेदाः सर्वाङ्गानि सत्यमायतनम्.'* अर्थात् त्यस ब्राह्मी उपनिषद्को तप, दम, कर्म, वेद तथा सम्पूर्ण वेदाङ्गहरू प्रतिष्ठा हुन् । सत्य आयतन हो ।

माथि शुरुदेखि नै उपदेश गरिएको उपनिषद्को प्राप्तिका लागि नै यो ब्राह्मी उपनिषद् आएको हो । शरीर, इन्द्रिय र मनको समाधानको नाम नै तप हो । दम भनेर उपशम अर्थात् विषयहरूबाट निवृत्त हुनुलाई भनिन्छ । कर्म भनेर अग्निहोत्रादि कर्मलाई भनिन्छ । यीद्वारा संस्कारयुक्त भएको पुरुषको चित्त शुद्ध हुन्छ । त्यसपछिमात्रै तत्त्वज्ञानको उत्पत्ति भएको देखिन्छ । जसको मनोमल निवृत्त भएको हुँदैन त्यस्ता पुरुषलाई उपदेश दिए पनि ब्रह्मका विषयमा अग्रहण वा विपरीत ग्रहण भएको देखिन्छ । यसका उदाहरणका रूपमा इन्द्र र विरोचनलाई लिन सकिन्छ ।

ब्रह्मविद्याको प्रतिष्ठा भनेर ऋक् आदि चार वेदहरू र शिक्षा आदि ६ अङ्गहरूलाई समेत लिइएको छ। यिनैमा ब्रह्मविद्या अडिएको छ। यिनैलाई ब्रह्मविद्याको प्रतिष्ठा भनिएको हो। यी अङ्गहरू हुन् र ब्रह्मविद्या अङ्गी हो। अङ्गीका अधीनमा नै अङ्गहरू रहन्छन्।

सत्य आयतन हो। जहाँ त्यो उपनिषद् स्थित हुन्छ, त्यही नै त्यसको आयतन हो। वाणी, मन र शारीरिक अमायिकता अर्थात् अकुटिलताको नाम नै 'सत्य' हो। जुन मान्छे अमायावी र साधु हुन्छ, उसैमा नै ब्रह्मविद्या आश्रय लिन्छ। अतः सत्य ब्रह्मविद्याको आयतन हो। तप आदिमा नै प्रतिष्ठारूपले प्राप्त भएको सत्यलाई फेरि आयतनरूपले ग्रहण गर्नु सत्यलाई अतिशय साधनत्वका रूपमा प्रदर्शित गर्नका लागि हो। यसरी शङ्कराचार्यले अत्यन्त सूक्ष्मरूपमा श्रुति र स्मृतिहरूको समेत उद्धरण गर्दै आफ्ना पदभाष्य र वाक्यभाष्यमा पनि यसको उल्लेख गर्नुभएको छ।

केनोपनिषद्को चतुर्थ खण्डको नवौँ मन्त्र अर्थात् उपनिषद्को अन्तिम मन्त्रमा ग्रन्थ अवगाहनको फल बताइएको छ। जस्तै – *'यो वा एतामेवं वेदापहृत्य पाप्मानमनन्ते स्वर्गे लोके ज्येये प्रतितिष्ठति प्रतितिष्ठति.'* अर्थात् निश्चयपूर्वक यस उपनिषद्लाई जसले यसप्रकार जान्दछ, पापको नाश गरेर अनन्त र महान् स्वर्गलोकमा त्यो प्रतिष्ठित हुन्छ, प्रतिष्ठित हुन्छ भनेर दोहोऱ्याएर भनिएको छ।

अन्त्यमा भाष्यकार आद्यजगद्गुरु श्रीशङ्कराचार्यका पदभाष्य र वाक्यभाष्यहरूसमेतबाट यस मन्त्रको सार वस्तु उद्धरण गर्दै केनोपनिषद्रूपी ब्रह्मविद्याको सङ्क्षिप्त अवगाहन समाप्त गर्दछु। *'केनेषितम्'* इत्यादि वाक्यहरूद्वारा भनिएको र *'ब्रह्म देवेभ्यः'* भन्ने

आख्यायिकाले स्तुति गरिएको सम्पूर्ण विद्याहरूको आश्रय भएको यस ब्रह्मविद्यालाई जसले जान्दछ त्यो पापबाट विनिर्मुक्त अर्थात् अविद्या, वासना र कर्मरूप संसारको बीजलाई त्याग गरेर अनन्त स्वर्ग लोक अर्थात् सुखस्वरूप ब्रह्ममा स्थित हुन्छ। फेरि यस जन्ममरणरूप संसारमा उसले फर्कनु पर्दैन। अथवा अर्को शब्दमा भन्ने हो भने तप आदि अङ्गमा प्रतिष्ठित आत्मज्ञानको हेतुभूत यस ब्राह्मी उपनिषद्लाई जसले त्यसको आयतन सहित जान्दछ, उसले आफ्ना सम्पूर्ण धर्माधर्मलाई क्षय गरेर अनन्त स्वर्गलोकको सुख पाउँछ। अर्थात् ऊ दुःखरहित, आनन्दघन, अनन्त, अपार, महान् परब्रह्ममा प्रतिष्ठित हुन्छ। सम्पूर्ण वेदान्तवाक्यहरूद्वारा वेद्य ब्रह्मलाई आत्मभावले आत्मसात् गरेर उही ब्रह्ममा नै ऊ प्राप्त हुन्छ। *'ब्रह्मैव सन् ब्रह्माप्येति'* (बृ.उ.४।४।६) ऊ ब्रह्म भएर ब्रह्ममा नै प्राप्त हुन्छ भनेर अरू श्रुतिहरूले पनि भनेका छन्। अस्तु। श्रीकृष्णार्पणमस्तु।



# कठोपनिषद्

यस्मिन् सर्वं यतः सर्वं यः सर्वं सर्वदृक्तया ।
सर्वभावपदातीतं स्वात्मानं तं स्मराम्यहम् ॥

कठोपनिषद् कृष्णयजुर्वेदको कठशाखाको अन्तर्गत पर्दछ । यस उपनिषद्मा ब्रह्मविद्याको विशद चर्चा यम र नचिकेताका बीचमा एक आख्यायिकाका माध्यमबाट गरिएको छ । ज्ञानको क्षेत्रमा यस उपनिषद्को ठूलो महत्त्व छ । अत्यन्त सरल तथा सहज शैलीको माध्यमबाट ब्रह्मको दुरूह ज्ञान गराउने प्रयाश यस उपनिषद्ले गरेको छ ।

यस उपनिषद्मा शुरुबाट नै मुनि वाजश्रवस र उनका ५ वर्षका छोरा नचिकेताको आख्यायिका शुरु हुन्छ । ऋषि वाजश्रवसले एकपटक सर्वस्वदान गरिने विश्वजित् यज्ञ गरेका थिए । यसै प्रसङ्गबाट कठोपनिषद्को प्रथम अध्यायको प्रथम वल्ली शुरु गरिएको छ । जस्तै –

ॐ उशन्ह वै वाजश्रवसः सर्ववेदसं ददौ ।
तस्य ह नचिकेता नाम पुत्र आस ॥

अर्थात् यज्ञ गरेर यज्ञको फलको इच्छा गर्ने वाजश्रवाका पुत्र वाजश्रवसले विश्वजित् यज्ञ गरेका थिए । त्यस यज्ञमा उनले

आफ्नू सम्पूर्ण सम्पत्ति दान गरेका थिए । ती ब्राह्मणका नचिकेता नाम गरेका एउटा प्रसिद्ध पुत्र पनि थिए ।

जुन समयमा दक्षिणाका रूपमा गाईहरू दान गर्न लागिएको थियो त्यस समयमा आस्तिक्य बुद्धि भएका ती बालक नचिकेताले आफ्ना पिताले बूढी गाईहरू ब्राह्मणहरूलाई दान गर्न लागेको देखे । ती गाईहरू कस्ता थिए भन्ने सम्बन्धमा उपनिषद्ले यसरी वर्णन गरेको छ । जस्तै –

पीतोदका जग्धतृणा दुग्धदोहा निरिन्द्रियाः ।
अनन्दा नाम ते लोकास्तान्स गच्छति ता ददत् ॥

शब्दार्थ, पीतोदकाः – अन्तिम पटक पानी खाइसकेका, जग्धतृणाः – अन्तिम पटक घाँसखाइसकेका, दुग्धदोहाः – अन्तिम पटक दूध दुहिसकिएका अर्थात् बेतबसिसकेका, निरिन्द्रियाः–इन्द्रियहरू शिथिल भइसकेका अर्थात् बेतबसिसकेका, ता – त्यस्ता मर्न लागेका गाईहरू, ददत् – दान गर्ने, स – यजमान, अनन्दा नाम ते लोकास्तान् – कुनै प्रकारको पनि सुख नपाइने ती लोकहरूमा, गच्छति – जान्छ ।

पदार्थ :– दान दिन लागिएका ती बूढी गाईहरूले अन्तिम पटक पानी खाइसकेका थिए । ती बूढी गाईहरूले अन्तिम पटक घाँस खाइसकेका थिए । त्यसै गरेर ती गाईहरू बूढा भएर बेतबसिसकेका थिए । सारा इन्द्रियहरू शिथिल भएर मर्न लागेका गाईहरू दान गर्ने यजमान मरेपछि सुख प्राप्त नहुने अनन्द नाम गरेको लोकमा जान्छ ।

दान गर्नैनहुने त्यस्ता बूढी गाईहरू दान गर्न लागेको देखेपछि

ऋषिपुत्र नचिकेताले आफ्ना पितासँग 'मलाई कसलाई दान दिनु हुन्छ ?' भनेर दोहोऱ्याइ, तेहेऱ्याइ सोधेका थिए। उनका पिताले आजित हुँदै रिसाएर *'मृत्यवे त्वा ददामि'* अर्थात् म तिमीलाई मृत्युलाई दिन्छु भनेका थिए। वास्तवमा नचिकेता उनका पिताले गरेको विश्वजित् यज्ञ सफल होस् भन्ने चाहन्थे। उनका पिताले नचिकेताका लागि लैना र कोरली गाईहरू राखेर बूढी र बकेर्ना गाईहरू दान गरेको देखेर उनलाई राम्रो लागेको थिएन। त्यस दानबाट शुभ हुनेभन्दा अशुभ नै हुने कुरा नचिकेताले बुझेको कुरा उपनिषद्ले *'पितोदका जग्धतृणाः'* भन्ने मन्त्रबाट व्यक्त गरेको छ। तर सो कुरा नबुझेर वाजश्रवसले नचिकेतालाई यमलोक पठाएका थिए। पिताको आज्ञा अनुसार नचिकेता यमलोक गएका थिए। तर त्यसबेला यमराज बाहिर भएको हुँदा तीन दिनसम्म भोकै यमराजको प्रतीक्षा गरेर उनी यमलोकमा बसेका थिए। यमराज बाहिरबाट फर्किएपछि तीन दिनसम्म भोकै बसेको अतिथि नचिकेताको उनले विधिपूर्वक पूजा गरेर उनलाई सन्तुष्ट पार्न तीनओटा वर माग्न उहाँले भन्नुभएको थियो। जस्तै –

**तिस्रो रात्रीर्यदवात्सीर्गृहे मे अनश्नन्ब्रह्मन्नतिथिर्नमस्यः ।**
**नमस्तेऽस्तु ब्रह्मन्स्वस्ति मेऽस्तु तस्मात्प्रति त्रीन्वरान्वृणीष्व ॥**

शब्दार्थ, ब्रह्मन् – हे ब्राह्मणदेवता ! नमस्यः अतिथिः – तपाईं नमस्कार गर्न योग्य अतिथि हुनुहुन्छ। ते – तपाईंलाई मेरो, नमः अस्तु – नमस्कार छ। ब्रह्मन् – हे ब्रह्मन् !, मे – मेरो, स्वस्ति अस्तु – कल्याण होस्। यत् – तपाई जुन, तिस्रः – तीन, रात्री– रातहरूसम्म, मे – मेरा, गृहे – घरमा, अनश्नन् – नखाइकन

नै, अवात्सी – बस्नुभयो। तस्मात् – त्यसकारण, प्रति – प्रत्येक रातको साटो, त्रीन् वरान् – तीनओटा वरहरू, वृणीष्व – माग्नुहोस् ।

पदार्थ :– यमराज भन्दछन् – हे ब्रह्मन् ! म तपाईंलाई नमस्कार गर्दछु। मेरो कल्याण होस्। तपाईं आदरणीय अतिथि भएर पनि मेरा घरमा तीन रातसम्म भोकै बस्नुभयो। त्यसकारण तीन रात भोकै बसेको कारण प्रत्येक रातको एक एक वरका दरले तीन वर मसँग माग्नुहोस्।

त्यसपछि पितृभक्त नचिकेताले यमराजसँग प्रथम वर आफ्ना पिता वाजश्रवसको परितोषका लागि वर मागेका थिए। नचिकेताले दोस्रो वरका रूपमा स्वर्गसाधनभूत अग्निविद्याको इच्छा व्यक्त गरेका थिए। ती दुवैथरी वरहरू यमराजबाट प्राप्त भएपछि उनले तेस्रो आत्मज्ञानरूप वरदान मागेका थिए। जस्तै –

येयं प्रेते विचिकित्सा मनुष्येऽस्तीत्येके नायमस्तीति चैके ।
एतद्विद्यामनुशिष्टस्त्वयाहं वराणामेष वरस्तृतीयः ॥

अर्थात् मरेका मानिसका बारेमा विचार गरेर केही मान्छेहरू छ भन्छन् र केही मान्छेहरू छैन भनेर संशय गर्दछन्। हे भगवन् ! मलाई यस बारेमा स्पष्टसँग बताउनुहोस्। यही नै मलाई दिने तेस्रो वर हो।

त्यसरी अत्यन्त महत्त्वपूर्ण तर अत्यन्त दुरूह आत्मतत्त्व अर्थात् आत्मज्ञानका बारेमा उपदेश गर्ने वर मागेपछि धर्मराजले आत्मतत्त्वको उपदेशको साटो नचिकेतालाई नानाथरीका प्रलोभनहरू देखाएर टार्न खोज्नुभएको थियो। नचिकेता सानो बालक भएका हुँदा उनी साधन चतुष्टयसम्पन्न ब्रह्मज्ञानका उत्तम अधिकारी थिए

वा थिएनन् भन्ने कुरामा यमराजलाई शङ्का भएको हुनसक्तछ । त्यसैकारण यमराजले उनको धेरै लाम् परीक्षा गरेका थिए । आफ्नू परीक्षाबाट नचिकेता उत्तीर्ण भएपछि अन्ततोगत्त्वा धर्मराजले उनलाई उत्तम अधिकारी ठानेर ब्रह्मविद्याको विस्तारपूर्वक उपदेश गर्नुभएको थियो ।

कठोपनिषद्को द्वितीय वल्लीको शुरुदेखि नै श्रेयविद्या र प्रेयविद्याको विश्लेषण गर्दै अविद्याग्रस्त मान्छेको दुर्दशाको वर्णन यमराजले गर्नुभएको छ । जस्तै –

**अविद्यायामन्तरे वर्तमानाः स्वयं धीराः पण्डितम्मन्यमानाः ।**
**दन्द्रम्यमाणाः परियन्ति मूढा अन्धेनैव नीयमाना यथान्धाः ॥**

शब्दार्थ :– अविद्यायाम् – अविद्या अर्थात् अज्ञानका, अन्तरे – भित्र, वर्तमानाः – रहेर पनि, स्वयं धीराः – आफैँले आफैँलाई बुद्धिमान् र, पण्डितम् – विद्वान् समेत, मन्यमानाः – मान्ने भएका, मूढाः – मूर्खहरू, द्रन्द्रम्यमाणाः – चौरासी लाख योनिहरूमा, परियन्ति – दुःख पाएर घुमिरहन्छन् । यथा – जस्तै, अन्धेन एव नीयमानाः – अन्धाले डोऱ्याएर लगिएका, अन्धाः – अन्धाहरू ।

पदार्थ :– अविद्या अर्थात् अज्ञानका गहन अन्धकारभित्र बाँचेका ती मानिसहरू आफैँलाई अत्यन्त बुद्धिमान् र विद्वान् ठान्दछन् । ती अज्ञानरूपी घोर अँध्यारोमा रहेका मूर्ख भोगी मानिसहरू अन्धाले डोऱ्याएर लगिएका अन्धाहरूजस्तै दिग्भ्रान्त भएर यत्रतत्र दुःख पाएर घुमिरहन्छन्। त्यस्ता मूर्ख मान्छेहरू मरिसकेपछि चौरासी लाख योनिहरूमा घुमिरहन्छन् र थरीथरीका कष्टहरू भोगिरहन्छन् ।

उपर्युक्त मूढताको कारणलाई नै स्पष्ट पार्दै अर्को मन्त्रमा धर्मराज उपदेश गर्नुहुन्छ । जस्तै –

**न साम्परायः प्रतिभाति बालं प्रमाद्यन्तं वित्तमोहेन मूढम् ।**
**अयं लोको नास्ति पर इति मानी पुनः पुनर्वशमापद्यते मे ॥**

अर्थात् धनका लोभले अन्धा भएका र स्त्रीपुत्रादिमा नै आसक्त भएर रहेका त्यस्ता प्रमादी मूर्खहरूलाई परलोक अर्थात् मुक्तिको मार्ग कत्ति पनि थाहा हुँदैन । त्यस्ता प्रमादी मूर्खहरू यस लोकलाई मात्रै सत्य ठान्दछन् र परलोकलाई असत्य ठानेर छैन भन्दछन् । त्यस्ता अज्ञानी मूर्खहरू बारम्बार जन्मने र मर्ने गर्दछन् र तिनीहरू मेरा नै वशमा पर्दछन् । यो लोक प्रायः यसैप्रकारको हो ।

त्यसरी अज्ञानीले भोग्नुपर्ने दुर्दशाको वर्णन गरेपछि धर्मराज आत्मज्ञानको दुर्लभताको वर्णन गर्दै भन्नुहुन्छ –

**श्रवणायापि बहुभिर्यो न लभ्यः शृण्वन्तोऽपि बहवो यं न विद्युः ।**
**आश्चर्यो वक्ता कुशलोऽस्य लब्धाश्चर्यो ज्ञाताकुशलानुशिष्टः ॥**

अर्थात् सर्वप्रथम त यस आत्मतत्त्वका बारेमा धेरैजसो मान्छेहरूले सुन्ने अवसर नै पाउँदैनन् । केही गरी सुन्ने मौका पाइहाले भने पनि उनीहरूको अन्तःकरण अशुद्ध भएको कारण उनीहरू बुझ्न सक्तैनन् । त्यतिमात्रै होइन त्यस आत्मतत्त्वको वक्ता अर्थात् निरूपण गर्ने विद्वान्लाई पनि अनौठाको अथवा आश्चर्ययुक्त व्यक्ति नै मान्नुपर्दछ । किनभने जस्तोतस्तो सामान्य मान्छेले आत्मतत्त्वको बारेमा बोल्न नै सक्तैन । त्यस आत्मतत्त्वलाई प्राप्त गर्ने पनि कुनै निपुण अर्थात् उत्तम अधिकारी नै हुन्छ ।

सारांशमा भन्ने हो भने कुशल आचार्यले मात्रै आत्मतत्त्वको उपदेश गर्न सक्तछ र उत्तम अधिकारीले मात्रै उपदेशित आत्मतत्त्वलाई बुझ्न सक्तछ । अतः आत्मतत्त्वका वक्ता र श्रोता दुवैथरी आश्चर्यरूप नै हुन् ।

कैयौँ प्रकारले कल्पना गरिएको यो आत्मतत्त्वलाई साधारण बुद्धि भएको वक्ताले भन्दाखेरि राम्रोसँग बुझ्न सकिँदैन । अभेददर्शी आचार्यद्वारा उपदेश गरिने यस आत्मामा अस्ति र नास्ति कुनै पनि गति अर्थात् चिन्तन रहँदैन । किनभने आत्मा सम्पूर्ण विकल्पका गतिहरूभन्दा टाढा अर्थात् रहित छ । यो आत्मा सूक्ष्मभन्दा सूक्ष्म, दुर्विज्ञेय र अतर्क्य पनि हो ।

भगवान् धर्मराज नचिकेतालाई सम्बोधन गर्दै यो आत्मा कुनै पनि शुष्क तार्किकद्वारा गरिने तर्कद्वारा प्राप्त हुन योग्य छैन भन्दै 'नैषा तर्केण मतिरापनेया' भनेर भन्नुहुन्छ । धर्मराज ब्रह्मज्ञानका उत्तम अधिकारी नचिकेतासँग प्रसन्न हुँदै भन्नुहुन्छ– *'जानाम्यहं शेवधिरित्यनित्यम्'* अर्थात् कर्मफलरूप निधि अनित्य हो । अनित्य साधनहरूबाट त्यस नित्य आत्मालाई प्राप्त गर्न सकिँदैन । किनभने कर्म गरेर प्राप्त हुने फल अनित्य हुन्छ । नचिकेताको त्यागको प्रशंसा गर्दै यमराज आत्मज्ञानको फल बताउनुहुन्छ । जस्तै –

**तं दुर्दर्शं गूढमनुप्रविष्टं गुहाहितं गह्वरेष्ठं पुराणम् ।**
**अध्यात्मयोगाधिगमेन देवं मत्वा धीरो हर्षशोकौ जहाति ॥**

शब्दार्थ :– गूढम् – भित्ररहेको, अनुप्रविष्टम् – सर्वव्यापी, गुहाहितम् – सबै प्राणीहरूका हृदयरूपी गुफामा लुकेर बसेको, गह्वरेष्ठम् – अनेकौँ अनर्थहरूले घेरिएको स्थानमा रहने भएको,

पुराणम् – पुरातन अर्थात् सनातन, तम् – ती, दुर्दर्शम् – अत्यन्त मुश्किलसँग देख्न सकिने, देवम् – परमात्मालाई, धीरः – बुद्धिमान् पुरुष, अध्यात्मयोगाधिगमेन – चित्तलाई विषयहरूबाट हटाएर आत्मामा लगाएर अर्थात् अध्यात्म योगद्वारा, मत्वा – जानेर, हर्षशोकौ – हर्ष र शोकलाई, जहाति – छोड्दछ ।

पदार्थ :– त्यो आत्मालाई अत्यन्त मुश्किलले मात्रै देख्न सकिन्छ । त्यो आत्मा अत्यन्त गुप्तस्थान बुद्धिभित्र बस्तछ । त्यस पुरातन तथा सनातन आत्मदेवलाई अध्यात्मयोग अर्थात् मनबुद्धिलाई विषयबाट हटाएर निरन्तर उसैको चिन्तन गरेर उसलाई धीर अर्थात् बुद्धिमान् पुरुषले प्राप्त गर्दछ । त्यसपछि उसले समभाव प्राप्त गर्दछ र हर्षशोकलाई परित्याग गर्दछ ।

त्यति उपदेश गरेपछि यमराज नचिकेताको मोक्षको द्वार खुलेको घोषणा गर्नु हुन्छ । त्यसपछि नचिकेता सर्वातीतवस्तुविषयक प्रश्न यमराजसँग गर्दछन् । जस्तै –

अन्यत्र धर्मादन्यत्राधर्मादन्यत्रास्मात्कृताकृतात् ।
अन्यत्र भूताच्च भव्याच्च यत्तत्पश्यति तद्वद ॥

शब्दार्थ :– जुन परमात्मालाई, धर्मात् अन्यत्र – धर्मभन्दा पर, अधर्मात् अन्यत्र – अधर्मभन्दा पर, च – र, अस्मात् – यस, कृताकृतात् – कार्य र कारणरूप सम्पूर्ण संसारभन्दा पनि, अन्यत्र – फरक, च – र, भूतात् भव्यात् – भूत, वर्तमान र भविष्यत्भन्दा पनि, अन्यत्र – भिन्नै, पश्यसि – तपाईं देख्नुहुन्छ भने, तत् – त्यो कुरा, वद – भन्नुहोस् ।

पदार्थ :– जुन धर्म अर्थात् शास्त्रीय धर्मानुष्ठानभन्दा फरक

छ। जुन अधर्मभन्दा भिन्नै छ। जुन कार्य र कारण अर्थात् स्थूल र सूक्ष्म प्रपञ्चभन्दा फरक छ। त्यतिमात्र नभएर जुन भूतकाल, वर्तमानकाल र भविष्यत्काल तीनै कालबाट परिच्छिन्न छैन। त्यसप्रकारले सम्पूर्ण व्यवहार विषयदेखि अतीत सर्वव्यापक कुनै वस्तु तपाईं देख्नुहुन्छ भने त्यो मलाई भन्नुहोस्।

उपर्युक्त प्रकारले जिज्ञासु नचिकेताले प्रश्न गरेपछि यमराजले विस्तारपूर्वक ॐकार अर्थात् अक्षर ब्रह्मका बारेमा बताउनुभएको थियो। त्यसै सन्दर्भमा आत्मस्वरूपको निरूपण गर्ने सन्दर्भमा 'न जायते म्रियते' भन्ने मन्त्रको उल्लेख गर्दै आत्मा उत्पन्न हुँदैन, आत्मा मर्दैन भन्ने आदि कुराको व्याख्या गरेर आत्मा अजर र अमर भएको कुरा श्रुतिले बताएको छ। यी कुराहरू कठोपनिषद्को द्वितीय वल्लीका १८ र १९ औँ मन्त्रहरूले बताएका छन्। यसपछि मुमुक्षु पुरुषले आत्मालाई कुन रूपमा जान्नुपर्दछ भन्ने सम्बन्धमा उपनिषद् अगाडिको मन्त्रमा भन्दछ। जस्तै –

**अणोरणीयान्महतो महीयानात्मास्य जन्तोर्निहितो गुहायाम्।**
**तमक्रतुः पश्यति वीतशोको धातुप्रसादान्महिमानमात्मनः ॥**

अर्थात् यो आत्मा अणुभन्दा पनि अणुतर छ र महान्भन्दा पनि महत्तर छ। त्यही आत्मा जीवका हृदयरूपी गुफामा अवस्थित छ। निष्काम पुरुष आफ्ना इन्द्रियहरूका प्रसादद्वारा त्यस आत्मालाई साक्षात्कार गर्दछ र शोकरहित बन्दछ।

उपर्युक्त वर्णन गरिएको परमात्मा सकाम प्राकृत पुरुषका लागि अत्यन्त दुर्विज्ञेय भएको कुरा यस उपनिषद्ले बताएको छ। जस्तै –

**आसीनो दूरं व्रजति शयानो याति सर्वतः ।**
**कस्तं मदामदं देवं मदन्यो ज्ञातुमर्हति ॥**

अर्थात् त्यो आत्मा बसेर पनि टाढासम्म जान्छ । सुतेर पनि सबैतिर पुग्दछ । हर्षले युक्त र मदले रहित त्यस आत्मालाई मदेखि बाहेक अरू कसले जान्दछ ? अर्थात् संयमी आत्मज्ञानीले मात्रै आत्मालाई जान्दछ ।

आत्मसाक्षात्कार गरिसकेपछि आत्मज्ञानी सम्पूर्ण शोकबाट पारि तर्दछ । त्यस आत्मालाई ज्ञानीले शरीरमा शरीररहित र अनित्यमा नित्य स्वरूपका रूपमा देख्तछ । त्यस्तो आत्मा केवल जिज्ञासुले आफ्ना नानाथरीका प्रयासले मात्रै प्राप्त गर्न सक्तैन । यसका लागि आत्मकृपाको पनि आवश्यकता पर्दछ । त्यही कुराको रहस्य खोल्दै उपनिषद् भन्दछ –

**नायमात्मा प्रवचनेन लभ्यो न मेधया न बहुना श्रुतेन ।**
**यमेवैष वृणुते तेन लभ्यस्तस्यैष आत्मा वृणुते तनूं स्वाम् ॥**

शब्दार्थ :– अयम् आत्मा – यो आत्मा, प्रवचनेन – प्रवचनबाट, न लभ्यः – प्राप्त हुन सक्तैन । मेधया – बुद्धिबाट, न लभ्यः–प्राप्त हुन सक्तैन, बहुना श्रुतेन – धेरै सुनेर पढेर पनि, न लभ्य– प्राप्त हुन सक्तैन, तर एष – यसलाई, यम् – जसले, वृणुते – स्वीकार गर्दछ, तेन एव – त्यसैले नै, लभ्य – प्राप्त गर्दछ । एष– यो, आत्मा – आत्मा, तस्य – उसैका लागि, स्वाम् तनूम्– आफ्नो यथार्थ स्वरूप विवृणुते – प्रकट गर्दछ ।

पदार्थ :– यो आत्मा वेदको अध्ययन गरेर प्राप्त हुन सक्तैन । यो आत्मा धारणा शक्ति अथवा धेरै सुनेर पनि प्राप्त हुनसक्तैन ।

त्यस साधकले जुन आत्मालाई वरण गर्दछ त्यसैबाट नै आत्मा प्राप्त हुन्छ । आत्मकृपा प्राप्त भएपछि मात्रै जीवले आत्मसाक्षात्कार गर्नसक्तछ । अर्थात् साधकका लागि आत्माले आफ्नू स्वरूपलाई प्रकट गरिदिन्छ ।

आत्मज्ञानको अधिकारी हुन नसक्ने पुरुषको वर्णन गर्दै श्रुति भन्दछ –

नाविरतो दुश्चरितान्नाशान्तो नासमाहितः ।
नाशान्तमानसो वापि प्रज्ञानेनैनमाप्नुयात् ॥

अर्थात् जुन पुरुष पापकर्महरूबाट निवृत्त भएको छैन, जसका इन्द्रियहरू शान्त भएका छैनन्, जुन व्यक्ति असमाहित छ, जसको चित्त शान्त छैन, त्यस्ता व्यक्तिले आत्मा प्राप्त गर्न सक्तैन ।

यस वल्लीको अन्तिम मन्त्रमा आत्माको सर्वशक्तिमत्ताको वर्णन गर्दै श्रुति भन्दछ –

यस्य ब्रह्म च क्षत्रं च उभे भवत ओदनः ।
मृत्युर्यस्योपसेचनं क इत्था वेद यत्र सः ॥

शब्दार्थ :– यस्य – जुन परमात्माको, ब्रह्म च क्षत्रम् च उभे – ब्राह्मण र क्षत्रिय दुवै नै, ओदनः – भात, भवतः – हुन्छन् । मृत्युः – सर्वसंहारक काल, यस्य – जसको, उपसेचनम् – सित्तन, भवति – हुन्छ, सः यत्र – जहाँ त्यसलाई, इत्था – जस्तो छ ठीक ठीक उस्तै छ भनेर, कः – कसले, वेद – जान्दछ ।

पदार्थ :– जुन परमात्मा धर्मरक्षक ब्राह्मणलाई र प्रजारक्षक शक्तिशाली क्षत्रियलाई पनि भात खाएझैं खान्छ । सर्वभक्षक

मृत्युलाई पनि त्यो परमात्मा मान्छेले भात खाँदाखेरि दाल, तिहुन र अचार खाएझैँ गरेर सजिलैसँग खाइदिन्छ । मृत्यु पनि जसलाई पर्याप्त आहार हुँदैन । त्यस्तो परमात्मा परब्रह्मलाई सामान्य अनधिकारी पुरुषले कसरी जान्न सक्तछ ? अर्थात् जान्नसक्तैन ।

कठोपनिषद्को प्रथम अध्यायको तेस्रो वल्लीमा 'ऋतं पिबन्तौ' भन्ने प्रथम मन्त्रदेखि लिएर अन्तिम १७ औँ मन्त्र 'य इमं परमं गुह्यम्' सम्म समाविष्ट छन् । यस वल्लीमा पनि प्रथम र द्वितीय वल्लीमा जस्तै अत्यन्त महत्त्वपूर्ण मन्त्रहरू आएका छन् । यसका पनि धेरैजसो मन्त्रहरू श्रीमद्भगवद्गीता, महाभारत र अरू पुराणहरूमा पनि कहीँ अक्षरशः र कहीँ केही शब्दहरू बदलेर समावेश गरिएका पाइन्छन् । यस उपनिषद्का मन्त्रहरू ब्रह्मज्ञान अर्थात् आत्मसाक्षात्कारका लागि अत्यन्त महत्त्वपूर्ण छन् ।

मोक्षकामी पुरुषले आफ्नो शरीरलाई मोक्षका तर्फ परिचालन गर्नुपर्दछ । यो शरीर साधन हो र साध्य आत्मलाभ नै हो । यसैकुरालाई उत्प्रेक्षाका रूपमा उपनिषद्ले यसरी वर्णन गरेको छ –

**आत्मानं रथिनं विद्धि शरीरं रथमेव तु ।**
**बुद्धिं तु सारथिं विद्धि मनः प्रग्रहमेव च ॥**

अर्थात् हे नचिकेता ! तिमी आत्मालाई रथीका रूपमा जान, शरीरलाई रथ संझ, बुद्धिलाई सारथी र मनलाई लगाम बुझ ।

**इन्द्रियाणि हयानाहुर्विषयान्तेषु गोचरान् ।**
**आत्मेन्द्रियमनोयुक्तं भोक्तेत्याहुर्मनीषिणः ॥**

अर्थात् जान्ने विद्वान्हरू इन्द्रियहरूलाई घोडा भन्दछन् । ती जाने ठाउँलाई विषय भन्छन् र शरीर, इन्द्रिय र मन सहितको

आत्मालाई भोक्ता भन्दछन् ।

यसरी रूपकद्वारा आत्मालाई भोक्ताका रूपमा वर्णन गरेपछि अब उपनिषद् परमपदको वर्णन गर्दछ –

विज्ञानसारथिर्यस्तु मनः प्रग्रहवान्नरः ।
सोऽध्वनः पारमाप्नोति तद्विष्णोः परमं पदम् ॥

अर्थात् जुन मान्छे विवेकयुक्त बुद्धिरूपी सारथीले युक्त छ भने त्यस्तो पुरुष मनलाई वशमा राख्न सक्ने हुन्छ । ऊ यस संसारबाट पार भएर विष्णुलोक अर्थात् परमपदमा पुग्दछ ।

यसैगरेर इन्द्रियादिको तारतम्यको वर्णन गर्दै उपनिषद्को अर्को मन्त्रले भन्दछ–

इन्द्रियेभ्यः परा ह्यर्था अर्थेभ्यश्च परं मनः ।
मनसस्तु परा बुद्धिर्बुद्धेरात्मा महान्परः ॥
महतः परमव्यक्तमव्यक्तात्पुरुषः परः ।
पुरुषान्न परं किञ्चित्सा काष्ठा सा परा गतिः ॥

अर्थात् इन्द्रियहरूभन्दा विषयहरू श्रेष्ठ छन् । विषयभन्दा मन, मनभन्दा बुद्धि, बुद्धिभन्दा महत्तत्त्व उत्कृष्ट छ । त्यसपछि महत्तत्त्वभन्दा मूल प्रकृति र त्यसभन्दा पुरुष परछ । पुरुषभन्दा पर केही छैन । त्यो परमात्मा नै पराकाष्ठा र परागतिसमेत हो ।

उपर्युक्त अनुसारको अत्यन्त सूक्ष्म परमात्मतत्त्वलाई साक्षात्कार गर्नका लागि त्यसैप्रकारको साधनको आवश्यकता पर्ने कुराको उल्लेख गर्दै मन्त्र अगाडि भन्दछ –

**एष सर्वेषु भूतेषु गूढोत्मा न प्रकाशते ।**
**दृश्यते त्वग्रया बुद्धया सूक्ष्मया सूक्ष्मदर्शिभिः ॥**

अर्थात् सम्पूर्ण भूतहरूमा लुकेर रहेको यो आत्मा बाहिर प्रकाशमान हुँदैन । यस आत्मालाई ता सूक्ष्मदर्शी पुरुषहरूले आफ्ना तीव्र र सूक्ष्म बुद्धिद्वारा देख्तछन् ।

यस वल्लीका अन्त्यमा श्रुति उद्‌बोधनका साथै निर्विशेष आत्मज्ञानद्वारा अमृतत्व प्राप्तिको उपाय पनि बताउँदछ । जस्तै–

**उत्तिष्ठत जाग्रत प्राप्य वरान्निबोधत ।**
**क्षुरस्य धारा निशिता दुरत्यया दुर्गं पथस्तत्कवयो वदन्ति ॥**

अर्थात् अविद्याग्रस्त मानिसहरूलाई सम्बोधन गर्दै उपनिषद् भन्दछ – हे उठ ! अज्ञान निद्राबाट जागा होऊ, श्रोत्रिय ब्रह्मनिष्ठ गुरुकहाँ गएर ब्रह्मज्ञान प्राप्त गर । ज्ञानमार्गको बाटो अत्यन्त लाग्ने क्षुराको धारजस्तै हिँड्न कठिन हुने भएको कुरा तत्त्वज्ञानी बताउँदछन् । आत्मालाई सुन्न सकिँदैन, छुन सकिँदैन र देख्न पनि सकिँदैन । त्यो अव्यय, रसहीन, नित्य र गन्धरहित छ । त्यो आत्मा अनादि, अनन्त, महत्तत्त्वभन्दा पर छ र निश्चल पनि छ । त्यस आत्मतत्त्वलाई जानेर अर्थात् आत्मज्ञान गरेर मुमुक्षु आत्मज्ञानी मृत्युका मुखबाट सधैँका लागि मुक्त हुन्छन् ।

यसपछि दोस्रो अध्यायको पहिलो वल्ली शुरु हुन्छ । सामान्य जिज्ञासुले आत्मज्ञान गर्न नसक्ने कुराको उल्लेख गरेको छ, किन भने मानिसका इन्द्रियहरूलाई बाहिरतर्फ ब्रह्माजीले फर्काइदिनु भएको छ । त्यसै हुँदा मानिसले भित्र रहेको आत्मालाई देख्न सक्तैन । कुनै कुनै इन्द्रिय संयमी धीर पुरुषले मात्रै देख्न सक्तछ –

**पराञ्चि खानि व्यतृणत्स्वयम्भूस्तमात्पराङ्पश्यति नान्तरात्मन् ।**
**कश्चिद्धीरः प्रत्यगात्मानमैक्षदावृत्तचक्षुरमृतत्वमिच्छन् ॥**

तर अल्पज्ञ पुरुषहरू बाह्य अर्थात् विषयभोगका पछाडि लागिरहन्छन् । त्यस्ता मान्छेहरू सर्वत्र व्याप्त मृत्युका पाशोमा पर्दछन् । तर विवेकी पुरुषहरू भने आत्मतत्त्वलाई जानेर अनित्य सांसारिक पदार्थहरूको इच्छा गर्दैनन् । भेददृष्टिको निन्दा गर्दै श्रुति भन्दछ । जस्तै –

**यदेवेह तदमुत्र यदमुत्र तदन्विह ।**
**मृत्योः स मृत्युमाप्नोति य इह नानेव पश्यति ॥**

अर्थात् सम्पूर्ण भूतप्राणीमा ब्रह्मदृष्टि राख्ने कुराको वर्णन गरिसकेपछि भेददृष्टि राख्नेहरूको निन्दा गर्दै श्रुतिले भनेको छ – जुन तत्त्व यस संसारमा छ त्यही तत्त्व नै परलोकमा पनि छ । यसरी नबुझेर जसले आत्मालाई नाना देख्तछ, त्यसले मृत्युबाट मृत्यु प्राप्त गर्दछ । अर्थात् जन्ममृत्युको दुश्चक्रमा परेर त्यस्तो भेददर्शी संसारमा घुमिरहन्छ । यस आत्मतत्त्वलाई मनले मात्रै प्राप्त गर्न सकिन्छ । यस ब्रह्मतत्त्वमा नाना केही पनि छैन । तर पनि जुन पुरुषले नाना देख्तछ । त्यस्तो पुरुष मृत्युबाट मृत्युमा नै प्राप्त हुन्छ । त्यस्तो मान्छे जन्ममृत्युका दुश्चक्रमा सधैँ घुमिरहन्छ ।

त्यो अविज्ञेय ब्रह्मलाई कसरी जान्ने भन्ने सम्बन्धमा अर्को मन्त्रले भन्दछ –

**अङ्गुष्ठमात्रः पुरुषो मध्य आत्मनि तिष्ठति ।**
**ईशानो भूतभव्यस्य न ततो विजुगुप्सते ॥**

**अङ्गुष्ठमात्रः पुरुषो ज्योतिरिवाधूमकः ।**
**ईशानो भूतभव्यस्य स एवाद्य स उ श्वः ॥**

अर्थात् जुन अङ्गुष्ठपरिमाणको पुरुष शरीरका मध्यमा रहेको छ। त्यो पुरुष धूमरहित ज्योतिजस्तो छ। त्यस पुरुषलाई भूत, वर्तमान, भविष्यको शासक र आफूसँग सधैँ साथ रहने जानेर ज्ञानी शोक गर्दैन, शरीरमा मोह राख्दैन र त्यसै तत्त्वलाई ऊ ब्रह्म हो भनेर जान्दछ।

अभेददर्शनको कर्तव्यताको वर्णन गर्दै यस वल्लीको अन्तिम मन्त्रद्वारा यमराज नचिकेतालाई भन्नुहुन्छ –

**यथोदकं शुद्धे शुद्धमासिक्तं तादृगेव भवति ।**
**एवं मुनेर्विजानत आत्मा भवति गौतम ॥**

अर्थात् जसरी शुद्ध पानीमा हालेको अर्को शुद्ध पानी उस्तै नै हुन्छ। त्यसरी नै हे ब्रह्मन् ! ज्ञानीको आत्मा पनि त्यस्तै विशुद्ध हुन्छ र परब्रह्ममा एकाकार हुनपुग्दछ।

दोस्रो अध्यायको दोस्रो वल्लीमा प्रकारान्तरले ब्रह्मतत्त्व निर्धारण गर्नेतर्फ उपनिषद् अग्रसर भएको छ। त्यस नित्यविज्ञानस्वरूप अजन्मा आत्माको निवासस्थान एघार ढोका भएको पुर हो। ती एघार ढोकाहरूमा दुइटा आँखा, दुइटा कान, दुइटा नाकका पुआल, एउटा नाइटो, अर्को मस्तक, शिश्न र गुदद्वार समेत पर्न आउँछन्।

त्यस्तो नित्य विज्ञानस्वरूप आत्माको ध्यान गरेपछि मान्छे शोक गर्दैन। त्यस्तो मान्छे जीवनकालमा नै कर्मबन्धनबाट मुक्त हुन्छ। त्यस्तो मान्छे निश्चय नै ब्रह्म हो। मानिस कसरी र केको आधारमा बाँच्तछ त ? भन्ने सम्बन्धमा अगाडिको ऋचा भन्दछ –

**न प्राणेन नापानेन मर्त्यो जीवति कश्चन ।**
**इतरेण तु जीवन्ति यस्मिन्नेतावुपाश्रितौ ॥**

अर्थात् कुनै पनि मान्छे अर्थात् देहधारी न त प्राणले बाँच्तछ, न त अपानले जीवित रहन्छ । तर जसमा यी प्राण र अपान आश्रित छन्, त्यसै ब्रह्मबाट नै प्राणी जीवित रहन्छ । किनभने त्यो सर्वान्तरयामी ब्रह्म असंहत र संहत प्राणादिको आश्रय पनि हो ।

मरणोत्तरकालमा हुने जीवको गतिको बयान गर्दै नचिकेतालाई यमराजले भनेको गोप्य कुरा उपनिषद्ले दोस्रो वल्लीका ६,७ र ८ ऋचाहरूद्वारा विस्तार गरेको छ । सबैको आधार भएको गुह्य ब्रह्मको उपदेश गरिसकेपछि श्रुति आत्माका विभिन्न प्रकारका उपाधिहरूका बारेमा बताउँछ –

**अग्निर्यथैको भुवनं प्रविष्टो रूपं रूपं प्रतिरूपो बभूव ।**
**एकस्तथा सर्वभूतान्तरात्मा रूपं रूपं प्रतिरूपो बहिश्च ॥**
**वायुर्यथैको भुवनं प्रविष्टो रूपं रूपं प्रतिरूपो बभूव ।**
**एकस्तथा सर्वभूतान्तरात्मा रूपं रूपं प्रतिरूपो बभूव ॥**

अर्थात् जसरी सम्पूर्ण लोकमा प्रविष्ट भएका अग्नि र वायु प्रत्येक रूपका अनुरूप भएर रहन्छन् । त्यसैगरेर सम्पूर्ण भूतहरूका एउटै अन्तरात्मा प्रत्येक रूप अनुरूप भएर रहेको छ र त्यो आत्मा बाहिर पनि छ ।

आत्माको असङ्गतताको वर्णन गर्दै उपनिषद् भन्दछ । जस्तै –

**सूर्यो यथा सर्वलोकस्य चक्षुर्न लिप्यते चाक्षुषैर्वाह्यदोषैः ।**
**एकस्तथा सर्वभूतान्तरात्मा न लिप्यते लोकदुःखेन बाह्यः ॥**

शब्दार्थ :– यथा – जसरी, सर्वलोकस्य – सम्पूर्ण ब्रह्माण्डका, चक्षुःसूर्य – प्रकाशक सूर्य देवता, चाक्षुषैः – आँखा सम्बन्धी, बाह्यदोषैः – बाहिरी दोषले, न लिप्यते – लिप्त हुँदैनन् । तथा – त्यस्तै, सर्वभूतान्तरात्मा – सबै प्राणीका अन्तरात्मा भएका परमात्मा, एकः – एकमात्र छन् । लोक दुःखेन – प्राणीहरूको अध्यासरूपी दुःखद्वारा, नलिप्यते – लिप्त हुँदैनन् ।

अर्थात् जसरी सम्पूर्ण लोकका नेत्र भएर पनि सूर्य भगवान्लाई प्राणीहरूका नेत्रसम्बन्धी बाहिरी दोषले छुन सक्तैन । अर्थात् सूर्य सबैका प्रकाशक भए तापनि उनी आफूले प्रकाशित गरेका वस्तुहरूमा लिप्त हुँदैनन् । त्यसै गरेर सम्पूर्ण भूतप्राणीहरूका एकमात्र अन्तरात्मा भएर पनि उनीहरूका सुखदुःखादि दोषहरूले आत्मालाई छुन सक्तैन । अर्थात् प्राणीहरूका कर्मजन्य दोषहरूमा आत्मा टाँसिदैन । आत्मा तीदेखि बाहिर तटस्थ भएर नै रहन्छ ।

आत्मदर्शी पुरुषलाई नित्य सुख हुने कुराको वर्णन गर्दै अगाडि भन्दछ –

**एको वशी सर्वभूतान्तरात्मा एकं रूपं बहुधा यः करोति ।**
**तमात्मस्थं येऽनुपश्यन्ति धीरास्तेषां सुखं शाश्वतं नेतरेषाम् ॥**
**नित्योऽनित्यानां चेतनश्चेतनानामेको बहूनां यो विदधाति कामान् ।**
**तमात्मस्थं येऽनुपश्यन्ति धीरास्तेषां शान्तिः शाश्वती नेतरेषाम् ॥**

अर्थात् सबैलाई आफ्ना अधीनमा राख्ने र सम्पूर्ण भूतप्राणीहरूको अन्तरात्मा भएको उही एक रूपको परमात्मा आफूलाई अनेक प्रकारको रूपमा परिणत गर्दछ । त्यो आत्मदेव अनित्य पदार्थहरूमा नित्यस्वरूप हो । ब्रह्म चेतनहरूको चेतन हो । ऊ एक्लैले अनेकौं

कामनाहरू पूरा गर्दछ। त्यस आत्मदेवलाई जुन धीर पुरुषले देख्तछ त्यसलाई नित्य सुख प्राप्त हुन्छ, अरूलाई प्राप्त हुँदैन।

सर्वप्रकाशक आत्मस्वरूप ब्रह्मको सर्वप्रकाशकत्वको चर्चा गर्दै कठोपनिषद्को दोस्रो अध्यायको दोस्रो वल्लीको अन्तिम मन्त्रले भनेको छ –

**न तत्र सूर्यो भाति न चन्द्रतारकं नेमा विद्युतो भान्ति कुतोऽयमग्निः।**
**तमेव भान्तमनुभाति सर्वं तस्य भासा सर्वमिदं विभाति॥**

अर्थात् त्यस आत्मलोकमा सूर्य प्रकाशित हुँदैनन्, चन्द्रमा र ताराहरू पनि प्रकाशित हुँदैनन् भने यस अग्निको त प्रकाशित हुने सामर्थ्य नै छैन। उसै परमात्मा परब्रह्मका प्रकाशले नै सम्पूर्ण प्रकाशित हुन्छन् र भासमान देखिन्छन्। जसरी सूर्यले सम्पूर्ण चराचरलाई प्रकाशित गर्दछन्। त्यसैगरेर सूर्य लगायत सम्पूर्ण चम्कने वस्तुलाई ब्रह्मले आफ्नू प्रकाश दिएर प्रकाशशील बनाएका छन्।

कठोपनिषद्को दोस्रो अध्यायको अन्तिम तेस्रो वल्ली संसाररूप अश्वत्थवृक्षको वर्णनबाट शुरु भएको छ। जस्तै –

**ऊर्ध्वमूलोऽवाक्शाख एषोऽश्वत्थः सनातनः।**
**तदेव शुक्रं तद्ब्रह्म तदेवामृतमुच्यते॥**
**तस्मिँल्लोकाः श्रिताः सर्वे तदु नात्येति कश्चन। एतद्वै तत्॥**

अर्थात् मूल माथितिर र हाँगा तलतिर गएको त्यो पिप्पल सनातन अर्थात् अनादि हो। त्यो नै विशुद्ध ज्योतिःस्वरूप हो। त्यो नै ब्रह्म हो र त्यसैलाई अमृत भनिन्छ। सारा संसार त्यसैमा अडेको

छ। कसैले पनि त्यसलाई नाघ्न सक्तैनन्। त्यो नै ब्रह्म हो।

उपर्युक्त अनुसार अश्वत्थरूप सनातन ब्रह्मको वर्णन गरेपछि पूर्वपक्षीको नकारात्मक शङ्कालाई प्रत्याख्यान गर्दै श्रुतिले यो सम्पूर्ण चराचर सृष्टि उसै सत्स्वरूप प्राण ब्रह्ममा उदित भएर उसैबाट चेष्टा गरिरहेको कुरा बताउँदै त्यो ब्रह्म महान् भयरूप र उज्याएको वज्रजस्तो भएको कुरा पनि बताएको छ। त्यस्तो अन्तःकरणका वृत्तिहरूको साक्षी भएको ब्रह्मलाई जसले जान्दछ, त्यसको मुक्ति हुन्छ। त्यस्तो वज्र उठाएर बसेजस्तो ब्रह्मका डरले यो संसार कसरी चलिरहेको छ त भन्ने सन्दर्भमा अगाडिका मन्त्रले भन्दछ –

**भयादस्याग्निस्तपति भयात्तपति सूर्यः।**
**भयादिन्द्रश्च वायुश्च मृत्युर्धावति पञ्चमः॥**

शब्दार्थ :– अस्य भयात् – यसै ब्रह्मका डरले, अग्निः तपति – आगो बल्दछ। यसै ब्रह्मका भयात् त्रासले, सूर्यः तपति – सूर्य चम्किन्छन्, च – त्यसैगरेर, अस्य भयात् – ब्रह्मका डरले, इन्द्रश्च– इन्द्र र, वायुश्च – वायु, अनि पञ्चमः मृत्युः – पाँचौँ मृत्यु पनि, धावति – आआफ्ना काममा अहोरात्र प्रवृत्त भइरहन्छन्।

पदार्थ – यस परमेश्वर परब्रह्मका डरले अग्नि तातो बन्दछन्, सूर्य चम्कँदै संसारमा घुमिरहन्छन्, इन्द्र, वायु, र पाँचौँ मृत्यु पनि आफ्नू काममा अहोरात्र प्रवृत्त भइरहन्छन्।

त्यस्तो सर्वाश्रय र सर्वनियन्ता परब्रह्मको ज्ञान नभईकन अर्थात् ब्रह्मसाक्षात्कार नगरीकन कुनै पनि मनुष्यको मृत्यु भएमा

त्यसले फेरि जन्मनु पर्छ। अतः बुद्धिमान् पुरुषले वर्तमान यो शरीरको पतन हुनुभन्दा पहिले जतिसक्यो चाँडो ब्रह्मज्ञान गरिहाल्नु पर्दछ। यस उपनिषद्को यस ऋचाले सोही कुराको सङ्केत गरेको छ। जस्तै –

इह चेदशकद्बोद्धुं प्राक्शरीरस्य विस्रसः।
ततः सर्गेषु लोकेषु शरीरत्वाय कल्पते ॥

ब्रह्मदर्शन अर्थात् ब्रह्मसाक्षात्कार गर्न मनुष्यजीवन अत्यन्त उपयोगी भएको कुरा यस श्रुतिले कण्ठत उद्घोष गरेको छ। जसरी स्वच्छ ऐनामा प्रष्ट आफ्नू अनुहार देख्न सकिन्छ, त्यसैगरेर निर्मल बुद्धिमा आत्माको स्पष्ट दर्शन गर्न सकिन्छ। तर यसको प्रतिकूल सपनामा, पितृलोकमा, जलमा र गन्धर्वलोकमा पनि आत्माको स्पष्ट दर्शन अर्थात् भान हुन सक्तैन। तर ब्रह्मलोकमा भने छाया र प्रकाश झैँ गरेर त्यो परमात्मतत्त्व सर्वथा स्पष्टरूपमा अनुभूत हुन्छ। स्पष्टरूपमा परब्रह्मको अनुभूति गर्न ब्रह्मलोक अत्यन्त दुष्प्राप्य भएको हुँदा यसै जन्ममा यसै मनुष्यलोकमा नै ब्रह्म–साक्षात्कारका लागि जीवित छँदैखेरि प्रयत्न गरिहाल्नु पर्दछ।

परब्रह्मको दर्शन गर्नलाई उसका कुनै ज्ञापक चिन्ह नभएका हुँदा उसको दर्शन कसरी गर्ने भन्ने सम्बन्धमा अर्को मन्त्रले भन्दछ –

न संदृशे तिष्ठति रूपमस्य न चक्षुषा पश्यति कश्चनैनम्।
हृदा मनीषा मनसाभिक्लृप्तो य एतद्विदुरमृतास्ते भवन्ति ॥

अर्थात् यस आत्मालाई आँखाले कसैले देख्न सक्तैन। किनभने यो आँखाको विषय होइन। यो आत्मा मनलाई नियमन गर्ने र

हृदयमा आश्रित रहेको बुद्धिद्वारा मननरूप सम्यग्दर्शनबाट नै हुन्छ । यी सबै कुरालाई छोडेर जसले यसलाई ब्रह्मरूपबाट जान्दछन्, ती अमर हुन्छन् ।

माथि उल्लेख भएको ब्रह्मज्ञानीले नै परमपद प्राप्त गर्ने कुरामा फेरि उपनिषद् भन्दछ । त्यो अवस्था भनेको जुन समय पाँचै ज्ञानेन्द्रियहरू मन सहित आत्मामा गएर अवस्थित हुन्छन् र बुद्धिले पनि कुनै काम गर्दैन, त्यसै अवस्थालाई परमगति भन्दछन् । त्यसपछि मात्रै मरणधर्मा मान्छे अमर हुन्छ । जस्तै –

यदा सर्वे प्रमुच्यन्ते कामा येऽस्य हृदि श्रिताः ।
अथ मर्त्योऽमृतो भवत्यत्र ब्रह्म समश्नुते ॥

अर्थात् जुनबेला हृदयमा आश्रित भएर रहेका सम्पूर्ण कामनाहरू जसका समाप्त भएर जान्छन्, त्यसैबेला नै त्यो मरणधर्मा मान्छे अमर हुन्छ । त्यस्तो मान्छे यसै शरीरबाट नै ब्रह्मभावमा प्राप्त हुन्छ ।

कठोपनिषद्मा ब्रह्मप्राप्तिका विभिन्न साधनहरूको उल्लेख गरिएको छ । तीमध्ये नचिकेतालाई यमराजले अग्निविद्याको उपदेश पनि गर्नुभएको छ । त्यसै अग्निविद्याको फलको उल्लेख गर्दै उपनिषद् भन्दछ –

शतं चैका च हृदयस्य नाड्यस्तासां मूर्धानमभिनिःसृतैकाः ।
तयोर्ध्वमायन्नमृतत्वमेति विष्वङ्ङन्या उत्क्रमणे भवन्ति ॥

शब्दार्थ :– हृदयस्य – हृदयका, शतम् च एका च – एक सय एक, नाड्यः – नाडीहरू छन्, तासाम् – तीमध्ये, एका – एक,

मूर्धानम्– कपालतिर, अभिनिःसृता – गएको छ, तया – त्यसैबाट, ऊर्ध्वम् – माथिका लोकमा, आयन् – गएर, अमृतत्वम्– अमृतभावलाई, एति– प्राप्त गर्दछ । अन्याः – अरू एक सय नाडीहरू, उत्क्रमणे – मरणकालमा जीवलाई, विष्वङ् – नानाथरीका योनिहरूमा लिएर जानेसाधनका रूपमा, भवन्ति – हुन्छन् ।

पदार्थ :– यस हृदयका एक सय एक नाडीहरू छन् । तिनीहरूमध्ये एक सुषुम्ना नाडी मूर्धा अर्थात् शिरको माथिल्लो भागलाई भेदन गरेर बाहिर निस्किएको छ । मृत्युका समयमा त्यस सुषुम्ना नाडीद्वारा माथितिर जाने पुरुषले अमरत्व प्राप्त गर्दछ । अरू एक सय नाडीहरूले जीवलाई विभिन्न योनिहरूमा लैजान्छन् ।

यस यमराज र नचिकेताको संवादयुक्त कठोपनिषद्को उपसंहार गर्दै उपान्त मन्त्रले जीवात्माका हृदयमा रहेको अन्तरात्माको स्वरूपको वर्णन गरेको छ । जस्तै –

अङ्गुष्ठमात्रः पुरुषोऽन्तरात्मा सदा जनानां हृदये संनिविष्टः ।
तं स्वाच्छरीरात्प्रवृहेन्मुञ्जादिवेषीकां धैर्येण
तं विद्याच्छुक्रममृतं तं विद्याच्छुक्रममृतमिति ॥

अर्थात् – अङ्गुष्ठ बराबरको पुरुष अन्तरात्माका रूपमा सधैँ नै जीवका अर्थात् प्राणीका हृदयमा रहेको हुन्छ । मूँजबाट सीँकलाई निकाले झैँ गरेर धैर्यपूर्वक आफ्ना शरीरबाट बाहिर निकाल्नु पर्दछ । अर्थात् शरीरबाट आत्मालाई छुट्याएको अनुभव गर्नुपर्दछ । त्यस आत्मालाई शुक्र, शुद्ध र अमृतरूप सम्झनुपर्दछ । यसमा आएका द्विरुक्ति र इतिसमेत उपनिषद्का समाप्तिका सूचक हुन् ।

यसपछि विद्याका स्तुतिका लागि यस आख्यायिकाको अर्थको उपसंहारका रूपमा यस अन्तिम मन्त्रको उपनिषद्ले उल्लेख गरेको छ । जस्तै –

**मृत्युप्रोक्तां नचिकेतोऽथ लब्ध्वा विद्यामेतां योगविधिं च कृत्स्नम् ।**
**ब्रह्मप्राप्तो विरजोऽभूद्विमृत्यु रन्योऽप्येवं यो विदध्यात्ममेव ॥**

अर्थात् मृत्यु किंवा यमराजले भनेको यस विद्यालाई र सबै योगविधिसमेतलाई पाएर नचिकेता ब्रह्मभावमा प्राप्त भएका थिए । उनी विरज अर्थात् धर्माधर्मशून्य र मृत्युहीन समेत भएका थिए । उनका अतिरिक्त अरू पनि कसैले आत्मतत्त्वलाई यसैगरी जानेमा ऊ पनि नचिकेता जस्तै ब्रह्मभावमा प्राप्त हुनेछ ।

यो प्रकृत कठोपनिषद्लाई ब्रह्मज्ञानका साधनका दृष्टिले अत्यन्त महत्त्वपूर्ण मानिएको छ । आख्यायिकाका रूपमा प्रश्नोत्तरको शैलीमा प्रस्तुत भएको यो उपनिषद् मुमुक्षुका लागि अत्यन्त ग्राह्य र तुलनात्मकरूपमा सुरुचिपूर्ण पनि पाइन्छ । यसका महत्त्वपूर्ण मन्त्रहरू श्रीमद्भगवद्गीताको दोस्रो अध्याय, पन्ध्रौँ अध्याय र अरू पनि अध्यायहरूमा समेत कहीँ जस्ताका तस्तै र कहीँ भने शब्दान्तर गरेर पनि उधृत गरेको पाइन्छ । त्यसैगरेर श्रीमद्भागवतमहापुराण लगायतका पुराणहरूमा, महाभारत र अरू ग्रन्थहरूमा पनि यसको प्रभाव परेको देखिन्छ । यसैकारणले पनि यस उपनिषद्को सार्वत्रिक महत्त्व भएको पाइन्छ । वरिष्ठतम ब्रह्मज्ञानी यमराजका मुखबाट यसको उपदेश हुनुबाट पनि यसको महत्त्व झन् बढ्नगएको छ । अस्तु । ब्रह्मार्पणमस्तु ।



# प्रश्नोपनिषद्

**इतः पूर्णं ततः पूर्णं पूर्णात्पूर्णं परात्परम् ।**
**पूर्णानन्दं प्रपद्येऽहं सद्गुरुं शङ्करं स्वयम् ॥**

यो उपनिषद् अथर्ववेदको ब्राह्मणभाग अन्तर्गत पर्दछ । यसको भाष्य शुरु गर्दै आचार्य शङ्कर लेख्नुहुन्छ – *'मन्त्रोक्तस्यार्थस्य विस्तरानुवादीदं ब्राह्मणमारभ्यते.'* अथर्ववेदको मन्त्रभाग अर्थात् मुण्डकोपनिषद्मा भनिएको अर्थको नै विस्तारपूर्वक अनुवाद गर्ने भएको यस ब्राह्मणोपनिषद्को आरम्भ गरिन्छ । यसबाट प्रश्नोपनिषद्ले मुण्डकोपनिषद्मा भनिएका विषयहरूकै व्याख्या गर्दछ भन्ने थाहा हुन्छ । मुण्डकोपनिषद्का शुरुमा नै विद्याका दुईथरी भेदहरू अर्थात् परा र अपराको उल्लेख गरिएको छ । सम्पूर्ण उपनिषद्भरि नै तिनै दुईथरी विद्याहरूको वर्णन गरिएको छ । यस प्रश्नोपनिषद्मा तिनैको प्राप्तिको साधनस्वरूप प्राणोपासना आदिको निरूपण गरिएको छ । इत्यादि कुराको विश्लेषणबाट यस उपनिषद्लाई मुण्डकोपनिषद्को पूरकका रूपमा लिन सकिन्छ ।

यस प्रश्नोपनिषद्मा ६ थरी प्रश्नहरू र तिनका उत्तरहरू ६ खण्डहरूमा विशदरूपमा दिइएका छन् । अब यी ६ खण्डहरूमा सोधिएका प्रश्नहरू र तिनका उत्तरहरूको समेत सङ्क्षिप्त चर्चा

आचार्य शङ्करका भाष्यका आधारमा रहेर गर्ने प्रयास गरिनेछ।

यस प्रश्नोपनिषद्का शुरुमा नै सुकेशा आदि ६ जना ऋषिकुमारहरू मुनिवर पिप्पलादका आश्रममा गएर केही प्रश्नहरू गर्न चाहन्छन्। उपनिषद्को प्रथम प्रश्नको प्रथम प्रश्नमा यस कुराको उल्लेख गरिएको छ। जस्तै –

ॐ सुकेशा च भारद्वाजः शैब्यश्च सत्यकामः सौर्यायणी च गार्ग्यः कौसल्यश्चाश्वलायनो भार्गवो वैदर्भिः कबन्धी कात्यायनस्ते हैते ब्रह्मपरा ब्रह्मनिष्ठाः परं ब्रह्मान्वेषमाणा एष ह वै तत्सर्वं वक्ष्यतीति ते ह समित्पाणयो भगवन्तं पिप्पलादमुपसन्नाः ॥

शब्दार्थ :– भारद्वाजः सुकेशा – भरद्वाजका पुत्र सुकेशा, च – र, शैव्यः सत्यकामः – शिविका छोरा सत्यकाम, च – र, गार्ग्यः सौर्यायणी – गर्गगोत्रमा पैदा भएका सौर्यायणी, च – र, कौसल्यः – कौसल नाम गरेका, आश्वलायनः – अश्वलका छोरा, च – र, वैदर्भिः – विदर्भ देशमा जन्मेका, भार्गवः – भृगु गोत्रमा जन्मिएका भार्गव, च – र, कबन्धी कात्यायनः – कत्य ऋषिका पनाति कबन्धी, ते ह एते ब्रह्मपरा – यी सबै ६ जना ऋषिहरू परब्रह्मको जिज्ञासु भए, ब्रह्मनिष्ठाः – ब्रह्ममा निष्ठा भएका पनि थिए। ते ह – ती सबै, परं ब्रह्म – परब्रह्मलाई, अन्वेषमाणाः – खोजिगर्दै, एष ह वै तत्सर्वं वक्ष्यति इति – यी पिप्पलाद मुनि ब्रह्मका विषयमा सबै कुरा भन्नेछन् भन्ने निश्चय गरेर, समित्पाणयः – हातमा समिधा लिएर, भगवन्तं पिप्पलादं उपसन्नाः – भगवान् पिप्पलाद ऋषिका सामुन्ने गए।

पदार्थ :– भरद्वाजनन्दन सुकेशा, शिविकुमार सत्यकाम, गर्गगोत्रमा उत्पन्न भएका सूर्यका नाति सौर्यायणि, अश्वलकुमार

कौसल्य, विदर्भदेशीय भार्गव र कत्यका पनाति कबन्धीसमेत यी ६ ऋषिहरू परब्रह्मका जिज्ञासु थिए । यही जिज्ञासाका साथ एकपटक ती ऋषिहरू भगवान् पिप्लादबाट ब्रह्मका बारेमा उपदेश पाउने आशाले हातमा समिधा लिएर उनका समक्ष गुरूपसत्ति गर्न गएका थिए ।

त्यसपछि ऋषि पिप्पलादले तिनीहरूलाई तपस्या, ब्रह्मचर्य र श्रद्धायुक्त भएर एकवर्षसम्म गुरुकुलमा नै निवास गर्ने र त्यसपछि आफ्नो इच्छानुसार प्रश्न गर्ने । यदि मैले जानेको रहेछु भने म तिमीहरूको प्रश्नको उत्तर दिनेछु भनेर भनेका थिए ।

एकवर्षसम्म गुरुकुलमा तिनीहरूले निवास गरिसकेपछि ती ऋषिहरूमध्येका कात्यायन कबन्धीले गुरु पिप्पलादका समक्ष गएर हे भगवन् ! यी सारा प्रजाहरू कसबाट उत्पन्न हुन्छन् ? भनेर प्रश्न सोधेका थिए ।

त्यसप्रकारको प्रश्न सुनेपछि गुरु पिप्पलादले जबाफ दिँदै भनेका थिए – पूर्व समयमा प्रजा उत्पन्न गर्ने इच्छाले प्रजापतिले तप गरे । त्यसरी तप गरेपछि उनले रयि अर्थात् सोमरूप अन्न र प्राण अर्थात् भोक्ता अग्निको उत्पत्ति गरे । ती जोडीबाट अनेक प्रकारका प्रजाहरू उत्पन्न गर्ने उनले विचार गरे । वास्तवमा आदित्य नै प्राण हो र रयि नै सोम हो । यी स्थूल र सूक्ष्म अर्थात् मूर्त र अमूर्त सबै नै रयि हुन् ।

जुन समयमा सूर्य उदित भएर पूर्व दिशामा प्रवेश गर्दछन् त्यसपछि पूर्व दिशाका प्राणीहरू सचेत भएर उठ्तछन् । त्यसैगरेर दक्षिण, पश्चिम, उत्तर, तल, माथि र अवान्तर दिशाहरूलाई पनि सूर्यले प्रकाशित गर्दै सबै प्राणीहरूलाई आफ्ना किरणहरूमा

धारणा गर्दछन्, अर्थात् गहन निद्राबाट जागा गराउँदछन् । यो भोक्ता प्राण वैश्वानर अर्थात् समष्टि जीवरूप, सर्वात्मा र सर्वरूप हो । यो सर्वमय भएको कारणले नै प्राण र अग्निरूप पनि हो । यो भोक्ता नै प्रतिदिन सम्पूर्ण दिशाहरूलाई आत्मभूत गर्दै उदित हुन्छ । यही कुरा ऋक् अर्थात् मन्त्रद्वारा पनि भनिएको छ । यसैलाई उपनिषद्ले यसरी भनेको छ । जस्तै –

**विश्वरूपं हरिणं जातवेदसं परायणं ज्योतिरेकं तपन्तम् ।**
**सहस्ररश्मिः शतधा वर्तमानः प्राणः प्रजानामुदयत्येष सूर्यः ॥**

शब्दार्थ :– विश्वरूपम् – सम्पूर्ण रूपहरूका केन्द्रस्थल, जातवेदसम् – ज्ञानसम्पन्न, परायणाम् – सबैका आश्रय, ज्योतिः– प्रकाशमय, तपन्तम् – तापयुक्त, हरिणम् – किरण भएका सूर्यलाई, एकम् – अद्वितीय भनिन्छ । एषः – यस, सहस्ररश्मिः– हजारौँ किरण भएका, सूर्यः – सूर्य, शतधा वर्तमानः – सैयौँ प्रकारले रहेर, प्रज्ञानम् – सम्पूर्ण जीवहरूको, प्राणः – जीवन भएर, उदेति – उदाउछन् ।

पदार्थ :– सर्वरूप, रश्मियुक्त, ज्ञानसम्पन्न, सर्वाश्रय, ज्योतिर्मय, अद्वितीय, र तापयुक्त सूर्यलाई विद्वान्हरू अर्थात् ब्रह्मज्ञानीहरू आफ्नू आत्मस्वरूपले जान्दछन् । ती सूर्य हजारौँ किरणहरू युक्त भएर, सैयौँ प्रकारले रहने भएर र सम्पूर्ण प्राणीहरूका प्राणरूप भएर सधैँ उदाउँछन् ।

अब यसपछि चन्द्रमा र सूर्यरूपी जोडीले यी सम्पूर्ण प्राणीहरूलाई कसरी उत्पन्न गर्दछन् भन्ने सम्बन्धमा श्रुति भन्दछ– संवत्सर नै प्रजापति हुन् । उनका दक्षिण र उत्तर गरेर दुई

अयनहरू हुन् । जुन मान्छेहरू एकातर्फ इष्टापूर्त आदि कर्ममार्गको अवलम्बन गर्दछन् तिनीहरू चन्द्रलोक जान्छन् । तिनीहरू फेरि फर्केर पृथ्वीमा आउँछन् । त्यसकारण सन्तानेच्छु ऋषिहरू दक्षिणमार्गबाट नै जान्छन् । यसप्रकार जुन पितृयाण हो, त्यही नै रयि हो । अर्कोतर्फ तप, ब्रह्मचर्य, श्रद्धा र विद्याद्वारा जसले आत्मा खोज्दछन् ती ज्ञानीहरू सूर्यमार्गबाट सूर्यलोकमा जान्छन् । यही नै प्राणको आश्रय हो । यही अमृत हो । यही अभय हो । यही परागति हो । यहाँबाट फेरि फर्कनु पर्दैन । अतः यही नै निरोधस्थान हो ।

आदित्यलाई सर्वाधिष्ठानत्वका रूपमा अर्को मन्त्रले भन्दछ । जस्तै –

**पञ्चपादं पितरं द्वादशाकृतिं दिव आहुः परे अर्धे पुरीषिणम् ।**
**अथेमे अन्य उ परे विचक्षणं सप्तचक्रे षडर आहुरर्पितमिति ॥**

शब्दार्थ :– पञ्चपादं – पाँचओटा पाउ भएका, पितरम् – सबैका पिता, द्वादशाकृतिम् – बाह्र आकृति भएका, पुरीषिणम् – जलका उत्पादक भएका सूर्यलाई, दिवः परे अर्धे – स्वर्गभन्दा पनि माथि बस्तछन् भनेर, आहुः – भन्दछन् । अथ इमे – यी अरू, अन्ये उ – केही व्यक्तिहरू, परे – विशुद्ध, सप्तचक्रे – सातओटा पाङ्ग्रा भएको, षडरे – ६ थरी अराहरू भएको रथमा, अर्पितम् – बसेर, विचक्षणमिति – सबैलाई हेर्दछन् भनेर, आहुः – भन्दछन् ।

पदार्थ, केही कालवेत्ता व्यक्तिहरू यी आदित्यलाई पाँचओटा गोडा भएका सबैका पिता, बाह्र आकृतियुक्त, जलयुक्त र अन्तरिक्षभन्दा पर रहेको भन्दछन् । अरू केही व्यक्तिहरू उनलाई

सर्वज्ञ भन्दछन्। ती सात चक्र र ६ अरायुक्त अर्थात् कालस्वरूप संवत्सरात्मक प्रजापति नै जगत्का कारण हुन्।

मास नै प्रजापति हुन्। उनको कृष्णपक्ष नै रयि हो र शुक्लपक्ष नै प्राण हो। त्यसकारण यी प्राणोपासक ऋषिहरू शुक्ल पक्षमा नै यज्ञ गर्नेगर्दछन्। अरू अन्नोपासकहरू कृष्ण पक्षमा यज्ञ गर्दछन्।

दिनरात पनि प्रजापति हुन्। उनको दिन नै प्राण हो र रात्रि नै रयि हो। जुन मान्छे दिनका समयमा सम्भोग गर्दछन् ती प्राणको हानि गर्दछन् भने रात्रिमा सम्भोग गर्नु भनेको ब्रह्मचर्यमा रहनु हो।

अन्न नै प्रजापति हो। अन्नबाटै वीर्य बन्दछ। त्यसैबाट नै यी सम्पूर्ण प्रजाहरू उत्पन्न हुन्छन्।

यसप्रकार जसले ती प्रजापतिले गरे सरहको आचरण गर्दछन् ती जुम्ल्याहा सन्तान उत्पन्न गर्दछन्। जसले तप गर्दछन्, जो ब्रह्मचर्यमा रहन्छन् र जो सत्यवादी हुन्छन् तिनलाई नै ब्रह्मलोक प्राप्त हुन्छ।

प्रथम प्रश्नको अन्तिम मन्त्रमा उत्तरमार्गावलम्बीहरूको गति बताइएको छ। मन्त्रले भन्दछ। जस्तै – *'तेषामसौ विरजो ब्रह्मलोको न येषु जिह्ममनृतं न माया चेति.'*

शब्दार्थ :– येषु न – जसमा न ता, जिह्मम् – कुटिलता छ, अनृतम्, न मिथ्या छ, च – त्यसैगरेर, न माया – न कपट नै छ। तेषाम् – तिनैलाई, असौ – यो, विरज – विशुद्ध, विकाररहित, ब्रह्मलोक इति – ब्रह्मलोक प्राप्ति हुन्छ।

पदार्थ :– जसमा कुटिलता, अनृत तथा कपट छैन तिनैलाई विशुद्ध ब्रह्मलोक प्राप्त हुन्छ।

यसरी प्रश्नोत्तरका रूपमा शुरु भएको यस प्रश्नोपनिषद्को

प्रथम प्रश्नमा रयि र प्राणद्वारा प्रजापतिले नै सम्पूर्ण स्थावर र जङ्गम जगतको सृजना गरेको कुराको निरूपण गरिएको छ।

यसै मन्त्रमा परेको *'न येषु जिह्ममनृतं न माया च'* भन्ने भविष्यत्कालिक वाक्यांशलाई लिएर भाष्यकार श्रीशङ्कराचार्यले पहिले मुण्डकोपनिषद् पढिसकेर मात्रै प्रश्नोपनिषद् पढ्नुपर्ने कुरा प्रश्नोपनिषद्को माष्य आरम्भ गर्दा स्पष्टरूपमा उल्लेख गर्नुभएको देखिन्छ। उपनिषद्को प्रचलित क्रममा प्रश्नोपनिषद्पछिमात्रै मुण्डकोपनिषद् पढ्ने चलन छ। तर शाङ्करसम्प्रदायका विद्यार्थीहरूले भने शङ्करको निर्देशन अनुसार नै अध्ययन गर्नुपर्ने कुरा मुण्डकोपनिषद्को भूमिकामा अनुवादकले आफ्नू मन्तव्य राखेको देखिन्छ।

प्रश्नोपनिषद्को द्वितीय प्रश्नमा विदर्भदेशका भार्गवले गुरु पिप्पलादसँग मुख्य मुख्य देवताका बारेमा प्रश्न गरेका छन्। उपक्रमका रूपमा प्रथम मन्त्र यहाँ प्रस्तुत गरिन्छ। जस्तै –

**अथ हैनं भार्गवो वैदर्भिः पप्रच्छ।**
**भगवन्कत्येव देवाः प्रजा विधारयन्ते**
**कतर एतत्प्रकाशयन्ते कः पुनरेषां वरिष्ठ इति ॥**

शब्दार्थ :– अथ ह एनम् – यसपछि गुरु पिप्पलादसँग, वैदर्भिः भार्गवः – विदर्भ देशका भार्गवले, पप्रच्छ – सोधे, भगवन् – हे भगवन् ! कति एव देवाः – कति देवताहरू, प्रजां विधारयन्ते – प्रजाहरूलाई धारण गर्दछन्, कतरे एतत् – तिनीहरूमध्ये कुनकुन देवताहरूले, प्रकाशयन्ते – प्रकाशित गर्दछन् ? पुनः फेरि, एषाम्– यिनीहरूमध्ये, कः – कुन चाहिँ, वरिष्ठः – सर्वश्रेष्ठ हुन्,

इति – यस प्रकारको प्रश्न गरेका थिए ।

पदार्थ :– त्यसपछि ती पिप्पलाद मुनिसँग विदर्भदेशका भार्गव नाम गरेका शिष्यले प्रश्न गरेका थिए। उनले आफ्नू प्रश्नमा हे भगवन् ! प्रजाहरूलाई कुन कुन देवताहरूले धारणा गर्दछन् ? तिनीहरूमध्ये कुन कुन देवताहरूले प्रजाहरूलाई प्रकाशन गर्दछन् ? र तिनीहरूमा कुन चाहिँ देवता सर्वश्रेष्ठ हुन् ? भनेर सोधेका थिए।

शिष्य भार्गवलाई गुरु पिप्पलादले उनको प्रश्न अनुसारको जबाफ दिएका थिए। त्यो देव आकाश हो, वायु, अग्नि, जल, पृथिवी, वाक्, मन र चक्षु पनि देव नै हुन्। यी सबै देवताहरू आफ्नू श्रेष्ठतालाई प्रकट गर्दै हामीहरू नै यस शरीरलाई धारणा गर्दछौँ भनेर भन्दछन्।

त्यसपछि प्राणलाई सर्वश्रेष्ठ देखाउने उद्देश्यले एउटा आख्यायिका उपनिषद्मा आएकोछ। एक पटक इन्द्रियहरूका बीचमा सर्वश्रेष्ठताका बारेमा वादविवाद हुँदा आफू सर्वश्रेष्ठ भएको कुरा प्राणले अरू इन्द्रियहरूलाई तिमीहरू भ्रममा नपर, अविवेकी भएर अभिमान नगर, किन भने म नै आफूलाई पाँच प्रकारले विभक्त गरेर पाँच वृत्ति भेदले यस शरीरलाई आश्रय दिएर धारणा गर्दछु भनेको थियो। तर प्राणको कुरालाई अरू इन्द्रियहरूले विश्वास गरेनन्। त्यसपछि प्राण अभिमानपूर्वक माथितिर उठ्न थाल्यो। त्यसरी प्राण माथि उठ्न थालेपछि अरू सबै इन्द्रियहरू पनि माथि उठ्न थाले। फेरि प्राण अडिएपछि सबै अडिए। जसरी मधुकरराज अर्थात् मौरीको रानु बाहिर जान थालेपछि अरू सबै मौरीहरू पनि बाहिर निस्कन थाल्दछन् र रानु बसेपछि सबै मौरीहरू बस्तछन्। त्यसैगरेर वाक्, मन, चक्षु र श्रोत्रादिले

सन्तुष्ट भएर प्राणको स्तुति गरेका थिए। प्राणको स्तुतिमा उनीहरूले प्राणलाई अग्नि, सूर्य, मेघ, इन्द्र, वायु, पृथिवी, रयि, सत्, असत् र अमृतसमेत हो भनेका छन्।

रथको नाभिमा अरा लागेभैँ गरेर ऋक्, यजु, साम, यज्ञ, क्षत्रिय र ब्राह्मणसमेत सबै प्राणमा अडिएका छन्। यसै गरेर विभिन्न विशेषणहरू दिँदै लामो स्तुति गरेपछि द्वितीय प्रश्नको अन्त्यमा गएर इन्द्रियहरूले यसरी प्राणको स्तुति गरेका थिए। जस्तै –

**प्राणस्येदं वशे सर्वं त्रिदिवे यत्प्रतिष्ठितम्।**
**मातेव पुत्रान् रक्षस्व श्रीश्च प्रज्ञां विधेहि न इति ॥**

शब्दार्थ :– इदम् – यो प्रत्यक्ष देखिने जगत् र यत् – जुन, त्रिदेवे – स्वर्गलोकमा, प्रतिष्ठितम् – स्थित छ। सर्वम् – सबै, प्राणस्य – प्राणका, वशे – अधीनमा छन्। हे प्राण ! माता पुत्रान् इव – आमाले आफ्ना छोराहरूलाई रक्षा गरे भैँ गरेर तपाईंले हामीहरूलाई, रक्षस्व – रक्षा गर्नुहोस्। च – र, नः श्री च – हामीहरूलाई कान्ति र, प्रज्ञाम् – बुद्धि, विधेहि – दिनुहोस्। इति – यसका साथै दोस्रो प्रश्न पनि समाप्त हुन्छ।

पदार्थ :– यस लोकमा रहेका सबै उपभोगका सामग्रीहरू प्राणका नै अधीनमा छन्। त्यसैगरेर स्वर्गमा देवताहरूले उपभोग गर्ने वैभवको पनि रक्षक प्राण नै हो। जसरी आमा आफ्ना छोराहरूको रक्षा गर्दछिन्, त्यसैगरेर हे प्राण ! तपाईं पनि हाम्रो रक्षा गर्नुहोस्। ब्राह्मण र क्षत्रियहरूको विभूति पनि तपाईंकै कारणले भएको हो। हामीहरूलाई पनि श्री र बुद्धि प्रदान गर्नुहोस्। यसरी गरिएको स्तुतिबाट प्राण नै सर्वात्मभावमा रहेको

देखिन्छ । साथै प्राण नै प्रजापति र भोक्ता भएको पनि प्रमाणित हुन्छ । यसपछि दोस्रो प्रश्न समाप्त हुन्छ ।

प्रश्नोपनिषद्को तेस्रो मन्त्र अश्वलका छोरा कौसल्यका प्रश्नबाट शुरु हुन्छ । उनले गुरु पिप्पलादसँग प्राण कहाँबाट उत्पन्न हुन्छ ? कसरी शरीरमा आउँछ ? आफैँलाई विभाग गरेर कसरी रहन्छ ? कसरी केकारणले शरीरबाट निस्किएर जान्छ ? प्राणले कुन प्रकारले बाह्य र आभ्यन्तर शरीरलाई धारणा गर्दछ ? भन्ने समेतका प्रश्नहरू गरेका थिए ।

त्यसपछि ती प्रश्नहरूको उत्तर पिप्पलाद मुनिले एकएक गरेर दिएका थिए । प्राण आत्माबाट उत्पन्न हुन्छ, आत्मामा नै प्राण व्याप्त छ र यो मनोकृत सङ्कल्पादिबाट शरीरमा आउँछ । मुख्य प्राणले नै अरू प्राण अर्थात् इन्द्रियहरूलाई भिन्नाभिन्नै नियुक्ति गर्दछ ।

पञ्चप्राणको स्थितिको व्याख्या गर्दै श्रुति अगाडि भन्दछ । प्राणले गुदद्वारमा र मूत्रेन्द्रियमा अपान वायुलाई नियुक्ति गर्दछ । आँखामा कानमा, मुखमा र नाकमा प्राण आफैँ बस्तछ । मध्य भागमा समान वायु रहन्छ । समान वायुले खाएको अन्न पचाउँछ । यस प्राणाग्निबाट नै दुई आँखा, दुई कान, दुई नाकका प्वाल र जिब्रो समेतका सात ठाउँबाट नै सात ज्वालाहरू बाहिर निस्कन्छन् ।

अर्थात् जीवात्माको लिङ्गदेहको वर्णन गर्दै श्रुतिले उक्त आत्मा हृदयमा रहेको कुरा बताएको छ । त्यस हृदयदेशमा एक सय एक प्रधान नाडीहरू छन् । प्रत्येक नाडीका एकएक सय शाखाहरू छन् । ती प्रत्येकका बहत्तर–बहत्तर हजार प्रतिशाखा नाडीहरू छन् । यी सबै नाडीहरूमा व्यान वायुको सञ्चार हुन्छ ।

**प्राणीहरूको प्राणोत्क्रमणमा रहेको व्यान वायुको भूमिकाको वर्णन गर्दै श्रुति भन्दछ । जस्तै – *'अथैकयोर्ध्व उदान : पुण्येन पुण्यं लोकं नयति पापेन पापमुभाभ्यामेव मनुष्यलोकम्.'***

**शब्दार्थ :– अथ – यसपछि, एकया – तीमध्येको एक सुषुम्ना नाडीबाट, उदान ऊर्ध्वः – उदान वायु माथितिर जान्छ । त्यस वायुले, पुण्येन – पुण्य कर्म गर्ने पुरुषलाई पुण्यकर्मद्वारा, पुण्यं लोकम् – पुण्यलोकमा, नयति – लैजान्छ । पापेन – पापकर्म गर्ने पुरुषलाई पापकर्मद्वारा, पापं नयति – पापयोनिमा लैजान्छ । उभाभ्यामेव – पाप र पुण्य दुवैथरी कर्महरू गर्ने पुरुषलाई, मनुष्यलोकम् – मनुष्यलोकमा अर्थात् मनुष्ययोनिमा लैजान्छ ।**

**पदार्थ :– ती हजारौँ नाडीहरूमध्ये सुषुम्ना नाम भएको एक नाडीद्वारा माथितिर जाने भएको उदानवायुले जीवात्मालाई पुण्यकर्म गरेको भए त्यसद्वारा पुण्यलोक – स्वर्गादिलोकमा लैजान्छ । पाप गरेको भए पापी जीवलाई पापमय लोक – नरकादि लोकमा उदान वायुले लैजान्छ । पाप र पुण्य दुवैथरी मिश्रित कर्म गरेको जीवलाई भने मनुष्यलोकमा मनुष्ययोनिमा त्यस उदानवायुले घुमाउँदै ल्याउँछ ।**

**त्यसपछि बाह्य प्राणादिको निरूपण श्रुतिले गरेको छ । आदित्य नै बाह्य प्राण हो । आदित्य आँखामा रहेको प्राण अर्थात् नेत्रेन्द्रियलाई अनुग्रह गर्दै उदाउँछन् । पृथिवीमा रहेको आदित्यको अभिमानी देवताले पुरुषको अपानवायुलाई पृथिवीतिर खिचेर राखेको छ । अन्यथा प्राणीको शरीर माथि उड्ने थियो अथवा पृथ्वीमा नै पसारिएर रहन्थ्यो । यसै उदानवायुले शरीरको सन्तुलनलाई मिलाएर राखेको छ । द्युलोक र पृथ्वीका बीचमा रहने समान**

वायु हो। यो प्राणीहरूका शरीरका भित्र व्याप्त भएर रहने व्यानजस्तै वायु भएको हुँदा यसलाई व्यानवायु पनि भनिएको हो। यसै वायुलाई आदित्यले अनुग्रह गर्दछन्। आदित्यरूप तेज नै उदान हो। त्यसकारण जसको तेज अर्थात् शरीरको तातोपन शान्त हुन्छ, ऊ मनमा लीन भएका इन्द्रियहरू सहित पुनर्जन्ममा अर्थात् पुनर्जन्मको हेतुभूत मृत्युमा प्राप्त हुन्छ।

त्यसरी मृत्युमा प्राप्त हुने जीवको अन्तिम समयमा जस्तो चित्त अर्थात् सङ्कल्प हुन्छ त्यसै सङ्कल्पसहित त्यो मुख्य प्राणवृत्तिमा गएर मिल्दछ। त्यो प्राण नै तेज अर्थात् उदानवृत्तिले युक्त भएर आत्मा किंवा भोक्ता स्वामीका साथमा गएर मिल्दछ। अथवा उदानवृत्तिले संयुक्त भएको त्यो प्राण नै त्यस भोक्ता जीवलाई उसका पापपुण्यमय कर्महरूका अनुसार यथासङ्कल्पित अथवा उसको अभिप्रेत अनुसारका लोकमा लैजान्छ वा पुऱ्याइदिन्छ।

जुन विद्वान्ले प्राणलाई उपर्युक्त अनुसार जान्दछ, उसका सन्तान नष्ट हुँदैनन्। ऊ शरीरपात भएपछि अमर हुन्छ। यस विषयमा श्रुतिले यस्तो भनेको छ –

**उत्पत्तिमायतिं स्थानं विभुत्वं चैव पञ्चधा।**
**अध्यात्मं चैव प्राणस्य विज्ञायामृतमश्नुते ॥**

शब्दार्थ :– प्राणस्य – प्राणको, उत्पत्तिम् – उत्पत्ति, आयति– आगम, स्थानम् – स्थान, विभुत्वमेव – व्यापकतालाई पनि, च– त्यसैगरेर बाहिरका, एव – र अध्यात्मम् पञ्चधा च – आध्यात्मिक पाँच भेदहरूलाई पनि, विज्ञाय – राम्रोसँग जानेर, अमृतम् अश्नुते– अमृतत्व प्राप्त गर्दछ।

पदार्थ :– परमात्माबाट प्राणको उत्पत्ति, मनको सङ्कल्पबाट यस शरीरको आगमन, पायु र उपस्थ आदिमा बस्ने कुरा, प्राणको वृत्तिभेदले पाँच ठाउँमा बस्ने व्यापकरूपता, बाह्य आदित्यादिरूपले चक्षु आदि इन्द्रियभेदले र भित्र आध्यात्मिक भेदले पाँच प्रकारको स्थिति जानेर मनुष्य अमरत्व प्राप्त गर्दछ। यसपछि तृतीय प्रश्न यहीँ समाप्त हुन्छ।

प्रश्नोपनिषद्को चतुर्थ प्रश्न सूर्यका पुत्र गार्ग्यको सुषुप्तिमा को सुत्छ र को जागा रहन्छ ? अर्थात् *'भगवन्नेतस्मिन्पुरुषे कानि स्वपन्ति कान्यस्मिञ्जाग्रति...'* भन्ने प्रश्न समेतबाट शुरु हुन्छ। सपनाको बेलामा कुन देवले सपना देख्छ ? कसलाई त्यस सुखको अनुभव हुन्छ ? यी सबै कुन अधिष्ठानमा प्रतिष्ठित छन् ? भनेर पनि गुरु पिप्पलादसँग सोधेका छन्।

ती प्रश्नहरूको जबाफ दिँदै गुरु पिप्पलादले भन्नुभयो। हे गार्ग्य ! जसरी सूर्य अस्ताउँदाखेरि उनका सम्पूर्ण किरणहरू उनकै तेजोमण्डलमा नै एकत्रित हुन्छन् र सूर्य उदाउँदाखेरि फेरि प्रसारित हुन्छन्। त्यसैगरेर यी सबै इन्द्रियहरू मनमा गएर एकीभाव हुन्छन् र पुरुष जागेपछि उसका मनबाट फेरि बाहिर आउँछन्। सुतेपछि न त्यसले सुन्दछ, न देख्छ, न सुँघ्छ, न चाख्छ, न छुन्छ, न बोल्छ, न ग्रहण गर्दछ, न आनन्द भोगदछ, न दिसापिसाब गर्दछ र न कुनै चेष्टा गर्दछ। त्यसपछि सुतेको भनिन्छ।

सुषुप्तिका समयको स्थिति बताउँदै श्रुति भन्दछ :– सुषुप्तिका समयमा यस शरीररूप पुरमा प्राणाग्नि जागारहन्छ। यो अपान नै गार्हपत्य अग्नि हो। व्यान अन्वाहार्यपचन हो। जुन अग्निलाई गार्हपत्यबाट लगिन्छ त्यो प्राण नै प्रणयन भएको कारण आहवनीय

अग्नि हो ।

यस उपनिषद्को अर्को मन्त्रले अग्निहोत्रका होताको वर्णन गर्दछ । पुरुषका उच्छ्वास र निःश्वासहरू अग्निहोत्रका आहुतिहरू जस्तै हुन् । त्यस आहुतिलाई शरीर धान्नका लागि समानरूपले विभाजन र सञ्चालन गर्ने भएकाले त्यो समान अर्थात् ऋत्विक् हो । मन नै यजमान हो । इष्टफल अर्थात् अग्निहोत्रको फल स्वर्ग जस्तै उदान हो । इष्टफलको प्राप्ति उदानवायुको माध्यमबाट मात्रै हुनसक्तछ । यसै उदानवायुले नै यजमानरूपी मनलाई सधैँ सुषुप्तिकालमा स्वर्गसमान अक्षरब्रह्ममा लैजान्छ । त्यसैकारण उदान यज्ञफलस्थानीय हो भनेर शङ्कराचार्यले आफ्नू भाष्यमा लेख्नुभएको छ ।

यस प्रकृत प्रश्नको पाँचौँ मन्त्रले स्वप्नदर्शनको विवरण अर्थात् स्वप्नद्रष्टा देव अर्थात् मनको विवरण दिएको छ । स्वप्नावस्थामा यो मन विभूतिहरूको अनुभव गर्दछ अर्थात् विषयविषयीरूप अनेकात्मत्वमा यो परिणत हुन्छ । उसले जाग्रत्कालमा जे देखेको थियो सपनामा पनि त्यही देख्तछ । सुनेका कुराहरू नै सुन्दछ । दिशाविदिशाहरूमा अनुभव गरेका कुराहरूलाई सपनामा बारम्बार देख्तछ । त्यतिमात्रै होइन यो मन जाग्रद् अवस्थामा देखेका र नदेखेका, सुनेका र नसुनेका, अनुभव गरेका र नगरेका, त्यस्तै सत् र असत्का साथै जन्मान्तरमा अनुभव गरेका सबै किसिमका पदार्थहरू आफैँ सर्वरूप अर्थात् मनोवासनारूप उपाधियुक्त भएर देख्तछ । यसरी यो सर्वेन्द्रियरूप मनोदेव सपना देख्ने गर्दछ ।

यसपछि उपनिषद् सुषुप्तिको वर्णन गर्दछ । जुन समयमा यो मनोरूप देव नाडीमा रहने पित्तनामक सौर तेजले सबैतिरबाट अभिभूत हुन्छ अर्थात् जसले गर्दा वासनाहरूको अभिव्यक्तिको द्वार

बन्द हुन्छ, तब ऊ सपना देख्तैन। त्यसपछि मन सुषुप्तिमा पुग्दछ र सुखको अनुभूति गर्न थाल्दछ। यस अवस्थाको वर्णन गर्दै मुनि पिप्पलाद आफ्ना शिष्य गार्ग्यलाई भन्नुहुन्छ। जस्तै –

स तथा सोम्य वयांसि वासोवृक्षं सम्प्रतिष्ठन्ते एवं ह वै तत्सर्वं पर आत्मनि सम्प्रतिष्ठन्ते।

शब्दार्थ :– स – त्यो, सोम्य – हे प्रिय शिष्य ! यथा – जसरी, वयांसि – धेरै चराहरू, वासोवृक्षम् – आफ्नो निवासरूप वृक्षमा फर्किएर, सम्प्रतिष्ठन्ते – सुविस्तासँग बस्तछन्। ह एवं वै तत् सर्वम् – ठीक त्यसैगरेर ती सबै, परे आत्मनि – परमात्मामा, सम्प्रतिष्ठन्ते – सुखपूर्वक आश्रय पाउँछन्।

पदार्थ :– हे सोम्य ! जसरी चराहरू साँझमा आफ्नो गुण भएको रुखमा फर्किएर बस्तछन्। ती सबै कार्यकारणसङ्घात अर्थात् मायाका कार्यहरू सबैभन्दा उत्कृष्ट सर्वातीत आत्मामा अर्थात् अक्षर ब्रह्ममा गएर स्थित हुन्छन्। पृथिवी र त्यसको गन्धतन्मात्रा, जल र त्यसको रसतन्मात्रा, तेज र त्यसको रूपतन्मात्रा, वायु र त्यसको स्पर्शतन्मात्रा, आकाश र त्यसको शब्दतन्मात्रासमेतका सबै ज्ञानेन्द्रिय, कर्मेन्द्रिय, प्राण र अन्तःकरणसमेतका विषयहरूसमेत सुषुप्तिका समयमा परमात्मामा गएर बस्तछन्। त्यसैगरेर विज्ञानात्म पुरुष पनि पर अक्षर आत्मामा गएर सम्यक्प्रकारले स्थित रहन्छ।

यस प्रश्नको अन्तिम मन्त्रमा गएर अक्षरब्रह्मका साथमा यस विज्ञानात्माको एकत्वको ज्ञान जान्नेका लागि फलको वर्णन गरिएको छ। त्यसका साथै अक्षरब्रह्मको ज्ञानको फल पनि बताइएको छ। जस्तै –

विज्ञानात्मा सह देवैश्च सर्वैः प्राणा भूतानि सम्प्रतिष्ठन्ति यत्र ।
तदक्षरं वेदयते यस्तु सोम्य स सर्वज्ञः सर्वमेवाविवेशेति ॥

शब्दार्थ :– यत्र – जसमा, प्राणाः – सम्पूर्ण प्राणहरू, भूतानि च – पाँचैओटा भूतहरू र सर्वैः – सबै, देवैसह – अन्तःकरण र इन्द्रियहरू सहित, विज्ञानात्मा – विज्ञानरूप आत्मा, सम्प्रतिष्ठन्ति– आश्रय लिन्छन् । सोम्य – हे प्रिय ! तत् अक्षरम् – त्यस अविनाशी परमात्मालाई, यः तु वेदयते – जसले जान्दछ, सः सर्वज्ञः – त्यो सर्वज्ञ हो । सर्वं एव – त्यस सर्वस्वरूप परमेश्वरमा, आविवेश – प्रविष्ट हुन्छ । इति – यसपछि यस प्रश्नको उत्तर समाप्त हुन्छ ।

पदार्थ :– हे सोम्य ! जुन अक्षरमा अग्नि आदि देवताहरूसहित विज्ञानात्मा, चक्षु आदि इन्द्रियहरू र पृथिवी आदि भूतहरू रहन्छन् । हे प्रियदर्शन ! त्यस अक्षरलाई जसले जान्दछ, त्यो सर्वज्ञ हो र त्यो नै सबैमा प्रविष्ट हुन्छ । यस उपदेशपछि यो चौथो प्रश्न समाप्त हुन्छ ।

अब प्रश्नोपनिषद्को पाचौँ प्रश्न शुरु हुन्छ । यसको शुरुको मन्त्रमा गुरु पिप्पलादसँग शिष्य शिविका पुत्र सत्यकामले ओङ्कार उपासनाका बारेमा प्रश्न सोधेका छन् । जस्तै – *'स यो ह वै तद् भगवन्मनुष्येषु प्रायणान्तमोङ्कारमभिध्यायीत, कतमं वाव स तेन लोकं जयति.'* अर्थात् – हे भगवन् ! मान्छेहरूमा जुन पुरुष प्राणप्रयाणपर्यन्त यस ओङ्कारको चिन्तन गर्दछ भने त्यस्तो ओङ्कार उपासकले कुन लोकलाई जित्छ ? भनेर सोधेपछि गुरु पिप्पलादले त्रिमात्राविशिष्ट ओङ्कारोपासना र त्यसको फलसमेत सत्यकामलाई विस्तारपूर्वक भनेका छन् । किनभने ओङ्कार नै ब्रह्मको सबभन्दा समीपवर्ती आलम्बन हो ।

ओङ्कारका तीनैमात्राहरूको विशेषता देखाउँदै यस प्रश्नको छैटौं मन्त्रले यसरी वर्णन गरेको छ –

**तिस्रो मात्रा मृत्युमत्यः प्रयुक्ता अन्योन्यसक्ता अनविप्रयुक्ताः ।**
**क्रियासु बाह्याभ्यन्तरमध्यमासु सम्यक् प्रयुक्तासु न कम्पते ज्ञः ॥**

शब्दार्थ :– त्रिसो मात्रा – ओङ्कारका अ, उ र म् तीन मन्त्रहरू, अन्योऽन्यसक्ताः – एकअर्कासँग संयुक्त रहेर, प्रयुक्ताः – प्रयोग गरिएका हुन् वा अनविप्रयुक्ताः – प्रयोग नगरिएका हुन् अर्थात् भिन्नाभिन्नै प्रयोग गरिएका हुन् ती दुवै नै, मृत्युमत्यः – मृत्युले युक्त छन् । बाह्याभ्यन्तरमध्यमासु – बाहिर, भित्र र बीचका, क्रियासु – क्रियाहरूमा, सम्यक्प्रयुक्तासु – राम्रोसँग प्रयोग गरिएमा, ज्ञः – ज्ञानी, नकम्पते – विचलित हुँदैन ।

पदार्थ :– ओङ्कारका तीन मात्राहरू अर्थात् अ, उ र म् भिन्नाभिन्नै भएमा मृत्युयुक्त हुन्छन् । ती अ, उ र म् ध्यानक्रियामा प्रयुक्त हुन्छन् । ती परस्पर सम्बद्ध र विपरीत प्रयोग नभएको हुनुपर्छ । यसरी बाह्य अर्थात् जाग्रत्, आभ्यन्तर अर्थात् सुषुप्ति र मध्यम अर्थात् स्वप्नका क्रियाहरूमा तिनको सम्यक् प्रयोग गर्ने ज्ञानी पुरुष अर्थात् सर्वात्मभूत तथा ओङ्कारस्वरूपता प्राप्त गरेको विद्वान् कुनै परिस्थितिमा पनि विचलित हुँदैन ।

अन्तिम मन्त्रले ऋगादि वेदहरू र ओङ्कारबाट प्राप्त हुने लोकहरूको वर्णन गरेका छन् –

**ऋग्भिरेतं यजुर्भिरन्तरिक्षम् सामभिर्यत्तत्कवयो वेदयन्ते ।**
**तमोङ्कारेणैवायतनेनान्वेति विद्वान्**
**यत्तच्छान्तमजरममृतमभयं परं चेति ॥**

अर्थ :– ओङ्कारको साधना गर्ने साधकले ऋग्वेदद्वारा यस मनुष्यलोक प्राप्त गर्दछ । यजुर्वेदद्वारा सोमाधिष्ठित अन्तरिक्षलोक र सामवेदद्वारा ब्रह्मलोक प्राप्त गर्दछ । जुन लोकलाई विद्वान्हरू मात्रै जान्दछन् र जसलाई अविद्वान्हरू जान्दैनन् । ओङ्काररूपको आलम्बनद्वारा नै विद्वान्हरू शान्त, अजर, अमर, अभय र सबैभन्दा परको सर्वश्रेष्ठ लोकमा पुग्दछन् । यहाँ आइपुगेर पाचौँ प्रश्न पनि पूर्ण हुन्छ ।

प्रश्नोपनिषद्को अन्तिम छैटौँ प्रश्नमा भरद्वाजका छोरा सुकेशाले ऋषि पिप्पलादसँग गरेको षोडशकलायुक्त पुरुषका बारेको प्रश्न आउँछ । प्रश्न यसप्रकार छ । जस्तै –

भगवन् हिरण्यनाभः कौसल्यो राजपुत्रो मामुपेत्यैतं प्रश्न–मपृच्छत । षोडशकलं भारद्वाज पुरुषं वेत्थ तमहं कुमारमब्रुवं नाहमिमं वेद यद्यहमिमवेदिषं कथै ते नावक्ष्यमिति समूलो वा एष परिशुष्यति योऽनृतमभिवदति तस्मान्नार्हाम्यनृतं वक्तुं स तूष्णीं रथमारुह्य प्रवव्राज । तं त्वा पृच्छामि क्वासौ पुरुष इति ।

अर्थ :– भगवन् ! कोसलदेवका राजकुमार हिरण्यनाभले आएर मसँग प्रश्न सोधेका थिए – हे भारद्वाज ! के तपाईं सोह्र कलायुक्त पुरुषलाई जान्नुहुन्छ ? त्यसपछि मैले उनलाई जान्दिँन भनेको थिएँ । जुन मान्छे मिथ्या भाषण गर्दछ, ऊ सबैतिरबाट मूल सहित सुक्तछ । त्यसकारण म झूटो कुरा गर्न सक्तिनथेँ । त्यसपछि चुपचाप रथमा चढेर ती राजकुमार गए । अहिले म त्यही षोडशकलायुक्त पुरुषका बारेमा तपाईंसँग प्रश्न गर्दछु – त्यो पुरुष कहाँ छ ? र त्यो पुरुष को हो ?

भारद्वाजको प्रश्नको जबाफ दिँदै गुरु पिप्पलादले भने – हे

सोम्य ! जसमा यी सोह्र कलाहरूको प्रादुर्भाव हुन्छ, त्यो पुरुष यसै शरीरका भित्र नै विद्यमान छ ।

उक्त षोडशकलायुक्त पुरुषका कलाहरू कुन क्रमबाट र कसरी उत्पन्न भए भन्ने सम्बन्धमा उपनिषद् भन्छ । जस्तै –

स ईक्षाञ्चक्रे । कस्मिन्नहमुत्क्रान्त उत्क्रान्तो भविष्यामि कस्मिन्वा प्रतिष्ठिते प्रतिष्ठास्यामीति ।

शब्दार्थ :– सः – उसले, ईक्षाञ्चक्रे – विचार गर्‍यो, कस्मिन्– कसका शरीरबाट, उत्क्रान्ते – निस्कँदाखेरि, अहम् – म, उत्क्रान्त– म पनि निस्कन्छु अथवा निस्केको जस्तो, भविष्यामि– हुनेछु, वा – अथवा, कस्मिन् प्रतिष्ठिते – को बस्ताखेरि, प्रतिष्ठास्यामि – म बस्नेछु ।

अर्थ :– त्यस पुरुषले विचार गर्‍यो कि, कसले उत्क्रमण गर्दा म पनि उत्क्रमण गरेर साथै जानेछु र को बस्ता म पनि रहनेछु ?

त्यति विचार गरेर त्यस पुरुषले के के सृष्टि गर्‍यो भन्ने सम्बन्धमा उपनिषद् बताउँछ । जस्तै –

स प्राणमसृजत प्राणाच्छ्रद्धां खं वायुर्ज्योतिरापः पृथिवीन्द्रियं मनोऽन्नमन्नाद्वीर्यं तपो मन्त्राः कर्म लोका लोकेषु च नाम च ।

शब्दार्थ :– स – उसले, प्राणं असृजत – प्राणको सृजना गर्‍यो । प्राणात् – प्राणदेखि, श्रद्धाम् – श्रद्धाको उत्पत्ति गर्‍यो । त्यसपछि– खं, वायुः, ज्योतिः, आपः, पृथिवी – क्रमैसँग आकाश, वायु, तेज, जल र पृथ्वीको उत्पत्ति भयो । त्यसपछि मनः, इन्द्रियम् – मन अर्थात् अन्तःकरण र इन्द्रियहरूको उत्पत्ति भयो । त्यसपछि अन्नम् – अन्नको उत्पत्ति भयो । अन्नात् – अन्नबाट, वीर्यम् – वीर्यको सृष्टि भयो । त्यसपछि, तपः – तपको,

मन्त्राः – मन्त्रहरूको, कर्म – कर्महरूको, च – र, लोकाः – विभिन्न लोकहरूको, लोकेषु– लोकहरूमा, नाम – नामको सृष्टि भयो ।

पदार्थ :– ती परमात्माले प्राणको सृजना गर्नुभयो । त्यसपछि श्रद्धा, आकाश, वायु, तेज, जल, पृथिवी, इन्द्रिय, अन्न, वीर्य, तप, मन्त्र, कर्म र लोकहरूको सृजना क्रमैसँग परमात्माले गर्नुभयो । तिनै लोकहरूमा उत्पन्न भएका प्राणीहरूको नाम पनि परमात्माले राख्नुभयो ।

यस उपनिषद्को छैटौं प्रश्नको पाचौं मन्त्रले नदीको दृष्टान्त दिएर सम्पूर्ण जगत्को अन्तिम आश्रय परमात्मा नै भएको कुराको वर्णन गरेको छ । जस्तै – *'स यथेमा नद्यः स्यन्दमानाः समुद्रायणाः समुद्रं प्राप्यास्तं गच्छन्ति भिद्येते तासां नामरूपे समुद्र इत्येवं प्रोच्यते एवमेवास्य परिद्रष्टुरिमाः षोडश कलाः पुरुषायणाः पुरुषं प्राप्यास्तं गच्छन्ति भिद्येते चासां नामरूपे पुरुष इत्येवं प्रोच्यते स एषोऽकलोऽमृतो भवति.'* अर्थात् – जसरी समुद्रतर्फ बग्दै गएका नदीहरू समुद्रमा पुगेर अस्त हुन्छन् । ती नदीहरूका नाम र रूपसमेत समाप्त भएर जान्छन् । अन्ततः तिनलाई पनि समुद्र नै भनिन्छ । यसैगरेर यस सर्वद्रष्टाका सोह्रकलाहरू त्यसै परम पुरुषलाई प्राप्त गरेर त्यसैमा लीन हुन्छन्, किनभने सबैका अधिष्ठान तिनै परमात्मा नै हुन् । तिनका नाम र रूप नष्ट भएर जान्छन् । त्यसपछि तिनलाई पुरुष नै भनेर भनिन्छ । त्यो विद्वान् कलाहीन र अमर भएर जान्छ । यस कुरालाई लिएर यसपछि उपनिषद्मा यो श्लोक आएको छ । जस्तै –

अरा इव रथनाभौ कला यस्मिन्प्रतिष्ठिताः ।
तं वेद्यं पुरुषं वेद यथा मा वो मृत्युः परिव्यथा, इति ॥

**शब्दार्थ :–** रथनाभौ – रथका पाङ्ग्राका नाभिमा, अराः इव– सोइलाहरू अडिएका हुन्छन् । त्यसैगरेर, यस्मिन् – जसमा, कलाः – माथि उल्लेख भएका सोह्र कलाहरू, प्रतिष्ठिताः सर्वथा रहेका हुन्छन् । तम् वेद्यं पुरुषम् – ती सबैले जान्नुपर्ने सर्वाधार पुरुषलाई, वेद – जान्नुपर्दछ । यथा – जस्तै, वः – तिमीहरूको, मृत्युः – मृत्युले, मा परिव्यथा, दुःख दिन सक्ने छैन । इति – यसरी बुझ्नु पर्दछ ।

**पदार्थ :–** जसरी रथका नाभिमा सोइलाहरू लागेका हुन्छन्, त्यसैगरेर सम्पूर्ण कलाहरू तिनै परमपुरुषमा प्रतिष्ठित हुन्छन् । हे शिष्य हो ! तिनै सर्वाश्रय ज्ञातव्य पुरुषलाई तिमीहरू पनि जान । त्यसरी परम पुरुष ब्रह्मलाई जानेपछि त्यस मृत्युले तिमीहरूलाई दुःख दिन सक्ने छैन ।

अन्त्यमा यस प्रश्नोपनिषद्को उपसंहार गर्दै अन्तिम मन्त्रले भन्दछ – *‘तान्होवाचैतावदेवाहमेतत्परं ब्रह्म वेद । नातः परमस्तीति.’* अर्थात् – अन्त्यमा आफ्ना शिष्यहरूलाई गुरु पिप्पलाद मुनिले भने – हे बाबु हो ! यस परब्रह्मका बारेमा म यति नै जान्दछु । योभन्दा बढी म केही जान्दिन ।

अन्त्यमा शिष्यहरूले गुरुको श्रद्धापूर्वक वन्दना र अर्चना गर्दै ब्रह्मज्ञानका लागि कृतज्ञता व्यक्त गरेका थिए । अस्तु । श्रीकृष्णार्पणमस्तु ।



# मुण्डकोपनिषद्

भावाभावपदातीतं भावाभावात्मकं च यत् ।
तद् वन्दे भावनातीतं स्वात्मभूतं परं महः ॥

केही उपनिषद्हरूको सङ्क्षिप्त चर्चा गर्ने क्रममा अब अथर्व वेद अन्तर्गतको मन्त्रभागमा रहेको मुण्डकोपनिषद्को चर्चा गरिनेछ । यस उपनिषद्मा तीन मुण्डकहरू छन् । मुण्डकमा दुई दुई खण्डहरू छन् । ग्रन्थका शुरुमा नै ग्रन्थोक्त विद्याको आचार्य परम्परा दिइएको छ । जस्तै –

ॐ ब्रह्मा देवानां प्रथमः सम्बभूव, विश्वस्य कर्ता भुवनस्य गोप्ता ।
स ब्रह्मविद्यां सर्वविद्याप्रतिष्ठामथर्वाय ज्येष्ठपुत्राय प्राह ॥

अर्थात् सम्पूर्ण देवताहरूमध्ये सर्वप्रथम ब्रह्माजी उत्पन्न हुनुभयो । उहाँ विश्वको सृष्टिकर्ता र त्रिभुवनको रक्षक पनि हुनुहुन्थ्यो । उहाँले आफ्ना जेठा छोरा अथर्वालाई सम्पूर्ण विद्याहरूको आश्रय भएको ब्रह्मविद्याको उपदेश गर्नुभएको थियो । अथर्वाले त्यो विद्या अङ्गीलाई सिकाउनु भएको थियो । यो ब्रह्मविद्या अङ्गीले भारद्वाजका पुत्र सत्यवहलाई र सत्यवहले आफूभन्दा तलका

शिष्यहरू गर्दै भारद्वाजले आफ्ना पुत्र अङ्गिरालाई भनेको ब्रह्मविद्या श्रेष्ठबाट हुँदै कनिष्ठसम्म पुगेको थियो ।

उपर्युक्त अनुसार गुरुपरम्पराबाट विद्या शिष्यप्रशिष्यमा अघि बढ्दै जानेक्रम यस मुण्डकोपनिषद्मा वर्णन गरिएको छ । त्यसैक्रममा महागृहस्थ शौनकले अङ्गिरामुनि समक्ष गएर गुरूपसत्तिपूर्वक प्रश्न गरेको प्रसङ्ग आउँछ । जस्तै –

**शौनको ह वै महाशालोऽङ्गिरसं विधिवदुपसन्नः पप्रच्छ ।**
**कस्मिन्नु भगवो विज्ञाते सर्वमिदं विज्ञातं भवतीति ॥**

हे भगवन् ! कसलाई जानेपछि यो सबै जानिन्छ ? भनेर शौनकले गुरुसँग प्रश्न गरेपछि गुरु अङ्गिरा उत्तर दिँदै भन्छन् – *'तस्मै स होवाच, द्वे विद्ये वेदितव्ये इति ह स्म यद्ब्रह्मविदो वदन्ति परा चैवापरा च.'* अर्थात् – परा र अपरा गरेर दुई विद्याहरू जान्न योग्य भएको कुरा ब्रह्मवेत्ताहरूले भनेका छन् । यसमा पराविद्या भन्नाले परमात्मविद्या र अपराविद्या भन्नाले धर्म, अधर्मको साधन र तीसँग सम्बन्ध राख्ने विद्यालाई लिएको कुरा शाङ्करभाष्यमा वर्णन गरिएको छ ।

अर्को मन्त्रले अपरा र परा विद्याको वर्गीकरण गर्दै भनेको छ – *'तत्रापरा, ऋग्वेदो यजुर्वेदः सामवेदोऽथर्ववेदः शिक्षाकल्पो व्याकरणं निरुक्तं छन्दो ज्योतिषमिति, अथ परा यया तदक्षरमधिगम्यते.'* अर्थात् – अपराविद्यामा ऋग्वेद, यजुर्वेद, सामवेद, अथर्ववेद, शिक्षा, कल्प, व्याकरण, निरुक्त, छन्द र ज्योतिष पर्दछन् भने पराविद्यामा अक्षर परमात्माको ज्ञान गराउने विद्या पर्दछ । पराविद्याको वर्णन गर्दै अर्को मन्त्रले भन्दछ । जस्तै –

**यत्तदद्रेश्यमग्राह्यमगोत्रमवर्णमचक्षुः श्रोत्रं तदपाणिपादम् ।**
**नित्यं विभुं सर्वगतं सुसूक्ष्मं तदव्ययं यद्भूतयोनिं परिपश्यन्ति धीराः ॥**

त्यो अक्षरब्रह्म अदृश्य अर्थात् सम्पूर्ण ज्ञानेन्द्रियहरूको अविषय हो । अग्राह्य अर्थात् सम्पूर्ण कर्मेन्द्रियहरूको अविषय हो । अगोत्र अर्थात् अनन्वय हो । अवर्ण अर्थात् शुक्लत्वादि वर्णले रहित हो । त्यो ब्रह्म चक्षुश्रोत्रादिज्ञानेन्द्रियले रहित हो । त्यसैगरेर त्यो अक्षर ब्रह्म अपाणिपाद अर्थात् कर्मेन्द्रियले पनि रहित हो। त्यो नित्य अर्थात् अविनाशी हो । ऊ विभु अर्थात् ब्रह्मादेखि लिएर स्थावरसम्म व्यापक भएको हुँदा विभु हो। सर्वगत पनि हो। किन भने ऊ सबैमा अनुस्यूत र ओतप्रोत भएर रहेको छ। ऊ आकाश जस्तै अत्यन्त सूक्ष्म पनि छ। ऊ अव्यय अर्थात् कहिल्यै पनि ह्रास हुँदैन। त्यो अक्षरब्रह्म सम्पूर्ण भूतहरूको आदि कारण हो। त्यस अक्षरब्रह्मलाई विवेकी पुरुषहरू सबैतिर देख्तछन् ।

मुण्डकोपनिषद्को पहिलो मुण्डकको प्रथमखण्डको सातौँ मन्त्रमा अक्षरब्रह्मलाई भूतयोनित्वका रूपमा लौकिक उदाहरणसमेत दिएर वर्णन गरिएको छ। जस्तै –

**यथोर्णनाभिः सृजते गृह्णते च यथा पृथिव्यामोषयः सम्भवन्ति ।**
**यथा सतः पुरुषात्केशलोमानि तथाक्षरात्सम्भवतीह विश्वम् ॥**

अर्थात् – जसरी माकुरो आफ्ना शरीरबाट अरू कुनै पनि बाहिरी वस्तुको सहयोग नलिईकनै जालो फैलाउँछ, त्यसमा बसेर क्रीडा गर्दछ र अन्त्यमा त्यसलाई आफैँमा समाहित पनि गर्दछ । जसरी पृथिवीमा धान र जौदेखि लिएर वृक्षसम्मका सम्पूर्ण ओषधि र वनस्पतिहरू उत्पन्न हुन्छन्। अर्कोतर्फ जसरी जीवित

पुरुषका शरीरबाट रौँ र नङ उत्पन्न हुन्छन्। त्यसैगरेर त्यस अक्षर ब्रह्मबाट विश्व चराचरको उत्पत्ति हुन्छ। यी माथि वर्णन गरिएका अनेकौँ दृष्टान्तहरू अक्षरब्रह्मबाट हुने सृष्टिको दुरूह क्रमलाई सरलताका साथ संझाउनका लागि नै हो।

अक्षरब्रह्मबाट उत्पन्न हुने सृष्टिको क्रमलाई आठौँ मन्त्रले यसरी वर्णन गरेको छ –

तपसा चीयते ब्रह्म ततोऽन्नमभिजायते ।
अन्नात्प्राणो मनः सत्यं लोकाः कर्मसु चामृतम् ॥

अर्थात् – ज्ञानरूप तपका माध्यमबाट ब्रह्ममा जगत् सृजना गर्ने इच्छा उत्पन्न हुन्छ। त्यसबाट ब्रह्म केही स्थूल हुनजान्छ। बीजबाट अङ्कुर उत्पन्न भएझैँ गरेर ब्रह्मबाटै अन्न उत्पन्न हुन्छ। फेरि अन्नबाट क्रमशः प्राण, मन, सत्य अर्थात् भूतप्रपञ्च लोक, कर्म र कर्मबाट अमृतसंज्ञक कर्मफलको समेत उत्पत्ति हुन्छ।

प्रथम मुण्डकको प्रथम खण्डको समाप्ति गर्दै श्रुति भन्दछ –

यःसर्वज्ञः सर्वविद्यस्य ज्ञानमयं तपः ।
तस्मादेतद्ब्रह्म नामरूपमन्नं च जायते ॥

अर्थात् – जुन योभन्दा पहिले भनिएको अथवा लक्षणाले युक्त भएको अक्षर संज्ञक ब्रह्म सर्वज्ञ अर्थात् सामान्यरूपले सबैलाई जान्दछ। त्यसैले ब्रह्मको अर्को नाम सर्ववित् पनि हो। विशेषरूपले सबै कुरा जान्ने भएको हुँदा ब्रह्मलाई सर्वज्ञ वा सर्ववित् भनिएको हो। जुन ब्रह्मको ज्ञानमय अर्थात् सर्वज्ञातारूप ज्ञानविकार नै तप हो। त्यसै अक्षरब्रह्मबाट नै यो हिरण्यगर्भसंज्ञक कार्यब्रह्मको उत्पत्ति

हुन्छ। यसैबाट माथिका मन्त्रहरूमा वर्णन गरिए अनुसार नाम अर्थात् यज्ञदत्त, देवदत्त आदि, रूप अर्थात् शुक्ल, नील आदि र अन्न अर्थात् ब्रीहि, यवादिको उत्पत्ति हुन्छ।

मुण्डकोपनिषद्को प्रथम मुण्डकको द्वितीय खण्डमा जम्मा १३ मन्त्रहरू छन्। यस खण्डमा अपराविद्यामा विधान गरिए अनुसार कर्मको निरूपण गरिएको छ। त्यसै सन्दर्भमा प्रथम मन्त्रले यसको उपक्रम देखाउँदै भनेको छ –

**तदेतत्सत्यं मन्त्रेषु कर्माणि कवयो या–**
**न्यपश्यंस्तानि त्रेतायां बहुधा सन्ततानि।**
**तान्याचरथ नियतं सत्यकाम**
**एव वः पन्थाः सुकृतस्य लोके ॥**

शब्दार्थ :– तत् – त्यो, एतत् – यो, सत्यम् – सत्य हो, कवयः– बुद्धिमान् ऋषिहरूले, यानि – जुन, कर्माणि – कर्महरूको, मन्त्रेषु– वेदमन्त्रहरूमा, अपश्यन् – देखेका थिए, तानि – तिनै, त्रेतायाम् – तीनैथरी वेदहरूमा, बहुधा – धेरै तरिकाले, सन्ततानि – व्याप्त छन्, सत्यकामाः – हे सत्यलाई मनपराउने मानिसहरू हो ! तानि– तिनका, नियतम् – नियमपूर्वक, आचरथ – अनुष्ठान गर, लोके – यस मनुष्य शरीरमा, वः – तिम्रा लागि, एष – यही, सुकृतस्य – शुभकर्मका फल प्राप्तिको, पन्थाः – मार्ग हो।

पदार्थ :– बुद्धिमान् ऋषिहरूले जुन कर्महरूलाई मन्त्रहरूद्वारा साक्षात्कार गरेका थिए, त्यही नै सत्य हो। त्रेतायुग अथवा तीनै वेदहरूमा तिनै कर्महरूलाई अनेक प्रकारले विस्तार गरिएको छ।

सत्य अर्थात् कर्मफलको कामनाले युक्त भएर तिनको सधैँ आचरण गर्नुपर्दछ। यस संसारमा यही नै तिम्रालागि सुकृत अर्थात् कर्मफलको सरल बाटो हो।

यसपछि दोस्रो मन्त्रमा अग्निहोत्र वैदिक कर्मको वर्णन गरिएको छ। किनभने यसैलाई वेदले प्राथमिकता दिएको छ–

**यदा लेलायते ह्यर्चिः समृद्धे हव्यवाहने।**
**तदाज्यभागावन्तरेणाहुतीः प्रतिपादयेत्॥**

शब्दार्थ :– यदा – जुन समयमा, हि – निश्चय नै, हव्यवाहने समिद्धे – हविष्यलाई देवताहरूसमक्ष पुर्‍याउने भएका अग्नि प्रदीप्त भएपछि, अर्चि – अग्निको ज्वाला, लेलायते – लपलपाउन लाग्दछ, तदा – त्यस समयमा, आज्य भागौ अन्तरेण – आज्यभागका बीचमा, आहुतीः – अरू आहुतिहरू पनि, प्रतिपादयेत् – अर्पण गरोस् अर्थात् आगोमा हालोस्।

पदार्थ :– जुन समयमा अग्निमा चारैतिरबाट हालिएका ईन्धनहरूद्वारा अग्नि दनदनी बल्न थाल्दछ र अग्निको ज्वाला लपलपाउन थाल्दछ, त्यसै समयमा आज्यभागका मध्यमा अर्थात् आवापस्थानमा अर्थात् दर्शपौर्णमास यज्ञमा आहवनीय अग्निका उत्तर र दक्षिणमा *'अग्नये स्वाहा'* तथा *'सोमाय स्वाहा'* भनेर देवतालाई उद्देश्य गरेर आहुतिहरू दिनुपर्दछ।

तेस्रो मन्त्रले उपर्युक्त यज्ञमा विधिपूर्वक हवन भएमा स्वर्ग प्राप्ति र अविधिपूर्वक हवन भएमा त्यस यज्ञका यजमानको सात पुस्तासम्मको नाश हुने कुराको वर्णन गरेको छ।

त्यसपछि हवन गरिने अग्निका सात जिब्राहरू भएको तथ्यको

वर्णन गर्दै मन्त्र भन्दछ । जस्तै –

**काली कराली च मनोजवा च सुलोहिता या च सुधूम्रवर्णा ।**
**स्फुलिङ्गिनी विश्वरुची च देवी लेलायमाना इति सप्त जिह्वा ।।**

शब्दार्थ :– या – जो, काली – कालो रङ भएकी, कराली – अति उग्र, च – र, मनोजवा – मनजस्तै अत्यन्त चञ्चल, च – र, सुलोहिता – सुन्दर लालिमा युक्त, च – तथा, सुधूम्रवर्णा – धूँवाजस्तो रङ भएकी, स्फुलिङ्गिनी – आगाको झिल्काजस्ती चम्किली, विश्वरुची देवी – सबैतिरबाट देदीप्यमान भएकी देवीजस्ती, इति – यस अग्निका, सप्त – सात, लेलायमाना – लपलपाइरहेका, जिह्वा – जिब्राहरू छन् ।

पदार्थ :– काली, कराली, मनोजवा, सुलोहिता, सुधूम्रवर्णा, स्फुलिङ्गिनी र विश्वरुची समेत नाम भएका अग्निका लपलपाउँदा सातओटा जिब्राहरू आहुतिलाई भक्षण गर्नका निमित्त नै हुन् ।

जुन पुरुष माथि उल्लेख भएको देदीप्यमान अग्निशिखामा यथासमय विधिपूर्वक आहुति दिएर अग्निहोत्रादि कर्म गर्दछ, त्यो पुरुष सूर्यरश्मिद्वारा स्वर्गलोकमा गएर देवताका साथमा बसेर आफ्नो कर्मफलको भोग गर्दछ ।

उपर्युक्त कर्म गर्नु र कर्मको फल प्राप्त गर्नु भनेको ज्ञानरहित गरिएको सकाम कर्मलाई भनिएको हो । यो अविद्या, काम र कर्मको कार्य हो । त्यसैकारण यो साररहित दुःखको जड हो । यस्ता कर्मको निन्दा गर्दै अगाडिका मन्त्रले भनेको छ । जस्तै –

**प्लवा ह्येते अदृढा यज्ञरूपा अष्टादशोक्तमवरं येषु कर्म ।**
**एतच्छ्रेयो येऽभिनन्दन्ति मूढा जरामृत्युं ते पुनरेवापि यान्ति ॥**

शब्दार्थ :– हि – निश्चय नै, एते – यी, यज्ञरूपाः – यज्ञरूपी, अष्टादश प्लवाः – अठारथरी सोर, ऋत्विक, यजमान र यजमानकी पत्नीसमेत विनाशशील, अदृढाः अस्थिर भएका, येषु – जुन यज्ञहरूमा, अवरम् – तल्लोश्रेणीको, कर्म – ज्ञान रहितको सकाम कर्म, उक्तम् – बताइएकोछ। ये – जुन, मूढाः – मूर्खहरू, एतत्– यसैलाई नै, श्रेयः – कल्याणको मार्ग हो भन्ने सम्झेर, अभिनन्दन्ति– स्वागत गर्दछन्, ते – त्यस्ता व्यक्तिहरू, पुनः अपि – फेरि पनि, एव – निश्चय नै, जरा मृत्युम् – वृद्धावस्था र मृत्युमा समेत, यान्ति – प्राप्त हुन्छन्।

पदार्थ :– जुन यज्ञमा निकृष्ट सकाम कर्मको विधान गरिएको हुन्छ। जसमा ऋत्विक्, यजमान र यजमानपत्नी समेत गरेर १८ नाशवान् यज्ञहरूको वर्णन गरिएको छ। जुन यज्ञलाई अविवेकी पुरुषहरू यसैलाई श्रेयोमार्गको साधन हो भनेर स्वीकार गर्दछन् र हर्षित पनि हुन्छन्। त्यस्ता अज्ञानी पुरुषहरू जरा र मृत्युका दुश्चक्रमा परेर संसारमा बारम्बार घुमिरहन्छन्।

उपर्युक्त मन्त्रमा बताइएका अविद्याग्रस्त कर्मठहरूको हुने दुर्दशाका सम्बन्धमा अर्को मन्त्रमा भनिएको छ –

**अविद्यायामन्तरे वर्तमानाः स्वयं धीराः पण्डितंमन्यमानाः।**
**जङ्घन्यमानाः परियन्ति मूढा अन्धेनैव नीयमाना यथान्धाः॥**

शब्दार्थ :– अविद्यायामन्तरे – अविद्याको गहन अन्धकारभित्र, वर्तमानाः – रहेर पनि, स्वयं धीराः – स्वयं आफैँलाई मुद्धिमान् र, पण्डितंमन्यमानाःविद्वान् ठान्ने, मूढा – मूर्खहरू, जङ्घन्यमानाः – अत्यन्त पीडित भएर, परियन्ति – घुमिरहन्छन्। यथा – जस्तै,

अन्धेन एव – अन्धाले नै, नीयमानाः – डोऱ्याएर हिँडाइएका, अन्धाः अन्धाहरूजस्तै ।

पदार्थ, अविद्याका गहन अन्धकारले घेरिएका तर आफैँलाई बुद्धिमान् र पण्डित ठान्ने मूर्ख मान्छेहरू बुढ्याँइँ र रोग आदि अनेक अनर्थ जालले पीडित भएर चारैतिर घुमिरहन्छन् । जसरी यस संसारमा अन्धो अर्थात् दृष्टिविहीन मान्छेले डोऱ्याएर लगिएको अर्को अन्धो खाल्टो, काँडा र अरू पनि पीडादायक अनर्थको भुमरीमा जाकिन पुग्दछ । ती आफैँलाई सर्वज्ञ ठानेर अविद्यायुक्त काम गर्ने कर्मीहरू अन्धाका पछि लागेर हिँड्ने अन्धा मान्छे जस्तै हुन् ।

धेरैजसो अविद्यायुक्त कर्ममा लागेका मानिसहरू आफूलाई कृतार्थ भएको ठानेर अभिमान पनि गर्दछन् । किनभने कर्मठहरू उनीहरूले गरेको कर्मफलविषयक रागको कारण उनीहरूलाई तत्त्वज्ञान हुँदैन । त्यसैकारण उनीहरू आफ्नू कर्मफलको भोग गरिसकेपछि स्वर्गबाट तल पृथ्वीमा झर्दछन् । यसै कुरालाई अझ व्याख्या गर्दै अर्को मन्त्रले पनि भनेको छ । इष्ट अर्थात् यागादि श्रौतकर्म र पूर्त अर्थात् वापी, कूप, तडागादि स्मार्तकर्महरूलाई सर्वोत्तम मान्ने अत्यन्त मूढ व्यक्तिहरू अरू कुनै पनि कुरालाई श्रेयस्कर मान्दैनन् । तिनीहरू आफ्ना पुण्यका प्रभावले प्राप्त हुने स्वर्गको सुखको अनुभव गरेर उनीहरू फेरि यसै पृथ्वीलोकमा वा यसभन्दा पनि निकृष्ट लोकमा झर्दछन् वा प्रवेश गर्दछन् ।

उपर्युक्त कुरा भए तापनि शान्त तथा विद्वत्तायुक्त विद्वान्हरू वनमा बसेर भिक्षाचर्या गरेर श्रद्धाका साथ तपस्या गर्दछन्भने

त्यस्ता व्यक्तिहरू पापरहित भएर सूर्यद्वारा उत्तरायणमार्गबाट अमृत अर्थात् अव्ययात्मा पुरुष भएका ठाउँमा जान्छन् । सारांशमा त्यस्ता महात्माहरू हिरण्यगर्भको लोक अर्थात् ब्रह्मलोकमा पुग्दछन् ।

मुण्डकोपनिषद्को प्रथम मुण्डकको दोस्रो खण्डको अन्त्यमा यस साध्यसाधनरूप संसारमा विरक्त पुरुषलाई मात्र पराविद्यामा अधिकार हुने कुरा स्पष्टरूपमा दर्शाइएको छ । जस्तै –

**परीक्ष्य लोकान्कर्मचितान्ब्राह्मणो**
**निर्वेदमायान्नास्त्यकृतः कृतेन ।**
**तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत्**
**समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम् ॥**

शब्दार्थ, कर्मचितान् – कर्म गरेर प्राप्त हुने, लोकान् – लोकहरूको, परीक्ष्य – विचार गरेर, ब्राह्मणः – ब्रह्मज्ञानी, निर्वेदम्– वैराग्यलाई, आयात् – प्राप्त गरोस् । कृतेन – सकाम आदि कर्महरूद्वारा, अकृतः – स्वसिद्ध नित्य ब्रह्म, न अस्ति – प्राप्त गर्न सकिँदैन । स – त्यो विरक्त पुरुष, तद्विज्ञानार्थम् – त्यस परब्रह्मलाई जान्नका लागि, समित्पाणि – हातमा समिधा लिएर, श्रोत्रियम् – वेदको राम्रो ज्ञान भएका, ब्रह्मनिष्ठम् – ब्रह्मज्ञानी, गुरुम् – गुरुसमक्ष, एव – नै, अभिगच्छेत् – जाओस् ।

पदार्थ :– कर्म अर्थात् ऋग्वेदादि अपरविद्याका विषय भएका अर्थात् काम, कर्म र फलसँग सम्बन्ध भएका कर्महरूद्वारा प्राप्त भएका स्वर्गादि लोकहरूको परीक्षा अर्थात् विचार गरेर मुमुक्षु ब्राह्मण विरक्त बनोस् । किनभने यस मायिक संसारमा अकृत अर्थात् नित्य पदार्थहरू छैनन् । सबैथरी मायाद्वारा प्राप्त हुने भएका हुँदा ती अनित्य छन् । सम्पूर्ण कर्महरू ४ प्रकारका हुन्छन् । ती

हुन् – उत्पाद्य, आप्य, विकार्य र संस्कार्य। यी कृत अर्थात् अनित्य वस्तुसँग प्रयोजन नराखेर त्यही नित्य वस्तु अर्थात् अमृत, अभय, कूटस्थ, अचल र ध्रुव पदार्थको इच्छा राखेर त्यसैको साक्षात् ज्ञान प्राप्त गर्नका लागि हातमा समिधा लिएर श्रोत्रिय – अध्ययन र श्रवण गरेका अर्थले सम्पन्न तथा ब्रह्मनिष्ठ – सम्पूर्ण कर्महरू त्याग गरेर जसको निष्ठा अद्वितीय ब्रह्ममा मात्रै छ, त्यस्ता सद्गुरुका समक्ष गएर उनलाई प्रसन्न गराएर ब्रह्म अर्थात् सत्य तथा अक्षर पुरुषका सम्बन्धमा मुमुक्षु ब्राह्मणले आफ्नू जिज्ञासा विनयपूर्वक राखोस्।

त्यसरी गुरुका शरणमा विधिपूर्वक आएका पूर्णतया शान्त चित्त एवं जितेन्द्रिय शिष्यलाई ज्ञानी गुरुले ब्रह्मविद्याको तत्त्वतः उपदेश गर्नुपर्दछ। जसबाट जिज्ञासु तथा मुमुक्षु शिष्यलाई त्यस सत्य तथा अक्षर पुरुषको ज्ञान हुनसकोस्।

त्यसपछि द्वितीय मुण्डकको प्रथम खण्डदेखि पराविद्याको प्रसङ्ग शुरु हुन्छ। यहाँसम्म अपराविद्याको चर्चा श्रुतिले गरेको छ। यस खण्डको प्रथम मन्त्रदेखि अङ्गिरा मुनिले आफ्ना शिष्यलाई यसरी उपदेश गरेकाछन्। जुन उपदेश यसप्रकार छ। जस्तै –

**तदेतत्सत्यं यथा सुदीप्तात्पावकाद्विस्फुलिङ्गाः**
**सहस्रशः प्रभवन्ते सरूपाः।**
**तथाक्षराद्विविधाः सोम्य भावाः**
**प्रजायन्ते तत्र चैवापियन्ति ॥**

शब्दार्थ, सोम्य – हे प्रिय ! तत् – त्यो, सत्यम् – सत्य, एतत्–

यो हो, यथा – जसरी, सुदीप्तात् पावकात् – प्रज्वलित अग्निबाट, सरूपाः – उसकै जस्ता रूप भएका, सहस्रशः – हजारौँ, विस्फुलिङ्गाः – झिल्काहरू, प्रभवन्ते – नाना प्रकारले प्रकट हुन्छन् । तथा – त्यसैगरेर, अक्षरात् – अविनाशी ब्रह्मबाट, विविधाः– नानाप्रकारका, भावाः – जीवहरू, प्रजायन्ते – उत्पन्न हुन्छन् । च – फेरि, तत्र एव – उसैमा, अपियन्ति – विलीन हुन्छन् ।

पदार्थ :– त्यो अक्षर ब्रह्म सत्य हो । जसरी अत्यन्त प्रदीप्त अग्निबाट ऊ जस्तै रूप भएका हजारौँ फिलिङ्गा झिल्काहरू निस्कन्छन् । हे सोम्य ! त्यसै गरेर त्यस अक्षर परब्रह्मबाट अनेकौँ भाव अर्थात् नाना देहोपाधिले युक्त जीवहरू उत्पन्न हुन्छन् र अन्त्यमा त्यसै अक्षर परब्रह्ममा गएर मिल्दछन् ।

त्यस अक्षर परब्रह्मको पारमार्थिक स्वरूपको वर्णन गर्दै श्रुति भन्दछ –

**दिव्यो ह्यमूर्तः पुरुषः सबाह्याभ्यन्तरो ह्यजः ।**
**अप्राणो ह्यमनाः शुभ्रो ह्यक्षरात्परतः परः ॥**

शब्दार्थ :– हि – निश्चय नै, दिव्यः – दिव्य, पुरुषः – पूर्ण अथवा शरीररूप पुरमा शयन गर्ने, अमूर्तः – आकाररहित, सवाह्याभ्यन्तरः – बाहिर र भित्र सबैतिर व्याप्त, हि – निश्चय नै, अजः – जन्मादि विकारहरूले रहित, अप्राणः – प्राणरहित, अमनाः – मनरहित, हि – भएको कारण, शुभ्रः – सर्वथा विशुद्ध छ । हि – यसैकारण, अक्षरात् – जीवात्माभन्दा, परतः परः – अत्यन्त श्रेष्ठ छ ।

पदार्थ :– त्यो अक्षर ब्रह्म निश्चय नै दिव्य, अमूर्त, पूर्ण पुरुष, बाहिरभित्र सर्वत्र व्याप्त, जन्मादि षड्भावविकाररहित, अप्राण, मनोहीन, विशुद्ध र कार्यवर्गको अपेक्षा श्रेष्ठ छ। त्यतिमात्र होइन त्यो परब्रह्म अक्षर अर्थात् अव्याकृत प्रकृतिभन्दा पनि उत्कृष्ट अर्थात् परछ।

त्यसै परब्रह्मलाई नै सम्पूर्ण सृष्टिको कारण भएको कुरा बताउँदै उपनिषद् अगाडि भन्दछ। जस्तै –

**एतस्माज्जायते प्राणो मनः सर्वेन्द्रियाणि च।**
**खं वायुर्ज्योतिरापः पृथिवी विश्वस्य धारिणी ॥**

शब्दार्थ :– एतस्मात् – यसै परब्रह्मबाट, प्राणः – प्राण, जायते– उत्पन्न हुन्छ। मनः – मन अर्थात् अन्तःकरण, सर्वेन्द्रियाणि – सम्पूर्ण इन्द्रियहरू, खम् – आकाश, वायुः – वायु, ज्योतिः – तेज, आपः – जल, च – र, विश्वस्य धारिणी – सम्पूर्ण प्राणीहरूलाई धारणा गर्ने, पृथिवी – पृथ्वीको पनि उत्पत्ति हुन्छ।

पदार्थ :– यसै अक्षर पुरुषबाट नै प्राण उत्पन्न हुन्छ। त्यसैगरेर मन, इन्द्रियहरू, आकाश, वायु, तेज, जल र सम्पूर्ण संसारलाई धारणा गर्ने भएकी पृथिवीको पनि उत्पत्ति हुन्छ। नामरूपको कारण भएको अविद्यारूप उपाधिले उपलक्ष्यित अक्षर पुरुषबाट नै संसारको सृष्टि हुन्छ। किनभने निरुपाधिक विशुद्ध ब्रह्मबाट कुनै पनि प्रकारको उत्पत्ति सम्भव हुँदैन। त्यसैकारण जब उसबाट उत्पत्तिको प्रतिपादन गरिन्छ, तब ब्रह्ममा अविद्या अथवा मायाको आरोप गरिन्छ।

यसपछि सर्वभूतान्तरात्मा ब्रह्मको विश्वरूपको वर्णन,

अक्षरपुरुषको चराचरको उत्पत्तिको क्रमको चर्चा, कर्मका साधनहरू र कर्मफल समेत उसै ब्रह्मबाट उत्पन्न भएका कुराको विस्तृत वर्णन श्रुतिले गरेको छ । यस खण्डको अन्त्यमा गएर श्रुतिले इन्द्रिय, विषय र इन्द्रियका स्थानहरू पनि ब्रह्मबाटै सिर्जित भएका हुन् भन्दै पर्वत, नदी र ओषधि आदिको उत्पत्ति पनि ब्रह्मबाटै भएको उल्लेख गर्दै अन्तिम मन्त्रले ब्रह्म र जगत्को अभेद सम्बन्ध देखाइएको छ । किन भने यो सारा जगत् ब्रह्मको नै विवर्त हो । ब्रह्मज्ञानबाट अविद्याग्रन्थिको नाश हुने कुरा पनि यस मन्त्रले बताएको छ । जस्तै –

**पुरुष एवेदं विश्वं कर्म तपो ब्रह्म परामृतम् ।**
**एतद्यो वेद निहितं गुहायां**
**सोऽविद्याग्रन्थिं विकिरतीह सोम्य ॥**

अर्थात् – यो सारा जगत् कर्म र तप अर्थात् ज्ञान, पुरुष वा ब्रह्म नै हो । यो सबै परब्रह्म नै हो । त्यस ब्रह्मलाई जसले सम्पूर्ण प्राणीहरूका अन्तःकरणमा रहेको जान्दछ, हे सोम्य ! त्यसले आफ्नो हृदयमा रहेको अविद्याको ग्रन्थिलाई उच्छेदन गर्दछ ।

मुण्डकोपनिषद्को दोस्रो मुण्डकको दोस्रो खण्डको पहिलो मन्त्रमा ब्रह्मको स्वरूपको निर्देशनका साथै ब्रह्मलाई जान्ने उपाय पनि अङ्गिरा मुनिले शिष्यहरूलाई बताएकाछन् । जस्तै –

**आविः संनिहितं गुहाचरं नाम महत्पदमत्रैतत्समर्पितम् ।**
**एजत्प्राणन्निमिषच्च यदेतज्जानथ सदसद्वरेण्यं**
**परं विज्ञानाद्यद्वरिष्ठं प्रजानाम् ॥**

शब्दार्थ :– आविः – प्रकाशस्वरूप, सन्निहितम् – अत्यन्त समीपस्थ, गुहाचरं नाम – गुहाचर नामबाट प्रसिद्ध यो महत्पदम् – महान् पद, सबैका लागि स्पृहणीय पद हो। यत् – जति पनि, एजत् – चेष्टा गर्दछन्, प्राणत् – शास फेर्दछन् र निमिषत् – आँखा हेर्ने र चिम्लने गर्दछन्। एतत् – यी सबै, अत्र – यसै ब्रह्ममा नै, समर्पितम् – प्रतिष्ठित छन्। एतत् – यसै ब्रह्मलाई, जानथ – तिमीहरू जान। यत् – जुन, सत् – सत् र असत् – असत् हो। यो ब्रह्म नै वरेण्यम् – सबैले जान्न र वरण गर्न योग्य छ। यो नै, वरिष्ठम् – अत्यन्त श्रेष्ठतम पनि छ। यो ब्रह्म, प्रजानाम् – सम्पूर्ण प्राणीमात्रका, विज्ञानात् – बुद्धिदेखि, परम् – टाढा छ।

पदार्थ :– त्यो ब्रह्म प्रकाशस्वरूप सम्पूर्ण प्राणीहरूका हृदयमा रहने गुहाचर नाम भएको महत्पद हो। यसै ब्रह्मको सत्ता पाएर नै प्राणीहरू चेष्टा गर्दछन्, शास फेर्दछन्, संसार देख्तछन् र सबै यसैमा समर्पित छन्। हे शिष्यहरू हो ! यी सबै नै ब्रह्मका आश्रयमा रहेको कुरा तिमीहरू जान। त्यो सदसत्स्वरूप तिमीहरूको नै आत्मा हो। यो सम्पूर्ण सृष्टि नै सदसद्रूप हो। यसभन्दा पर केही छैन। यो ब्रह्म नित्य भएको कारण सबै भूतप्राणीको वरणीय र प्रार्थनीय समेत छ। यस ब्रह्मलाई लौकिक विज्ञानबाट जान्न सकिँदैन। यो ब्रह्म वरिष्ठ सम्पूर्ण श्रेष्ठ पदार्थहरूमा श्रेष्ठतम छ। यस ब्रह्ममा कुनै प्रकारका दोषहरू छैनन्।

अक्षर ब्रह्मको स्वरूप बताउँदै र त्यसमा मनोनिवेश गर्ने कुराको उपदेश गर्दै अङ्गिरा मुनि आफ्ना शिष्यहरूलाई बताउनु हुन्छ –

**यदर्चिमद्यदणुभ्योऽणु च यस्मिँल्लोका निहिता लोकिनश्च ।**
**तदेतदक्षरं ब्रह्म स प्राणस्तदु वाङ्मनः ।**
**तदेतत्सत्यं तदमृतं तद्वेद्धव्यं सोम्य विद्धि ॥**

शब्दार्थ :– यत् – जुन, अर्चिमत् – दीप्तिमान् छ, च – र, यत्– जुन, अणुभ्यः – सूक्ष्मभन्दा पनि, अणु – सूक्ष्म छ । यस्मिन् – जसमा, लोकाः – सम्पूर्ण लोकहरू, च – र, लोकिनः – ती लोकहरूमा रहने प्राणीहरू, निहिताः – स्थितछन् । तत् – त्यो, एतत् – यो, अक्षरम् – अविनाशी, ब्रह्म – ब्रह्म हो । स – सोही, प्राणः – प्राण हो । तत् उ – उही, वाक् – वाणी हो, मनः – मन हो । तत् – उही, एतत् – यो, सत्यम् – सत्य हो । तत् – उही, अमृतम् – अमृत हो, सोम्य – हे सोम्य ! तत् – त्यस, वेद्धव्यम् – वेधन गर्न योग्य लक्ष्यलाई, विद्धि – तिमी वेध गर ।

जुन ब्रह्म दीप्तिमान् र अणुभन्दा पनि अणु छ । जुन ब्रह्ममा सम्पूर्ण लोकहरू र ती लोकहरूका निवासीहरू पनि स्थित छन् । त्यही नै अक्षर ब्रह्म हो । त्यही प्राण हो, त्यही वाक् हो र त्यही नै मन पनि हो । त्यही नै सत्य हो र त्यही नै अमृत हो । हे सोम्य ! त्यसै अक्षर ब्रह्मलाई आफ्नो मनोनिवेशद्वारा वेधन गर्नुपर्दछ, तिमी त्यसलाई वेधन गर । अर्थात् आफ्नू चित्तलाई ब्रह्ममा लगाऊ ।

त्यसपछि ब्रह्मवेधनको विधि, वेधन गर्नका लागि ग्रहण गरिने धनुषादिको स्पष्टीकरण, आत्मसाक्षात्कारका निमित्तको पुनर्विधि, ओङ्काररूपबाट ब्रह्मचिन्तनविधि, अक्षर ब्रह्मको वर्णन, त्यसको चिन्तनको प्रकार र ब्रह्मसाक्षात्कारको फलको पनि श्रुतिले विशदरूपमा वर्णन गरेको छ । ब्रह्मसाक्षात्कारको फल बताउँदै श्रुतिले भनेको छ । जस्तै –

भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः ।
क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे ॥

शब्दार्थ :– तस्मिन् परावरे दृष्टे – कार्यकारणस्वरूप त्यस परात्पर ब्रह्मलाई तत्त्वतः जानिसकेपछि, अस्य हृदयग्रन्थिः – यस जीवात्माको हृदयको गाँठो, भिद्यते – खुल्दछ । सर्वसंशयाः – सबै संशयहरू – छिद्यन्ते – काटिन्छन् । कर्माणि – सम्पूर्ण शुभाशुभकर्महरू, क्षीयन्ते – नष्ट भएर जान्छन् ।

पदार्थ :– त्यस परावर अर्थात् कार्यकारणरूप ब्रह्मको साक्षात्कार गरिसकेपछि जीवको हृदयग्रन्थि छिन्नभिन्न हुन्छ । यहाँ हृदयग्रन्थि भन्नाले बुद्धिमा रहेको अविद्यावासनामय कामलाई लिइएको छ । त्यसपछि जीवका सम्पूर्ण संशयहरू नष्ट हुन्छन् र उसका कर्महरू पनि क्षीण भएर जान्छन् ।

श्रुतिले ज्योतिर्मय ब्रह्मको वर्णन गर्दै ब्रह्मको सर्वप्रकाशकत्वको पनि वर्णन गरेको छ । जस्तै –

न तत्र सूर्यो भाति न चन्द्रतारकं नेमा विद्युतो भान्ति कुतोऽयमग्निः ।
तमेव भान्तमनुभाति सर्वं तस्य भासा सर्वमिदं विभाति ॥

शब्दार्थ :– तत्र – त्यहाँ, न – न ता, सूर्यः – सूर्य, भाति – प्रकाशित हुन्छ । न – न ता, चन्द्रतारकम् – चन्द्रमा र ताराहरू नै, न इमा – न यी, विद्युतः – विजुलीहरू नै, भान्ति – चम्किन्छन् । अयं अग्निः कुतः – यस अग्निको त के कुरा गर्ने ? तम् भान्तं एव– ऊ प्रकाशित भएपछि उसकै प्रकाशले नै, सर्वम् – सबै, अनुभाति – प्रकाशित हुन्छन् । तस्य – उसैको भासा – प्रकाशले, इदम् सर्वम् – यो सम्पूर्ण जगत्, विभाति – प्रकाशित हुन्छ ।

पदार्थ :– उस आत्मस्वरूप ब्रह्ममा न सूर्य प्रकाशित हुन्छन्, न चन्द्रमा प्रकाशित हुन्छन् न ता ताराहरू नै प्रकाशित हुन्छन्। त्यहाँ बिजुली पनि चम्किँदैन भने त्यहाँ अग्निको त के कुरा गर्ने ? त्यही ब्रह्म प्रकाशित भएपछि नै यी सबै प्रकाशित हुन्छन्। यी सम्पूर्ण सूर्य र चन्द्रमादेखि लिएर अन्य दृश्य पदार्थहरू पनि यसै ब्रह्मबाट प्रकाशित हुन्छन्। किनभने ब्रह्म नै कार्यगत विविध प्रकाशले विशेषरूपले प्रकाशित भइरहेको छ।

यसबाट त्यस ब्रह्मको प्रकाशरूपता स्वतः थाहा हुन्छ। जसमा स्वयं प्रकाश छैन, त्यसले अर्कोलाई प्रकाशित गर्न सक्तैन।

यस खण्डको निगमनस्थानीय अन्तिम मन्त्रले उपसंहार गर्दै श्रुति भन्दछ –

**ब्रह्मैवेदममृतं पुरस्ताद्ब्रह्म पश्चाद्ब्रह्म दक्षिणतश्चोत्तरेण।**
**अधश्चोर्ध्वं च प्रसृतं ब्रह्मैवेदं विश्वमिदं वरिष्ठम्॥**

शब्दार्थ :– इदम् – यो, अमृतम् – अमृतस्वरूप, ब्रह्म – परब्रह्म, एव – नै, पुरस्तात् – अगाडि छ, यो ब्रह्म नै, पश्चात् – पछाडि छ, दक्षिणतः – दायाँपट्टि, उत्तरेण – बायाँपट्टि छ। अधः – तलतिर र ऊर्ध्वम् – माथितिर पनि, प्रसृतम् – फैलिएको, इदम् – यो, विश्वम् – सम्पूर्ण जगत् देखिन्छ। इदम् – यो, वरिष्ठम् – सर्वश्रेष्ठ, ब्रह्म एव – ब्रह्म नै हो।

पदार्थ :– यो अमृत ब्रह्म नै अगाडिपट्टि छ। अर्थात् अविद्याले दृष्टि ढाकिएका अज्ञानीहरूका अगाडिपट्टि पनि यही सर्वव्यापक ब्रह्म विद्यमान छ। पछाडि, दायाँ, बायाँ सबैतिर त्यही ब्रह्म छ। त्यो सर्वव्यापक ब्रह्म कार्यरूप भएर अर्थात् नामरूपविशिष्ट भएर

सबैतिर फैलिएको छ। जे जति दृश्य पदार्थ छ, त्यो सबै ब्रह्म नै हो। यो सम्पूर्ण अब्रह्मरूप प्रतीति डोरीमा सर्पको प्रतीति जस्तै अविद्यामात्र हो। एकमात्र ब्रह्म नै परमार्थ सत्य हो। अन्ततोगत्त्वा वेदको उपदेश यही नै हो।

यस मुण्डकोपनिषद्को अन्तिम मुण्डकमा दुई खण्ड छन्। यसको प्रथम खण्डमा अत्यन्त रोचक शैलीमा ब्रह्मको निरूपण गरिएको छ। ईश्वर अर्थात् साक्षी र जीवलाई रूपकालङ्कारको आश्रय लिएर श्रुतिले यस अत्यन्त प्रसिद्ध मन्त्रलाई यसरी प्रस्तुत गरेको छ। जस्तै –

**द्वा सुपर्णा सयुजा सखाया समानं वृक्षं परिषस्वजाते।**
**तयोरन्यः पिप्पलं स्वाद्वत्त्यनश्नन्नन्यो अभिचाकशीति॥**

शब्दार्थ :– सयुजा– साथसाथै बस्ने भएका, सखाया – परस्परमा साथीको भाव राख्ने भएका, द्वा – दुईओटा, सुपर्णा – पक्षीहरू, (जीवात्मा र परमात्मा) समानं वृक्षं परिषस्वजाते – एउटै वृक्षरूपी शरीरको आश्रय लिएर बस्तछन्। तयोः – ती दुई पक्षीहरूमध्येको, अन्यः– एउटा पक्षी चाहिँ, पिप्पलम्– कर्मरूपी फल, स्वादु– स्वाद लिईकन, अत्ति– खान्छ। अन्यः –अर्को चरो चाहिँ, अनश्नन्– नखाईकन, अभिचाकशीति – केवल हेरेरमात्र बसिरहन्छ।

पदार्थ :– पञ्चमहाभूतले बनेको शरीरलाई वृक्षका रूपमा यस मन्त्रमा वर्णन गरिएको छ। यस शरीररूपी वृक्षमा सुन्दर पँखेटा भएका जीव र ईश्वररूपी दुइटा चराहरू आश्रय लिएर बस्तछन्। यी पक्षीहरूको आख्यान समान छ र यी सधैँ नै साथसाथै रहन्छन्। ती दुई चराहरूमध्ये एउटा चरो अर्थात्

जीवात्मा स्वाद लिएर पिप्पल अर्थात् कर्मफलको भोग गर्दछ। अर्को चरो अर्थात् ईश्वर किंवा साक्षी भने कुनै भोग नगरीकन केवल हेरिरहन्छ।

अव्यक्तरूप मूलबाट उत्पन्न भएका सम्पूर्ण प्राणीहरूका कर्मफलको आश्रय भएको यो क्षेत्रज्ञसंज्ञक अश्वत्थवृक्ष माथितिर मूल र तलतिर हाँगाविँगा भएको छ। त्यस वृक्षमा अविद्या, काम, कर्म र वासनाका आश्रयभूत लिङ्गदेहरूप उपाधि भएको जीव र ईश्वर दुई चराहरू जस्तै आपसमा मिलेर बस्तछन्। ती दुई चराहरूमध्ये जीवात्मा आफ्ना कर्मले प्राप्त भएको सुख र दुःखरूप विचित्रको स्वाद भएको फल अविवेकका कारण भोग गर्दछ भने अर्को चरो अर्थात् ईश्वर अर्थात् साक्षी हो, त्यो नित्य, शुद्ध, बुद्ध, मुक्तस्वरूप, सर्वज्ञ र मायोपाधिक चैतन्य भएको हुँदा केही पनि नखाईकन हेरीमात्रै रहन्छ। यो साक्षीस्वरूप सत्तामात्रले भोक्ता र भोग्य दुवैको प्रेरक हो। त्यसैकारण भोग गर्दैन र हेरेरमात्रै बस्तछ।

यसै क्रममा आएको दोस्रो मन्त्रले ईश्वरको दर्शनपछि जीवको शोकनिवृत्ति हुने कुराको वर्णन गरेको छ। जस्तै –

**समाने वृक्षे पुरुषो निमग्नोऽनीशया शोचति मुह्यमानः।**
**जुष्टं यदा पश्यत्यन्यमीशमस्य महिमानमिति वीतशोकः॥**

शब्दार्थ :– समाने वृक्षे – पूर्वोक्त शरीररूपी समान वृक्षमा बस्ने भएको, पुरुषः – जीवात्मा, निमग्नः – शरीररूपी गहिरो आसक्तिमा डुबेको छ। अनीशया – असमर्थतारूप दीनताको अनुभव गर्दै, मुह्यमानः – मोहित भएर, शोचति – शोक गरिरहन्छ।

यदा– जुन बेला, जुष्टम् – सेवित, अन्यम् – अरूहरूबाट, ईशम् – परमेश्वर र अस्य महिमानम् – परमेश्वरका महिमालाई पनि, पश्यति – जान्दछ, इति – त्यसपछि मात्रै, वीतशोकः – सर्वथा शोकरहित हुन्छ ।

पदार्थ :– प्रथम मन्त्रमा वर्णन गरिए अनुसार ईश्वर अर्थात् साक्षीसँग एउटै वृक्ष अर्थात् शरीरमा बस्ने भएको जीव आफ्नू दीनस्वभावको कारण मोहित भएर शोक गर्दछ । त्यो जीव जब ध्यानद्वारा आफूभन्दा विलक्षण र योगीहरूद्वारा सेवित परमेश्वरलाई र परमेश्वरको महिमा यस संसारको वास्तविक स्वरूपलाई जान्दछ, त्यसपछि त्यो जीव शोकरहित हुन्छ ।

त्यसरी समान वृक्ष अर्थात् पूर्वोक्त शरीरमा अविद्या, काम, कर्म, कर्मफल र रागादिले अत्यन्त आक्रान्त भएर गहिरो समुद्रमा डुबेको चिण्डो जस्तै भएर देहाभासको गहिरो भासमा परेको भोक्ताजीवात्माले आफूलाई म यो हुँ, म फलानाको छोरो हुँ, म फलानाको नाति हुँ, म दुब्लो छु, म मोटो छु, म गुणवान् हुँ, म सुखी हुँ, म दुःखी हुँ आदि अज्ञानयुक्त आध्यासिक प्रलाप गर्दछ । आफ्नै देहलाई आत्मा मान्ने त्यसप्रकारको अज्ञानी जीव यसै संसारका विभिन्न योनिहरूमा आउने र जाने गरिरहन्छ ।

अज्ञानी जीव अत्यन्त असमर्थ भएर अनन्त कालसम्म प्रेत, तिर्यक् र मनुष्यादि योनिहरूमा घुमिरहन्छ र नानाप्रकारका दुःखहरू पाइरहन्छ । यसरी घुम्दाघुम्दै कुनै बेला शुद्ध धर्मका प्रभावले कुनै परम कारुणिक गुरुबाट वेदान्तको उपदेश पाएर त्यो संसारी जीवलाई अहं ब्रह्मास्मिको अनुभूति हुन्छ । त्यसपछि ऊ शोकरहित हुन्छ र सधैँका लागि ऊ कृतकृत्य हुन्छ ।

यसरी गुरुबाट वेदान्तको उपदेश सुनिसकेपछि उसको ज्ञानदृष्टि खुल्दछ। सुवर्णवर्ण भएका जगत्कर्ता ईश्वरलाई उसले देख्तछ। त्यसरी परमात्माको दर्शन पाएपछि त्यो विद्वान् पाप र पुण्य दुवैलाई त्यागेर निर्मल बन्दछ। अन्ततः उसले अत्यन्त समता प्राप्त गर्दछ।

सम्पूर्ण भूतका रूपमा भासमान भइरहेको प्राण नै ब्रह्म हो भनेर जुन विद्वान्ले बुझ्दछ, अतिवादी अर्थात् मर्यादालाई उल्लङ्घन गरेर ऊ बोल्दैन। त्यस्तो आत्मामा क्रीडा गर्ने र आत्मामा नै रमण गर्ने क्रियावान् पुरुष ब्रह्मवेत्ताहरूमा श्रेष्ठतम हुन्छ।

आत्मदर्शनका अर्थात् सम्यग्ज्ञानका सहकारी सत्य आदि निवृत्तिप्रधान साधनहरूको विधान गर्दै अगाडि श्रुति भन्दछ। जस्तै–

सत्येन लभ्यस्तपसा ह्येष आत्मा
सम्यग्ज्ञानेन ब्रह्मचर्येण नित्यम्।
अन्तः शरीरे ज्योतिर्मयो हि शुभ्रो
यं पश्यन्ति यतयः क्षीणदोषाः ॥

शब्दार्थ :– एषः – यस, अन्तःशरीरे हि – शरीरको भित्री हृदयमा विराजमान, ज्योतिर्मयः – प्रकाशस्वरूप, शुभ्रः – परम शुद्ध, आत्मा – परमात्मा, हि – निस्सन्देह, सत्येन – साँचो बोलीले, तपसा – तपस्याले, ब्रह्मचर्येण – ब्रह्मचर्यले र सम्यग्ज्ञानेन – यथार्थ ज्ञानले, नित्यम् – सधैँ, लभ्यः – प्राप्त हुनुहुन्छ। यम् – जुन परमात्मालाई, क्षीणदोषाः – सबै प्रकारका दोषहरू समाप्त भएका, यतयः – यत्नशील साधकहरू अथवा सर्वकर्मसंन्यास गरेका संन्यासीहरू

नै पश्यन्ति – देख्न सक्तछन् अर्थात् साक्षात्कार गर्नसक्तछन् ।

पदार्थ :– यस आत्मालाई सर्वदा सत्य, तप, सम्यग्ज्ञान र ब्रह्मचर्यद्वारा नै प्राप्त गर्न सकिन्छ । आफ्नै शरीरका भित्री हृदयमा रहेको ज्योतिर्मय तथा शुभ्र जुन आत्मा वा परमात्मालाई दोषहीन योगी वा संन्यासीहरू देख्तछन् ।

सत्यको महिमाको व्याख्यान गर्दै अगाडि आउने मन्त्रमा उपनिषद् भन्दछ । जस्तै –

**सत्यमेव जयति नानृतं सत्येन पन्था विततो देवयानः ।**
**येनाक्रमन्त्यृषयो ह्याप्तकामा यत्र तत्सत्यस्य परमं निधानम् ॥**

शब्दार्थ :– सत्यमेव – सत्यको नै, जयति – विजय हुन्छ । अनृतम् – झूटको, न – विजय हुँदैन । हि – किनभने, देवयानः – त्यो देवयान नामक, पन्था – मार्ग, सत्येन – सत्यले, विततः – परिपूर्ण छ । येन – जसबाट, आप्तकामाः – पूर्णकाम भएका, ऋषयः – ऋषिहरू, आक्रमन्ति – जान्छन् । यत्र – जहाँ, तत् – त्यो, सत्यस्य – सत्यस्वरूप परब्रह्म परमात्माको, परमम् – उत्कृष्ट, निधानम् – धाम हो ।

पदार्थ :– सत्य अर्थात् सत्यवान्ले नै जयलाई प्राप्त गर्दछ । मिथ्यावादीले कुनै पनि हालतमा जयलाई प्राप्त गर्न सक्तैन । सत्यद्वारा नै देवयानमार्गको विस्तार हुन्छ । जुन देवयानमार्गबाट नै आप्तकाम ऋषिमुनिहरू त्यस सत्यात्मक परमपदमा पुग्दछन् ।

आत्मसाक्षात्कारका सम्बन्धमा श्रुति अगाडि भन्दछ । आत्माको साक्षात्कार आँखाबाट गर्न सकिँदैन, वाणीबाट पनि सकिँदैन, इन्द्रियहरूबाट पनि सकिँदैन, तपस्या र कर्मबाट पनि

आत्मसाक्षात्कार गर्न सकिँदैन । केवल ज्ञानको प्रसादस्वरूप पुरुषको चित्तशुद्धि हुन्छ । त्यसपछि ध्यान गरेमा नै त्यस निष्कल आत्मतत्त्वको साक्षात्कार हुन्छ ।

मुण्डकोपनिषद्को तेस्रो मुण्डकको प्रथम खण्डको अन्तिम मन्त्रमा आत्मज्ञको वैभव र उसले गर्ने पूजाको विधान पनि बताइएको छ । जस्तै –

**यं यं लोकं मनसा संविभाति विशुद्धसत्त्वः कामयते यांश्च कामान् ।**
**तं तं लोकं जयते तांश्च कामांस्तस्मादात्मज्ञं ह्यर्चयेद्भूतिकामः ॥**

शब्दार्थ :– विशुद्धसत्त्वः – विशुद्ध अन्तःकरण भएको मान्छे, यम् यम् – जुन जुन, लोकम् – लोक, मनसा – मनले, संविभाति– चिन्तन गर्दछ, च – फेरि, यान् कामान् कामयते – जुन भोगहरूको कामना गर्दछ, तम् तम् – ती ती, लोकम् – लोकहरू, जयते – जित्तछ । च – फेरि, तान् कामान् – इच्छा गरिएका भोगहरूलाई पनि प्राप्त गर्दछ । तस्मात् हि – त्यसैकारणले नै, भूतिकामः – ऐश्वर्य चाहने मान्छेले, आत्मज्ञम् – ब्रह्मज्ञानीको पूजा सत्कार गरोस् ।

पदार्थ :– त्यस विशुद्धचित्त भएको आत्मज्ञानीले मनद्वारा जुन लोकको भावना गर्दछ र जुन भोगको इच्छा गर्दछ, त्यस आत्मवेत्ताले तिनै तिनै लोकहरू र तिनैतिनै भोगहरू प्राप्त गर्दछ । त्यसकारण ऐश्वर्यको इच्छा गर्ने भएको पुरुषले आत्मज्ञानीको पूजा गरोस् । किनभने विद्वान् सत्यसङ्कल्पयुक्त हुन्छ ।

अब मुण्डकोपनिषद्को तृतीय मुण्डकको द्वितीयखण्ड अर्थात् अन्तिम भागको सङ्क्षिप्त चर्चा गरिन्छ । यस खण्डको शुरुमा

प्रथम खण्डको प्रसङ्गलाई जोड्दै श्रुति आत्मवेत्ताको अर्चनाको फलको वर्णन गर्दछ । जस्तै –

**स वेदैतत्परमं ब्रह्म धाम यत्र विश्वं निहितं भाति शुभ्रम् ।**
**उपासते पुरुषं ये ह्यकामास्ते शुक्रमेतदतिवर्तन्ति धीराः ॥**

शब्दार्थ :– स – निष्काम भावना भएको पुरुष, एतत् – यस, परमम्–अत्यन्त उत्कृष्ट, शुभ्रम्–जाज्वल्यमान्, ब्रह्मधाम–ब्रह्मधामलाई, वेद– जान्दछ, यत्र–जसमा, विश्वम्–सम्पूर्ण जगत्, निहितम्–रहेको, भाति – प्रतीत हुन्छ । ये हि – जुन, अकामः – कामनारहित साधक, पुरुषम् – पुरुषलाई, उपासते – उपासना गर्दछ, ते – ती, धीराः – बुद्धिमान्, शुक्रम् – रजोवीर्यमय, एतत् – यस संसारलाई, अतिवर्तन्ति – अतिक्रमण गरेर जान्छन् ।

पदार्थ :– त्यो आत्मज्ञानी पुरुष सम्पूर्ण जगत्को आधार, स्वयं भासमान शुद्धरूप तथा परम आश्रयरूप ब्रह्मलाई जान्दछ । जसले निष्कामभावबाट त्यस्ता आत्मज्ञ पुरुषको उपासना गर्दछन्, त्यस्ता बुद्धिमान् मनुष्यहरू शरीरको बीज भएको शुक्र अर्थात् रजोवीर्यमय उपादानकारणलाई नाघ्दछन् र संसाररूपी बन्धनबाट मुक्त भएर जान्छन् ।

मुमुक्षुका लागि कामनाको त्याग नै मुख्य साधन हो । यही कुराको वर्णन गर्दै श्रुति भन्दछ – भोगमा आसक्ति भएको पुरुष जुनजुन भोगको कामना गर्दछ, त्यही त्यही कुराको भोग गर्न ऊ बारम्बार जन्म लिइरहन्छ । तर जुन पुरुषका कामनाहरू पूर्ण भएका छन्, त्यस्ता कृतकृत्य पुरुषका कामनाहरू ज्ञान प्राप्तिपछि यसै लोकमा नै नष्ट भएर जान्छन् ।

आत्मदर्शनको प्रधान साधनका रूपमा श्रुतिले जिज्ञासालाई लिएको छ । सोही कुरालाई यस उपनिषद्मा यसरी व्यक्त गरिएको छ । जस्तै –

**नायमात्मा प्रवचनेन लभ्यो न मेधया न बहुना श्रुतेन ।**
**यमेवैष वृणुते तेन लभ्यस्तस्यैष आत्मा विवृणुते तनुं स्वाम् ॥**

शब्दार्थ :– अयम् – यो, आत्मा – परब्रह्म परमात्मा, न प्रवचनेन– न प्रवचनले, न मेधया – न बुद्धिले, न बहुना श्रुतेन – न धेरै शास्त्रहरू सुनेर, लभ्यः–प्राप्त हुन सक्तछ, एष–यो, यम्–जसलाई, वृणुते – स्वीकार गर्दछ, तेन एव – त्यसले नै, लभ्यः – प्राप्त गर्नसक्तछ, एष – यो, आत्मा – परमात्मा, तस्य – त्यसका लागि, स्वाम् तनुम् – आफ्नू यथार्थ स्वरूप, विवृणुते – प्रकट गरिदिन्छ ।

पदार्थ :– यो आत्मा न धेरै शास्त्रहरू पढेर वा प्रवचन सुनेर नै प्राप्त हुन्छ । यो आत्मा न शास्त्रहरूको अर्थलाई सम्झनाले प्राप्त हुनसक्तछ । जुन विद्वान्ले यस आत्मालाई प्राप्त गर्ने इच्छा गर्दछ, त्यसले नै त्यस नित्यप्राप्त स्वरूप आत्मालाई प्राप्त गर्न सक्तछ । यो नित्यसिद्ध आत्मा अरू कुनै साधनहरूबाट पनि प्राप्त हुनसक्तैन । यो आत्मा विद्वान् मुमुक्षुका लागि स्वात्मतत्त्व स्वतः प्रकाशित गरिदिन्छ । उदाहरणका लागि, जसरी प्रकाश भएपछि घटपटादिको अभिव्यक्ति हुन्छ, त्यसैगरेर विद्या प्राप्त भएपछि आत्मा आफैँ प्रकाशित हुन्छ । सारांशमा भन्ने हो भने अरू मायिक कामनाहरूको त्याग गरेर आत्मानुसन्धान वा आत्मलाभको प्रार्थना गर्नु नै आत्मलाभको साधन हो भनेर आचार्य शङ्करले आफ्नू भाष्यमा लेख्नुभएको छ ।

यसका अतिरिक्त लिङ्गयुक्त संन्यास, अप्रमाद, बल, तपसमेतलाई आत्मप्राप्तिको साधन भनेर उपनिषद्ले स्पष्ट पारेको छ । जस्तै –

**नायमात्मा बलहीनेन लभ्यो न च प्रमादात्तपसो वाप्यलिङ्गात् ।**
**एतैरुपायैर्यतते यस्तु विद्वांस्तस्यैष आत्मा विशते ब्रह्मधाम ॥**

शब्दार्थ :– अयम् – यो, आत्मा – परमात्मा किंवा ब्रह्म, बलहीनेन – बल नभएको मान्छेले, न लभ्यः – प्राप्त गर्न सक्तैन । च–त्यसैगरेर, प्रमादात्–प्रमादद्वारा, वा–अथवा, अलिङ्गात्–लिङ्गरहित, तपसः – तपस्याले, अपि–पनि, न–प्राप्त गर्न सक्तैन । तु – किन्तु, यः –जुन, विद्वान्–बुद्धिमान् साधक, एतै–यी, उपायैः –उपायहरूद्वारा, आत्मा – आत्मा, ब्रह्मधाम – ब्रह्मधाममा, विशते – प्रविष्ट हुन्छन् ।

पदार्थ :– यो आत्मा बलहीन अर्थात् आत्मनिष्ठाजनित शक्तिले रहित पुरुषद्वारा प्राप्त हुन योग्य छैन । आत्मा लौकिक पुत्र एवं पशु आदि विषयहरूद्वारा पनि प्राप्त हुन योग्य छैन। न यो आत्मा लिङ्गरहित तपस्याबाट नै प्राप्त हुन योग्य छ । यो आत्मा संन्यासरहित ज्ञानबाट पनि प्राप्त हुन सक्तैन भन्ने यसको तात्पर्य हो भनेर शङ्कराचार्यले आफ्नू भाष्यमा लेख्नुभएको छ । जुन विद्वान् अर्थात् विवेकी आत्मवेत्ता तत्पर भएर बल, अप्रमाद, संन्यास र ज्ञानसमेतका उपायहरूद्वारा आत्मप्राप्तिका लागि प्रयत्न गर्दछ भने त्यस आत्मज्ञानी विद्वान्को आत्मा ब्रह्मधाममा सम्यक्रूपले प्रविष्ट हुन्छ ।

ब्रह्मप्राप्तिका सम्बन्धमा अर्थात् विद्वान्को ब्रह्म प्रवेशका बारेमा श्रुति अर्को मन्त्रद्वारा अझ स्पष्ट गर्दै भन्दछ । यसैलाई आत्मदर्शीले प्राप्त गर्ने ब्रह्मप्राप्तिको प्रकार पनि भनिएको छ । जस्तै –

**सम्प्राप्यैनमृषयो ज्ञानतृप्ताः कृतात्मानो वीतरागाः प्रशान्ताः ।**
**ते सर्वगं सर्वतः प्राप्य धीरा युक्तात्मानः सर्वमेवाविशन्ति ॥**

**शब्दार्थ :– वीतरागाः – आसक्तिरहित, कृतात्मानः – रागादि दोषले रहित शुद्ध अन्तःकरण भएका, ऋषयः – आत्मदर्शी विद्वान्हरू, एनम् – यस ब्रह्मलाई, सम्प्राप्य – पूर्णरूपमा प्राप्त गरेर, ज्ञानतृप्ताः – ज्ञानले तृप्त भएर, प्रशान्ताः – परम शान्तिमा प्राप्त हुन्छन् । त्यस्ता, युक्तात्मानः – आफूलाई परब्रह्म परमात्मामा एकाकार गर्ने, ते–तिनीहरू, धीराः –ज्ञानी जनहरू, सर्वगम्– सर्वव्यापी परमात्मा, सर्वतः –सबैतिरबाट, प्राप्य–प्राप्त गरेर, सर्वमेव–सर्वरूप परब्रह्ममा नै, आविशन्ति – प्रविष्ट हुन्छन् ।**

**पदार्थ :– यस आत्मालाई राम्रोसँग जानेपछि आत्मदर्शी ज्ञानीहरू ज्ञानतृप्त, कृतकृत्य, विरक्त अर्थात् रागादिदोषरहित र प्रशान्त अर्थात् उपरतेन्द्रिय बन्दछन् । ती ज्ञानी पुरुषहरू त्यस सर्वगत ब्रह्मलाई सबैतिर प्राप्त गरेर अन्तकालमा समाहित चित्तयुक्त भएर सर्वरूप ब्रह्ममा नै प्रवेश गर्दछन् ।**

**यसरी परब्रह्म परमात्मालाई प्राप्त गरेका महापुरुषहरूका महिमाको वर्णन गरिसकेपछि अब ब्रह्मलोकमा जाने ज्ञानीहरूको मुक्तिको वर्णन यस उपनिषद्को मन्त्रले गर्दछ । जस्तै –**

**वेदान्तविज्ञानसुनिश्चितार्थः संन्यासयोगाद्यतयः शुद्धसत्त्वाः ।**
**ते ब्रह्मलोकेषु परान्तकाले परामृताः परिमुच्यन्ति सर्वे ॥**

**शब्दार्थ :– वेदान्तविज्ञानसुनिश्चितार्थाः – जसले वेदान्त अर्थात् उपनिषद्रूपी विज्ञानद्वारा त्यसको अर्थभूत परब्रह्म परमात्मालाई पूर्ण निश्चयपूर्वक जानेका छन्, संन्यासयोगात् – सर्वकर्मपरित्यागरूप**

योगद्वारा, शुद्धसत्त्वाः –अन्तःकरण शुद्ध भएका, ते–ती, सर्वे–सबै, यतयः – प्रयत्नशील साधकहरू, परान्तकाले – शरीर त्याग गरेपछि, ब्रह्मलोकेषु – ब्रह्मलोकमा गएर, परामृता – परम् अमृतस्वरूप भएर, परिमुच्यन्ति – सधैँका लागि मुक्त हुन्छन् ।

पदार्थ :– जसले उपनिषद्शास्त्रद्वारा राम्रोसँग परब्रह्म परमात्मालाई जानिसकेका छन् । त्यस्ता सर्वकर्मसंन्यासद्वारा अन्तःकरण शुद्ध भएका पुरुषहरू देह त्याग गर्ने समयमा परम अमरभावलाई प्राप्त गर्दै सबैतिरबाट मुक्त हुन्छन् ।

यस मन्त्रको अर्थ गर्दै आचार्य शङ्करले आफ्नू भाष्यमा लेख्नुभएको केही अंश यहाँ उद्धृत गरिन्छ । वेदान्तबाट उत्पन्न हुने विज्ञानलाई वेदान्तविज्ञान भनिन्छ । त्यसको अर्थ विज्ञेय परमात्मा हुन आउँछ । त्यो अर्थ जसलाई राम्रोसँग निश्चित भएको छ, तिनैलाई वेदान्तविज्ञानसुनिश्चितार्था भनेर भनिन्छ । ती संन्यासयोग अर्थात् सर्वकर्मपरित्यागरूपयोग अर्थात् केवल ब्रह्मनिष्ठास्वरूप योगद्वारा यत्न गर्ने भएका र संन्यासयोगद्वारा जसको चित्त शुद्ध भएको छ, तिनै शुद्धचित्त पुरुष ब्रह्मलोकमा परामृत अर्थात् परम अमृत अर्थात् अमरणधर्मा ब्रह्म नै जसको आत्मस्वरूप हो, त्यस्ता आत्मज्ञानी पुरुषहरू जीवित अवस्थामा नै परामृत अर्थात् ब्रह्म भएर दीपनिर्वाणजस्तै गरेर निवृत्त हुन्छन् । ती ब्रह्मज्ञानीहरू सबैतिरबाट मुक्त हुन्छन् । मुक्तात्माहरू कुनै अर्को गन्तव्य देशान्तरको अपेक्षा गर्दैनन् ।

संसारी पुरुषहरूको अन्तकाललाई अपरान्तकाल भनिन्छ । त्यसको अपेक्षा मुमुक्षुहरूको देहपरित्यागको समयलाई परान्तकाल भनिन्छ । त्यस परान्तकालमा ब्रह्मलोकमा धेरै साधकहरू हुन्छन् ।

त्यसैकारण यस मन्त्रमा ब्रह्मलोकेषु पदद्वारा बहुवचनको प्रयोग भएको छ। अतः ब्रह्मलोकेषुको अर्थ ब्रह्म भन्ने हुन्छ।

परम ज्ञानीलाई परब्रह्म परमात्माको प्राप्ति यसै शरीरमा हुन्छ, त्यस्ता मुक्तात्माको अन्तकालमा हुने स्थितिको वर्णन श्रुतिले यसरी गरेको छ। जस्तै –

**गताः कलाः पञ्चदश प्रतिष्ठा देवाश्च सर्वे प्रतिदेवतासु।**
**कर्माणि विज्ञानमयश्च आत्मा परेऽव्यये सर्व एकी भवन्ति॥**

शब्दार्थ :– पञ्चदशः – पन्ध्र, कलाः – कलाहरू, च – र, सर्वे– सबै, देवाः – देवता अर्थात् इन्द्रियहरू, प्रतिदेवतासु – आफ्ना आफ्ना अभिमानी देवताहरूमा, गताः – गएर, प्रतिष्ठा – बस्तछन्, कर्माणि – सम्पूर्ण कर्महरू, च – र, विज्ञानमयः – विज्ञानप्राय, आत्मा – जीवात्मा, सर्वे – यी सबै, परे अव्यये – परम अविनाशी परब्रह्ममा, एकीभवन्ति – एक हुन्छन्।

पदार्थ :– पन्ध्र कलामा श्रद्धा, आकाश, वायु, तेज, जल, पृथ्वी, इन्द्रियहरू, मन, अन्न, वीर्य, तप, मन्त्र, कर्म, लोक र नामसमेत पर्दछन्। तीमध्ये देहारम्भक तत्त्वहरू आफ्ना आश्रयमा गएर मिल्दछन्। चक्षु आदि इन्द्रियहरूका अधिष्ठाता समस्त देवताहरू आफ्ना प्रतिदेवतामा लीन हुन्छन्। मुक्तात्माका सञ्चित कर्महरू र विज्ञानमय आत्मासमेत सबै नै पर अव्यय परब्रह्ममा एकीभाव हुन्छन्।

उपर्युक्त मन्त्रले सबै तत्त्वहरू अन्तसमयमा परब्रह्ममा गएर लीन हुने कुराको वर्णन गरेको छ। लीन हुने प्रक्रियाको वर्णन गर्दै अगाडिको मन्त्रले भन्दछ –

यथा नद्यः स्यन्दमानाः समुद्रे ऽस्तं गच्छन्ति नामरूपे विहाय ।
तथा विद्वान्नामरूपाद्विमुक्तः परात्परं पुरुषमुपैति दिव्यम् ॥

शब्दार्थ :– यथा – जसरी, स्यन्दमानाः – बग्दै गरेका, नद्यः – नदीहरू, नामरूपे – नाम र रूपलाई, विहाय – छाडेर, समुद्रे – समुद्रमा, अस्तं गच्छन्ति – विलीन हुन्छन् । तथा – त्यसै गरेर विद्वान् – ब्रह्मज्ञानी, नामरूपात् – नाम र रूपबाट विमुक्तः रहित भएर, परात्परम् – उत्तमभन्दा उत्तम, दिव्यम् – दिव्य, पुरुषम् – परमात्मामा, उपैति – प्राप्त हुन्छ ।

पदार्थ :– जसरी निरन्तर बगेर नदीहरू आफ्ना नाम र रूपसमेतलाई त्यागेर समुद्रमा पुगेर अस्त हुन्छन् । त्यसैगरेर विद्वान् नाम र रूपबाट मुक्त भएर परात्पर दिव्य पुरुषमा प्राप्त हुन्छ ।

ब्रह्मवेत्ता ब्रह्म नै हुने कुराको उद्घोष गर्दै उपनिषद्को उपान्त मन्त्रले भनेको छ । जस्तै –

स यो ह वै तत्परमं ब्रह्म वेद
ब्रह्मैव भवति नास्याब्रह्मवित्कुले भवति ।
तरति शोकं तरति पाप्मानं
गुहाग्रन्थिभ्यो विमुक्तोऽमृतो भवति ॥

शब्दार्थ :– ह – निश्चय नै, यो वै – जोसुकैले पनि तत् – त्यो, परमं ब्रह्म – परमब्रह्म परमात्मालाई, वेद – जान्दछ भने, सः – त्यो, ब्रह्मैव – ब्रह्म नै, भवति – हुन्छ । अस्य – यसका, कुले – कुलमा, अब्रह्मवित् – ब्रह्म नजान्ने, न भवति – हुँदैनन् । शोकं तरति – पापबाट पार हुन्छ । गुहाग्रन्थिभ्यः – हृदयग्रन्थिहरूबाट, विमुक्तः – सर्वथा मुक्त भएर,

अमृतो भवति – अमर हुन्छ ।

पदार्थ :– मुमुक्षुले त्यस परब्रह्मलाई जान्दछ भने त्यो मुमुक्षु तुरुन्त ब्रह्म नै भइहाल्दछ। उसका कुलमा कुनै पनि व्यक्ति अब्रह्मवित् हुँदैनन् अर्थात् सबै ब्रह्म जान्ने हुन्छन्। ऊ शोकबाट पारि तर्दछ। ऊ पापबाट मुक्त हुन्छ। उसका हृदयका सबै गाँठाहरू फुक्तछन् र उसले अमरता अर्थात् मोक्षपद प्राप्त गर्दछ।

अन्त्यमा यस उपनिषद्मा विद्याप्रदानको विधिको वर्णन गरिएको छ र अत्यन्त नमनपूर्वक यस उपनिषद्को उपसंहार गरिएको छ। अस्तु। श्रीकृष्णार्पणमस्तु ।



# माण्डूक्योपनिषद्

जाग्रदादित्रयोन्मुक्तं जाग्रदादिमयं तथा ।
ओङ्कारैकसुसंवेद्यं यत्पदं तन्नमाम्यहम् ॥

आकारका दृष्टिले स्वल्पकाय देखिने यो माण्डूक्योपनिषद् अथर्ववेदीय ब्राह्मणभागको अन्तर्गत पर्दछ । देख्ता स्वल्यकाय भए पनि यस उपनिषद्को महत्त्व अरू बृहत्काय उपनिषद्हरूभन्दा कम मानिदैन । यस उपनिषद्मा कारिका लेखेर भगवान् श्रीगौडपादाचार्यले यस उपनिषद्को महत्त्व ख्यापन गरिदिनु भएको छ । उपनिषद् र कारिका दुवैमा श्रीशङ्कराचार्यले लेख्नुभएको भाष्यलाई समेत लिँदा यो ग्रन्थ अद्वैत वेदान्तीहरूका लागि अत्यन्त उपयोगी हुन गएको छ । गौडपादाचार्यको कारिकालाई अद्वैतसिद्धान्तको प्रथम खुड्किलो मान्ने हो भने त्यसैबाट शुरु गरेर श्रीशङ्करले अद्वैतवेदान्तका प्रस्थानत्रयीजस्तो विशाल राजमार्ग निर्माण गर्नुभएको हो भन्नु समीचीन हुने देखिन्छ ।

यो अद्वैतसिद्धान्त गौडपादाचार्य वा शङ्कराचार्यका समयदेखि प्रचलित नभएर यो अनादि सिद्धान्त हो । अरू दर्शनहरूजस्तो यो कुनै आचार्यले प्रतिपादन गरेको दर्शन नभएर यो शाश्वत दर्शन हो । यसलाई समयसापेक्ष व्याख्या, खण्डन र मण्डन गर्दै अघि

बढाउने र जनसमक्ष ल्याउने स्तुत्य काम भने गौडपाद र शङ्करले गर्नुभएको हो। अझ उहाँहरूमा पनि परवर्तीकालमा आचार्य शङ्करको नै प्रमुख हात रहेको देखिन्छ। कारिकाकार गौडपादाचार्य, उहाँको कारिका, समय र गुरुशिष्यपरम्पराका सम्बन्धमा यस लेखको अन्त्यमा महामहोपाध्याय पं. गोपीनाथ कविराजद्वारा लिखित ब्रह्मसूत्रको भूमिकाबाट केही तथ्य उद्धृत गरिनेछ। यस लेखमा भने माण्डूक्योपनिषद् र त्यसको भूमिकालाई नै आधार बनाएर लेखिनेछ।

आचार्य गौडपाद बङ्गालमा जन्मनुभएको थियो भनेर स्वामी श्रीप्रज्ञानानन्द सरस्वतीले आफ्नू वेदान्तदर्शनको इतिहासमा लेख्नुभएको छ भनेर यस उपनिषद्को भूमिकामा उल्लेख भएको देखिन्छ। यसका प्रमाणका रूपमा प्रसिद्ध नैष्कर्म्यसिद्धिका ग्रन्थकार श्रीसुरेश्वराचार्यको श्लोक उक्त ग्रन्थबाट उद्धृत गरेको पनि पाइन्छ। जस्तै –

**एवं गौडैर्द्राविडैर्नः पूज्यैरर्थः प्रभाषितः।**
**अज्ञानमात्रोपाधिः सन्नहमादिदृगीश्वरः ॥**

अर्थात् यसरी साक्षात् भगवान् पनि अज्ञानोपाधिक भएर अहङ्कारादिको साक्षी अर्थात् जीव हुनुभएकोछ। त्यसै परमार्थ–तत्त्वलाई हाम्रा पूजनीय गौडैः अर्थात् गौडदेशीय आचार्य गौडपाद र द्राविडैः अर्थात् द्रविडदेशीय आचार्य शङ्करले वर्णन गर्नुभएको छ।

कारिकाकार आचार्य गौडपाद एक संन्यासी हुनुहुन्थ्यो। उहाँले माण्डूक्योपनिषद्मा अत्यन्त प्रसिद्ध कारिका लेख्नुभएको

थियो । माण्डूक्योपनिषद् अत्यन्त सानो आकार भएको उपनिषद् हो । यसमा जम्मा १२ ओटा मन्त्रहरूमात्रै छन् । पहिलो मन्त्र *'ओमित्येतदक्षरमिदं सर्व तस्योपाख्यानं भूतं भवद्भविष्यदिति सर्वमोङ्कार एव, यच्चान्यत्त्रिकालातीतं तदप्योङ्कार एव.'* भन्ने प्रथमबाट शुरु भएर अन्तिम १२औँ मन्त्र *'अमात्रश्चतुर्थोऽव्यवहार्यः प्रपञ्चोपशमः शिवोऽद्वैत एवमोङ्कार आत्मैव संविशत्यात्मनात्मानं य एवं वेद'* मा गएर यो माण्डूक्योपनिषद् समाप्त हुन्छ । छैटौँ मन्त्र *'एष सर्वेश्वर एष सर्वज्ञ एषोऽन्तर्याम्येष योनिः सर्वस्य प्रभवाप्ययौ हि भूतानाम्.'* पछि कारिका लेख्ने काम शुरु भएको देखिन्छ । *'बहिष्प्रज्ञो विभुर्विश्वः'* भन्ने कारिकाबाट पहिलो आगम प्रकरण शुरु भएको देखिन्छ । यहाँ ६ मन्त्रसम्ममा जम्मा ९ ओटा कारिकाहरूको रचना गरिएको देखिन्छ ।

*'नान्तः प्रज्ञं न बहिष्प्रज्ञं'* भन्ने महत्त्वपूर्ण मन्त्रमा अरू ९ ओटा कारिकाहरू गौडपादले लेख्नुभएको पाइन्छ । यी कारिकाहरू अद्वैतवेदान्तका दृष्टिले अत्यन्त महत्त्वका मानिन्छन् । ८ औँ मन्त्रदेखि लिएर ११ औँ मन्त्रहरूलाई आधार मानेर अरू ५ ओटा विशेष प्रकारका कारिकाहरू यहाँ समाविष्ट भएका छन् । आगम प्रकरणमा अन्तिम १२ औँ मन्त्र पछि सान्दर्भिक अरू ६ ओटा कारिकाहरू पनि लेखेर जम्मा २९ ओटा अद्वैतपरक कारिकाहरू समावेश गरिएका पाइन्छन् ।

यसरी सरसरतीरूपमा यस माण्डूक्योपनिषद् १२ मन्त्रहरू र त्यसपछिका २९ ओटा कारिकाहरूबाट पूर्ण भएको जस्तो देखिन्छ । तर आगम पछि पनि किन फेरि अरू वैतथ्यप्रकरण, अद्वैतप्रकरण र अलातशान्तिप्रकरणको आवश्यकता पर्‍यो ? भन्ने जिज्ञासा

आउन सक्ने देखिन्छ । यसको जिज्ञासा शान्त पार्दै श्रीशङ्कराचार्य वैतथ्यप्रकरणको प्रारम्भमा नै लेख्नुहुन्छ – *'ज्ञाते द्वैतं न विद्यत इत्युक्तम् "एकमेवाद्वितीयम्"* (छा.उ.६।२।१) *इत्यादि श्रुतिभ्यः, आगममात्रं तत् , तत्रोपपत्त्यपि द्वैतस्य वैतथ्यं शक्यतेऽवधारयितुमिति द्वितीयं प्रकरणमारभ्यते'* अर्थात् एकमेवाद्वितीयम् इत्यादि श्रुतिहरूका अनुसार आगमप्रकरणका १८ कारिकाहरूमा ज्ञान भएपछि द्वैत रहँदैन भनेर भनिएको छ । उक्त कुरा केवल आगम अर्थात् शास्त्र अनुसारमात्र भनिएको थियो । तर द्वैतको मिथ्यात्वको प्रतिपादन युक्तिले पनि गर्न सकिने भएको हुँदा यो दोस्रो वैतथ्य प्रकरण आरम्भ भएको हो ।

आचार्य गौडपादका रचनाहरूमा उनका कारिकाहरू अत्यन्त प्रसिद्ध छन् । उनका रचनाहरूमा श्रीउत्तरगीताको भाष्य पनि पर्दछ । यसका अतिरिक्त उनका रचनामा साङ्ख्यकारिकाको भाष्य पनि प्रसिद्ध छ । माण्डूक्यकारिकाको रचना अत्यन्त उदात्त र मर्मस्पर्शी देखिन्छ । यसको गणना विश्वका उत्कृष्ट साहित्यहरूमध्येमा गरिएको छ । यसलाई अद्वैतविद्याको आधारशिलाका रूपमा लिनसकिन्छ । यसमा साधन, सिद्धान्त, परमतनिराकरण र स्वमत संस्थापनसमेत सबैको शास्त्रसम्मत तथा युक्तिसहित वर्णन गरिएको छ। यही एउटा ग्रन्थ नै मुक्तिका लागि पर्याप्त हुनसक्तछ ।

यस कारिकामा जम्मा चार प्रकरणहरू छन्। पहिलो आगम प्रकरणमा २९ कारिकाहरू भएको कुरा माथि नै उल्लेख गरिसकिएको छ । दोस्रो वैतथ्यप्रकरणमा ३८ कारिकाहरू छन् । तेस्रो अद्वैतप्रकरणमा ४८ कारिकाहरू र चौथो अलातशान्तिप्रकरणमा १०० कारिकाहरू छन् ।

यसरी सबै कारिकाहरूको गणना गर्दा जम्मा २१५ कारिकाहरू हुन्छन् । पहिलो आगमप्रकरणमा जगदुत्पत्तिको कुरा उल्लेख भएको छ । यस सम्बन्धमा विभिन्न मतहरू पाइन्छन् । कसैले ईश्वरको इच्छालाई नै सृष्टिको कारण मान्दछन् भने कसैले काललाई मानेका छन् । कोही भोगका लागि भन्दछन् भने कोही क्रीडाका लागि भनेर भन्दछन् । यी सबै मतमतान्तरहरूलाई अस्वीकार गर्दै कारिकामा भनिएकोछ – *'देवस्यैव स्वभावोऽयमाप्तकामस्य का स्पृहा'* (१।९) अर्थात् पूर्णकाम भगवान्लाई सृष्टिको कुनै प्रयोजन छैन । सृष्टि गर्नु त भगवान्को स्वभावै हो । यो सारा प्रपञ्च मिथ्या हो । यो नभएर पनि देखिन्छ । त्यसैकारण ज्ञानीहरू यसको आदर गर्दैनन् ।

यस उपनिषद्मा ॐ कारका तीन मात्रा अ, उ, र म्लाई विभाजन गरेर जाग्रत्को स्थूल, स्वप्नको सूक्ष्म र सुषुप्तिको कारण शरीरहरूका व्यष्टि अभिमानी जीवलाई विश्व, तैजस र प्राज्ञ भनेर क्रमशः भनिएको छ । यिनका समष्टि अभिमानी जीवलाई वैश्वानर, हिरण्यगर्भ र ईश्वरको संज्ञा दिइएको छ । जाग्रत् अवस्थामा जीव दाहिने आँखामा रहन्छ । स्वप्नावस्थामा कण्ठस्थानमा रहन्छ र सुषुप्तिका समयमा हृदयमा रहन्छ । यसैलाई प्रपञ्च भनिन्छ । परमार्थतत्त्व यी तीनैथरीभन्दा विलक्षण छ । त्यो तुरीयतत्त्व सबैको अधिष्ठान र साक्षी हो । यस उपनिषद्मा यसै तत्त्वलाई ॐकारको चतुर्थपाद अमात्र तुरीयात्मरूपबाट वर्णन गरिएको छ ।

कुनै पनि भ्रम विनाअधिष्ठान रहन सक्तैन । अतः यो दृश्यमान् प्रपञ्चको पनि कुनै अधिष्ठान हुनु आवश्यकछ । अन्यथा यसको प्रतीति हुन सक्तैन । एतावता के प्रमाणित हुन्छ भने त्यो अधिष्ठान

सत्ता भनेको तुरीय नै हो। तुरीय नित्य, शुद्ध, ज्ञानस्वरूप, सर्वात्मा र सर्वसाक्षी हो। त्यो प्रकाशस्वरूप हो। त्यसमा अन्यथाग्रहणरूप स्वप्न र तत्त्वाग्रहणरूप सुषुप्तिको सर्वथा अभाव छ। जुन समयमा अनादिमायाले सुतेको जीव जागा हुन्छ, त्यस समयमा त्यसलाई अजन्मा, स्वप्न र निद्राले रहित अद्वैत तत्त्वको बोध हुन्छ। यसै कुरालाई कारिकामा भनिएको छ। जस्तै –

**अनादिमायया सुप्तो यदा जीवः प्रबुध्यते।**
**अजमनिद्रमस्वप्नमद्वैतं बुध्यते तदा ॥ (१६)**

यस माण्डूक्योपनिषद्मा रहेका १२ मन्त्रहरूमध्ये ७ मन्त्रहरू नृसिंहपूर्वोत्तरतापिनी र रामोत्तरतापिनी उपनिषद्हरूमा पनि पाइन्छन्। केही विद्वान्हरूको मतमा अझ खासगरेर मध्व अथवा द्वैतसम्प्रदायका मतमा प्रथम आगमप्रकरणका कारिकाहरू माण्डूक्योपनिषद्का अंश हुन् र यी श्रुति अनुरूप छन्। यस प्रकरणका कारिकाहरू गौडपादकृत होइनन्। अन्तिम तीन प्रकरण वैतथ्य, अद्वैत र अलातशान्तिप्रकरणका कारिकाहरूमात्रै गौडपादकृत हुन्। यस कुरालाई सबैले स्वीकार गरेका छैनन्। यस सम्बन्धमा मतमतान्तरहरू पाइन्छन्। लेख लामू हुने भएकाले यहाँ अरू कुरा उल्लेख गर्नेतर्फ नलागेर प्रकृत विषयतर्फ नै कलम चलाइएको छ।

आगमप्रकरणमा वस्तुको निर्देशन गरेर जीव र ब्रह्मको एकत्व र प्रपञ्चलाई मायामयत्व भनेर वैतथ्यप्रकरणमा त्यसलाई युक्ति र उपपत्तिपूर्वक पुष्ट पारिएको छ। यहाँ सर्वप्रथम स्वप्नदृश्यलाई मिथ्या भनेर प्रतिपादन गरिएको छ। यसको कारण सपनाको उपलब्धि शरीरका भित्र कुनै नाडी विशेषमा हुनेगर्दछ। जहाँ

स्थानाभावका कारण पर्वत आदिको विद्यमानता हुनु सर्वथा असम्भव देखिन्छ । यसका अतिरिक्त स्वप्नावस्थामा जीव शरीरबाट बाहिर गएर स्वाप्निक पदार्थलाई देख्तछ भन्न पनि मिल्दैन ।

यसरी विभिन्न प्रकारका युक्तिहरूद्वारा स्वप्नको मिथ्यात्व प्रतिपादन गरिएको छ । दृश्यत्वमा समानता देखिएको हुँदा जाग्रत्कालीन दृश्यलाई पनि मिथ्या भनिएको छ । सपनाका अवस्थामा मनले कल्पना गरेका पदार्थहरू सत्यजस्ता देखिन्छन् । यी दुवै अवस्थाका पदार्थहरू वस्तुतः असत्य नै ठहरिन्छन् । यसरी जाग्रत् र स्वप्न दुवै अवस्थाका पदार्थहरूको मिथ्यात्व सिद्ध भएपछि यी दुवैथरी पदार्थहरूको अस्तित्व केमा अडेको छ र यिनका अधिष्ठातृ देवता को हुन् ? भन्ने जिज्ञासा पैदा हुनु स्वाभाविकै हो । यसको उत्तरमा कारिकाले भन्दछ । जस्तै –

कल्पयत्यात्मनात्मानमात्मा देवः स्वमायया ।
स एव बुध्यते भेदानिति वेदान्तनिश्चयः ॥ (१२)

अर्थात् स्वयंप्रकाश आत्मा आफ्ना मायाद्वारा स्वयं कल्पना गर्दछ र ऊ आफैं नै स्वयं भेदहरू जान्दछ । यही नै वेदान्तको निश्चय हो ।

आचार्य गौडपादका मतमा प्रपञ्चको प्रतीति मायाका कारणले नै हुने गर्दछ । मायाका माध्यमबाट नै यो सारा प्रपञ्च भासमान हुन्छ । तर मायालाई कसैले पनि निर्वचन गर्न सक्तैन । त्यसलाई अनिर्वचनीय भनेर वेदान्तले भनेको छ । किनभने माया न सत् हो, न असत् हो न सदसत् हो, न भिन्न हो, न अभिन्न हो, न भिन्नाभिन्न हो, न सावयव हो, न निरवयव हो र न उभय रूप नै हो । मायालाई कुनै पनि रूपमा निरूपण गर्न सकिँदैन । अद्वैत वेदान्तको भाषामा

भन्ने हो भने स्वरूपको विस्मृति नै माया हो । स्वरूपको ज्ञानबाट नै त्यसको निवृत्ति हुन्छ । कारिकामा भनिएको पनि छ । जस्तै –

असतो मायया जन्म तत्त्वतो नैव युज्यते ।
बन्ध्यापुत्रो न तत्त्वेन मायया वापि जायते ॥ (२८)

अर्थात् असद्वस्तुको जन्म माया अथवा तत्त्वतः अर्थात् वस्तुतः कुनै प्रकारले पनि हुन सम्भव छैन । बाँझीको छोरो न वस्तुतः न मायाबाटै उत्पन्न हुन सम्भव छ ।

उपर्युक्तअनुसार जसरी मन्द अन्धकारमा रज्जुतत्त्वको निश्चय नभएपछि त्यसमा सर्प, धारो, भूच्छिद्र आदि नानाप्रकारका वस्तुहरू देखिनथाल्दछन् । जब पूर्ण प्रकाशमा रज्जुको ज्ञान हुन्छ तब एकमात्र रज्जु अर्थात् डोरीमात्र बाँकी रहन्छ । भ्रमवश डोरीरूपी अधिष्ठानमा भ्रमले देखापरेका सबै भ्रमहरू स्वतः नाश भएर जान्छन् । त्यसैगरेर मायामोहित जीवलाई नै भेदप्रपञ्चको भ्रान्ति हुन्छ । मायाको पर्दा हटेपछि एकमात्र अखण्ड र अद्वैत वस्तुमात्रै बाँकी रहन्छ ।

माण्डूक्यकारिकाका कारक गौडपादाचार्यले यस उपनिषद्को व्याख्या गर्ने क्रममा क्रमशः प्राणात्मवाद, भूतात्मवाद, गुणात्मवाद, तत्त्वात्मवाद र यज्ञात्मवादसमेतका विभिन्न मतमतान्तरहरूको उल्लेख गर्नुभएको छ । यो सम्पूर्ण प्रपञ्चज स्वप्न, माया र गन्धर्वनगरजस्तो देखिन्छ । त्यसैगरेर ज्ञानीहरू यस दृश्यप्रपञ्चलाई असत् र भ्रमपूर्ण भनेर ठान्दछन् । यस सम्बन्धमा आचार्य भन्नुहुन्छ । जस्तै –

न निरोधो न चोत्पत्तिर्न बद्धो न च साधकः ।
न मुमुक्षुर्न वै मुक्त इत्येषा परमार्थता ॥ (३२)

अर्थात् न प्रलय छ, न सृष्टि छ, न कोही बाँधिएको छ, न कोही साधक छ, न कोही मुमुक्षु छ र न त कोही मुक्त नै छ। वास्तवमा यही नै परमार्थता हो।

पारमार्थिकरूपमा एउटा अखण्ड चिद्घन वस्तुलाई छोडेर उत्पत्ति, प्रलय, बद्ध, साधक, मुमुक्षु र मुक्तसमेतको कुनै व्यवहार छँदैछैन। यो तत्त्व अत्यन्त दुर्दर्श छ। यसै मायाको मायिक प्रपञ्चमा चुर्लुम्म डुबेको अज्ञ प्राणीले यसप्रकारको वस्तुतथ्यलाई बुझ्नैसक्तैन। सम्पूर्ण मायिक प्रपञ्चबाट माथि उठेका आत्माराम, आत्मकाम तथा निष्काम ब्रह्मज्ञानी महात्माहरूलाईमात्रै त्यस प्रपञ्चातीत अद्वय पदको ज्ञान हुन्छ। द्वन्द्वातीत महात्माहरूले नै त्यस अभय ब्रह्मतत्त्वलाई प्राप्त गर्दछन्।

आगमप्रकरणपछि आचार्य गौडपादले वैतथ्य प्रकरणमा युक्तिपूर्वक द्वैतको अभाव भएको कुरा सशक्तरूपमा प्रतिपादन गर्नुभएको छ। आगमप्रकरणमा शास्त्रप्रमाणहरूबाट प्रमाणित भएको अद्वैततत्त्वलाई तर्क र युक्तिहरूद्वारा सिद्ध गर्नका लागि अद्वैतप्रकरणको कारिकाको प्रणयन गौडपादले गर्नुभएको देखिन्छ। अद्वैतप्रकरणमा भनिएको छ। जस्तै –

उपासनाश्रितो धर्मो जाते ब्रह्मणि वर्तते।
प्रागुत्पत्तेरजं सर्वं तेनासौ कृपणः स्मृतः॥

यसरी पहिलो कारिकाबाट शुरु भएर ४८ औँ कारिकामा गएर यो प्रकरण समाप्त भएको छ। जस्तै अन्तिम कारिका –

न कश्चिज्जायते जीवः सम्भवोऽस्य न विद्यते।
एतत्तदुत्तमं सत्यं यत्र किञ्चिन्न जायते॥

यस प्रकरणको शुरुमा नै मेरो उपास्य अर्कै हो र म अन्य हुँ भन्ने प्रसङ्गबाट कारिका शुरु गरेर उपासनाश्रित धर्म जातब्रह्म अर्थात् कार्यब्रह्ममा रहेको देखाइएको छ। वास्तवमा उत्पत्तिभन्दा पहिले यो संसार केही थिएन, केवल अजन्मा ब्रह्ममात्रै थियो। कार्यब्रह्मका उपासकहरू कृपण भएको कुरा कारिकाले अद्वैतप्रकरणको शुरुमा नै उद्घोष गरेको छ। यसैगरेर अर्को उपनिषद् केनोपनिषद्मा पनि कैयौँ पर्यायहरूद्वारा मन, वाणी, प्राणादिका साक्षीका रूपमा रहेको प्रत्यगात्मालाई नै ब्रह्म भनेर बुझ्नुपर्ने कुरा बताइएको छ। जसलाई ब्रह्म भनेर उपासना गरिन्छ त्यो ब्रह्म नभएको कुरा *'नेदं यदिदमुपासते'* भन्ने मन्त्रसमेतबाट प्रत्याख्यान गरिएको छ।

यसरी उपासकलाई कृपण भन्दै अर्को कारिकाले भनेको छ। जस्तै –

**अतो वक्ष्याम्यकार्पण्यमजाति समता गतम्।**
**यथा न जायते किञ्चिज्जायमानं समन्ततः ॥ (२)**

उक्त कारिकामा समभावमा रहेको अजाति अर्थात् अजन्मा वस्तु नै अकार्पण्य हो भनिएको छ।

यसपछि अद्वैतप्रकरणमा फेरि भनिएको छ। जस्तै –

**आत्मा ह्याकाशवज्जीवैर्घटाकाशैरिवोदितः।**
**घटादिवच्च सङ्घातैर्जातावेतन्निदर्शनम् ॥ (३)**

यसरी कारिकाहरूद्वारा घटाकाशादिको दृष्टान्त दिएर औपाधिक भेदको उल्लेख विशदरूपमा गरिएको छ। यिनमा आकाशस्थानीय आत्मतत्त्वको उत्पत्ति नहुनुको साथै यसको असङ्गताको पनि प्रतिपादन

गरिएको छ । यस सन्दर्भमा जसरी एउटा घटाकाश धूवाँ र धूलो आदिले दूषित भए तापनि अरू सम्पूर्ण घटाकाश दूषित हुँदैनन् । त्यसैगरेर दृष्टान्तका रूपमा एउटा जीवका सुखदुःखले अरू सम्पूर्ण जीवहरू सुखी वा दुःखी हुँदैनन् । वास्तविकरूपमा भन्ने हो भने धूवाँले र धूलाले आकाशलाई छुन सक्तैनन् भने त्यसैगरेर सुखदुःखादिले पनि आत्मालाई छुन सक्तैनन् । अध्यासात्मक जीवको मरण, जन्म, गमन, आगमन आदि भ्रमात्मक कुराहरूले प्रत्यगात्मालाई कुनै फरक पार्न सक्तैनन् । किनभने यी सम्पूर्ण कुराहरू सपनाजस्तै हुन् र यी सबै कार्यहरू मायाका सिर्जना हुन् । अधिष्ठानसत्तालाई यसबाट कुनै प्रभाव पर्दैन । आत्मा एक अखण्ड, अजन्मा र निर्लेप हो । श्रुतिले पनि भनेको छ – *‘एकमेवाद्वितीयम्’ ‘इदं सर्वं यदयमात्मा’ ‘द्वितीयाद्वै भयं भवति’ ‘उदरमन्तरं कुरुते अथ तस्य भयं भवति’* आदि । यी श्रुतिहरूले अभेददृष्टिको प्रशंसा र भेददृष्टिको निन्दा गरेका छन् ।

छान्दोग्योपनिषद्मा माटो र घडा, अग्नि र झिल्का, फलाम र नखनिकृन्तन आदि दृष्टान्तहरू दिएर सृष्टिको वर्णन गरिएको छ । त्यो वर्णन ब्रह्मका साथ प्रपञ्चको अभेद देखाउनका लागि नै हो । त्यो कुरा भेद देखाउनका लागि होइन । भेददृष्टि व्यवहार–कालमा मात्र रहन्छ, पारमार्थिक कालमा भने भेद रहँदैन । सद्वस्तुको सधैँ विद्यमानता रहने हुँदा फेरि जन्मनु आवश्यकता पर्दैन भने असद्वस्तु खरायोको सिङ्ग जस्तै अलीक भएको हुँदा जन्मने कुरै भएन । त्यसकारण ब्रह्मज्ञान हुनेबित्तिकै यो सारा द्वैतप्रपञ्च कपूर उडेझैँ गरेर उडेर जान्छ । ब्रह्मको ज्ञान हुनेबित्तिकै मनोनाश हुन्छ । यो अवस्था जीवको अग्रह अर्थात् निरोधजनित नभएर ग्राह्य वस्तुका अभावका कारणले नै हुन्छ । यसैलाई

अद्वैतवेदान्तमा वृत्तिव्याप्ति अथवा ब्रह्माकारवृत्ति भनिन्छ। यसै कुराको वर्णन कारिकाले यसरी गरेको छ –

**अकल्पकमजं ज्ञानं ज्ञेयाभिन्नं प्रचक्षते ।**
**ब्रह्मज्ञेयमजं नित्यमजेनाजं विबुध्यते ॥**
**निगृहीतस्य मनसो निर्विकल्पस्य धीमतः ।**
**प्रचारः स तु विज्ञेयः सुषुप्तेऽन्यो न तत्समः ॥** (३३,३४)

यही नै बोधको स्थिति हो। कारिकाकारले यसैलाई नै अस्पर्शयोग भनेका छन्। यो अत्यन्त दुर्दर्श छ। जस्तै –

**अस्पर्शयोगो वै नाम दुर्दर्शः सर्वयोगिभिः ।**
**योगिनो बिभ्यति ह्यस्मादभये भयदर्शिनः ॥** (३९)

यस अभयस्थितिलाई योगीहरू भय भन्ने सम्झन्छन्। यस स्थितिमा अहङ्कारको अत्यन्ताभाव हुने भएको हुँदा आफ्नै नाश भएजस्तो भान हुन्छ। यो अस्पर्शयोग केवल उत्तम अधिकारीका लागि हो। मनोनिग्रह भएपछिमात्रै अभय, दुःखक्षय, बोध र अक्षयशान्तिसमेत प्राप्त हुन्छ। यसैलाई अस्पर्शयोग भनिन्छ। मनोनिग्रह अत्यन्त दुरूह विषय हो। यो काम अत्यन्त धीरवीरको काम हो। यसका लागि अत्यन्त उत्साह, अनवरत अध्यवसाय र परम धैर्यको आवश्यकता पर्दछ। यसमा धेरैथरी विघ्नबाधाहरू आइपर्न सक्तछन्। अद्वैत प्रकरणमा – *'उपायेन निगृह्णीयाद्विक्षिप्तं कामभोगयोः, सुप्रसन्नं लये चैव यथा कामो लयस्तथा.'* देखि लिएर *'नास्वादयेत्सुखं तत्र निःसङ्गः प्रज्ञया भवेत् , निश्चलं निश्चरच्चित्तमेकीकुर्यात्प्रयत्नतः.'* सम्म अर्थात् ४२ कारिकादेखि लिएर ४५ कारिकासम्म यिनको

वर्णन गरिएको छ। यी कारिकाका अनुसार साधन गर्दागर्दा जब चित्त निरुद्ध हुन्छ त्यसपछिमात्रै बोधको उदय हुन्छ। जस्तै –

**यदा न लीयते चित्तं न च विक्षिप्यते पुनः ।**
**अनिङ्गनमनाभासं निष्पन्नं ब्रह्म तत्तदा ॥**
**स्वस्थं शान्तं सनिर्वाणमकथ्यं सुखमुत्तमम् ।**
**अजमजेन ज्ञेयेन सर्वज्ञं परिचक्षते ॥** (४६, ४७)

अर्थात् जुन समयमा चित्त सुषुप्तिमा लीन हुँदैन र विक्षिप्त पनि हुँदैन अनि निश्चल र विषयाभासले निर्मुक्त भएको हुन्छ, त्यस समयमा मन अर्थात् चित्त ब्रह्म नै भएको हुन्छ। त्यस समयमा भएको आनन्दको अनुभवलाई ब्रह्मज्ञानीहरू स्वस्थ, शान्त, निर्वाणयुक्त, अकथनीय, निरतिशयसुखस्वरूप, अजन्मा ज्ञेयसँग अभिन्न र सर्वज्ञ भन्दछन्।

उपर्युक्त अनुसार गौडपादाचार्यले अद्वैतप्रकरणका विभिन्न कारिकाहरूद्वारा अद्वैततत्त्व र यसका उपलब्धिका साधनहरूको वर्णन गरेकाछन्। अद्वैतप्रकरणको अन्तिम कारिकामा यसप्रकारको उपसंहार गर्दै उनले आफ्नू सिद्धान्त स्थापित गरेकाछन्। जस्तै –

**न कश्चिज्जायते जीवः सम्भवोऽस्य न विद्यते ।**
**एतत्तदुत्तमं सत्यं यत्र किञ्चिन्न जायते ॥**

अर्थात् – कुनै पनि जीवको उत्पत्ति नै हुँदैन। अर्थात् कुनै पनि प्रकारले कर्ताभोक्ता आत्माको उत्पत्ति हुनुपर्ने कारण नै देखिँदैन। अजन्मा ब्रह्मबाट कसैको पनि उत्पत्ति हुँदैन भन्ने कुरा नै परम सत्य हो। यसपछि अद्वैतप्रकरण समाप्त हुन्छ।

माण्डूक्योपनिषद्को अन्तिम कारिका अर्थात् अलातशान्ति–प्रकरणमा जम्मा १०० कारिकाहरू छन् । *'ज्ञानेनाकाशकल्पेन धर्मान्यो गगनोपमान्, ज्ञेयाभिन्नेन सम्बुद्धस्तं वन्दे द्विपदां वरम्.'* भन्ने कारिकाबाट शुरु भएर *'दुर्दर्शमतिगम्भीरमजं साम्यं विशारदम्, बुद्ध्वा पदमनानात्वं नमस्कुर्मो यथाबलम्.'* मा गएर समाप्त हुन्छ ।

यस अन्तिम अलातशान्तिप्रकरणमा सन्निविष्ट अलातशब्दको बारेमा केही चर्चा गर्नु आवश्यक देखिन्छ । अलात् शब्दको अर्थ भुङ्ग्रो अथवा बल्दो अगुल्टोलाई भनिन्छ । यसैलाई अर्को शब्दमा मसाल वा उल्का पनि भनिन्छ । त्यस बल्दो आगाको अगुल्टोलाई घुमाइयो भने त्यस अगुल्टामा थरीथरीका आकृतिहरू देखा पर्दछन् । यदि त्यस अगुल्टालाई घुमाउन बन्द गरियो भने कुनै आकृति या आकार केही पनि देखिँदैन । यसबाट के थाहा हुन्छभने न त्यस आगाको बल्दो अगुल्टाबाट केही निस्कन्छ न त त्यसमा केही लीन हुन्छ । न त्यसमा बाहिरबाट आएर केही मिल्दछ । त्यसको प्रतीति केवल मसालको स्पन्दनबाटमात्र हुन्छ । वस्तुतः प्रपञ्चको कुनै अस्तित्व नै छैन । यो दृश्यप्रपञ्च केवल मनको स्पन्दनका कारणले गर्दा प्रतीत हुन्छ । जब मनको अमनीभाव हुन्छ तब सारा दृश्यप्रपञ्च हराएर जान्छन् । यो सम्पूर्ण प्रपञ्चको प्रतीति र अप्रतीति भ्रान्तिजन्य नै हो । पारमार्थिक दृष्टिले न प्रपञ्चको उत्पत्ति हुन्छ न त लय नै हुन्छ । वास्तवमा त्यस भ्रान्तिको आधार पनि परब्रह्म नै हो । कुनै पनि भ्रान्ति निराधार अर्थात् अधिष्ठानविना हुनसक्तैन । डोरीको अधिष्ठानविना सर्पको भ्रम हुनसक्तैन । त्यसैगरेर शुक्तिको आधारविना चाँदीको भ्रम हुनसक्तैन । तदनुसार परब्रह्मको आधार पाएर नै अथवा ब्रह्मकै विवर्तका

रूपमा यो मिथ्या प्रपञ्च भास्तछ ।

यस प्रकरणमा अरू मतमतान्तरहरूलाई पनि देखाउँदै तिनको युक्तिपूर्वक खण्डन गरेर आफ्नू सिद्धान्तको गौडपादाचार्यले स्थापित गर्नुभएको छ। यस सन्दर्भमा उनले सद्वाद, असद्वाद, बीजाङ्कुर–सन्ततिवाद, विज्ञानवाद र शून्यवाद आदि सबै विपक्षीका सिद्धान्तहरूलाई मर्दन गर्दै आफ्नू अजातवाद सिद्धान्तको स्थापना गरेकाछन्। ती सम्बन्धी केही कारिकाहरू यहाँ उद्धृत गर्नु प्रासङ्गिक ठान्दछु। जस्तै–

**पूर्वापरापरिज्ञानमजातेः परिदीपकम् ।**
**जायमानाद्धि वै धर्मात्कथं पूर्वं न गृह्यते ॥** (२१)

अर्थात् हेतु र फलको पौर्वापर्यको ज्ञान नहुनुले पनि अजातवादलाई पुष्टि गर्दछ। किनभने यदि साँच्चै नै यस प्रपञ्चको उत्पत्ति भएको भए त्यसको कारण थाहा हुनु पर्ने हो। कुनै पनि कार्यको उत्पत्ति विनाकारण हुनै सक्तैन।

अर्को कारिकाले पनि यसै कुरालाई पुष्टि गरेको छ। जस्तै –

**स्वतो वा परतो वापि न किञ्चिद्वस्तु जायते ।**
**सदसत्सदसद्वापि न किञ्चिद्वस्तु जायते ॥** (२२)

अर्थात् – स्वतः अथवा परतः कुनै पनि तरिकाले कुनै पनि वस्तुको उत्पत्ति हुँदैन। किनभने सत्, असत् र सदसत् कुनै पनि वस्तु कुनै पनि अवस्थामा उत्पत्ति हुँदैन। जुन वस्तुको विद्यमानता छ त्यसको फेरि उत्पत्ति हुँदैन। जुन वस्तुको अविद्यमानता अर्थात् अत्यन्ताभाव छ त्यसको कुनै हालतमा पनि उत्पत्ति हुन सक्तैन।

जुन वस्तु छ र त्यो छैन पनि भनेर सर्वथा भन्न सकिँदैन । यसरी विचार गर्दा कुनै पनि वस्तुको उत्पत्ति सिद्ध हुँदैन । यसै कुरालाई अझ स्पष्ट पार्दै कारिका भन्दछ । जस्तै –

नास्त्यसद्धेतुकमसत्सदसद्धेतुकं तथा ।
सच्च सद्धेतुकं नास्ति सद्धेतुकमसत्कुतः ॥ (४०)

अर्थात् न असत्पदार्थ नै असत्को कारण हुन्छ । न सत्पदार्थ नै असत्को कारण हुन्छ । त्यसैगरेर सत्पदार्थ पनि सत्को कारण हुन सक्तैन । यस अवस्थामा कसरी असत् सत्को कारण हुनसक्तछ ?

यसै कुरालाई अझै स्पष्ट पार्दै शङ्कराचार्य आफ्ना भाष्यमा लेख्नुहुन्छ – असत्कारण भएको असत् पदार्थ आजसम्म संसारमा देखिएको छैन, जस्तै – आकाशपुष्प आदि । असत् पदार्थहरू शशशृङ्गादि असत् कारणबाट उत्पन्न भएका देखिँदैनन् । त्यसैगरेर घटपटादि सद्वस्तु पनि असद्धेतुक अर्थात् शशविषाणादिका अर्थात् असत्पदार्थका कार्य हुनसक्तैनन् । अनि सत् अर्थात् विद्यमान घट आदि कुनै अरू सद्वस्तुको कारण हुनसक्तैन भने सत्को कार्य असत् कसरी हुनसक्तछ । अतः सारांशमा विवेकीका लागि कुनै वस्तुको पनि कार्यकारणभाव हुनसक्तैन ।

अलातशान्तिप्रकरणमा यसरी नानाथरी युक्तिहरू प्रस्तुत गरेर जन्मको निमित्तभूत द्वैतको अत्यन्ताभाव देखाइएकोछ । यस कुरालाई बुझेपछि पुरुषले अभयपद प्राप्तगर्दछ । अगाडि यसलाई यसरी वर्णन गरिएको छ । जस्तै –

निवृत्तस्याप्रवृत्तस्य निश्चला हि तदा स्थितिः ।
विषयः स हि बुद्धानां तत्साम्यमजमद्वयम् ॥ (८०)

अर्थात् – जब चित्त अर्थात् मन द्वैतबाट निवृत्त र विषयान्तरमा प्रवृत्त नभएर निश्चल रहन्छ । त्यो भनेको परमार्थदर्शी पुरुषको परम साम्य, अज र अद्वय अवस्था हो ।

यो परमार्थदर्शी ज्ञानीहरूको विषय कसरी भयो त ? भन्ने सम्बन्धमा यसपछि अर्को कारिकाले भनेको छ । जस्तै–

**अजमनिन्द्रमस्वप्नं प्रभातं भवति स्वयम् ।**
**सकृद्विभातो ह्येवैष धर्मो धातुस्वभावतः ॥** (८१)

अर्थात् यो अज, अनिद्र अस्वप्न र स्वयंप्रकाश हो । यो आत्मा वस्तुस्वभावले नित्य प्रकाशमान छ । यो आत्मा प्रकाशित हुन आदित्य आदिको अपेक्षा राख्तैन । आत्मा स्वभावले नै सदा प्रकाशमान छ ।

आत्माको दुर्दर्शताको हेतु उल्लेख गर्दै अर्को कारिकामा आचार्य भन्नुहुन्छ । जस्तै –

**सुखमाव्रियते नित्यं दुःखं विव्रियते सदा ।**
**यस्य कस्य च धर्मस्य ग्रहेण भगवानसौ ॥** (८२)

अर्थात् ती भगवान् अर्थात् अद्वय आत्मदेव कुनै पनि द्वैतवस्तुका अर्थात् मिथ्यानिवेशका कारण आवृत अर्थात् आच्छादित हुन्छन् । परमार्थतत्त्व अर्थात् आत्मज्ञान अत्यन्त मुश्किलले प्रकट हुन्छ । त्यो जिज्ञासुले प्राप्त गर्दछ ।

उपर्युक्त कारिकामा वर्णित तथ्यलाई स्पष्ट गर्न कारिकाकार अर्को कारिका प्रस्तुत गर्दछन् । अस्ति र नास्ति आदि इत्यादि तर्कवितर्कहरूद्वारा परमात्माका विषयमा पण्डितहरूद्वारा गरिने

सूक्ष्मविषयको आग्रह पनि आवरण नै हो भने मूर्खहरूको बुद्धिरूप आग्रहको त के कुरा गर्ने ? भनेर नै तलको कारिका आएको हो भनेर आचार्य शङ्कर भन्नुहुन्छ । जस्तै –

**अस्ति नास्त्यस्ति नास्तीति नास्ति नास्तीति वा पुनः ।**
**चलस्थिरोभयाभावैरावृणोत्येव बालिशः ॥** (८३)

अर्थात् – पहिलाथरी वादीहरू आत्मा छ भन्छन् । दोस्राथरी वैनाशिकहरू छैन भन्छन् । तेस्राथरी अर्द्धवैनाशिक अर्थात् सदसद्वादी दिगम्बरहरू छ पनि छैन पनि भन्दछन् । चौथाथरी अत्यन्त शून्यवादीहरू छैन भनेर जोड दिएर भन्दछन् ।

यसरी विश्लेषण गर्दा अस्तिभाव चल हो । नास्तिभाव स्थिर हो । सदसद्भाव चल र स्थिर दुवै हो र नास्ति नास्तिभाव अत्यन्ताभाव हो । यिनै चारथरी विवेकहीन सदसदादि वादीगणहरू नै भगवान्लाई आच्छादित गर्दछन् । यसरी विचार गर्दा यद्यपि यी चारैथरी वादीहरू पण्डित हुन्, तर पनि परमार्थतत्त्वको ज्ञान नहुनाको कारण ती सबै मूर्ख नै हुन् भने स्वभावले नै मूर्खहरूको के कुरा गर्ने ? भनेर आचार्य गौडपादका साथ आचार्य शङ्कर पनि आश्चर्य प्रकट गर्नु हुन्छ ।

उपर्युक्त सबैथरी व्यक्तिहरू बालिश अथवा मूर्ख हुन् भने कस्ता व्यक्तिलाई परमार्थतत्त्वज्ञ भनेर भन्ने त ? भन्ने प्रश्न आउन सक्तछ । यसको समाधान गर्दै आचार्य भन्दछन् । जस्तै –

**कोटयश्चतस्र एतास्तु ग्रहैर्यासां सदावृतः ।**
**भगवानाभिरस्पृष्टो येन दृष्टः स सर्वदृक् ॥** (८४)

अर्थात् – माथिल्लो ८३ औँ कारिकामा वर्णन गरिएको अभिनिवेशले जसको आत्मा सधैँ आवृत छ, ती तिनै चार कोटिमा नै पर्दछन् । यीबाट असंस्पृष्ट अर्थात् अलग रहेको भगवान् अर्थात् परब्रह्मलाई जसले देखेको छ त्यही व्यक्ति नै सर्वज्ञ हो । त्यस्ता व्यक्तिको कुनै पनि कर्तव्य शेष रहँदैन । त्यस्ता व्यक्तिका शमदमादि सात्त्विक व्यवहारहरू पनि लोक सङ्ग्रहका लागि खालि लीला मात्र ठहरिन आउँछ ।

उपर्युक्त अनुसार जुन व्यक्ति परमार्थतत्त्वलाई जान्दछ, त्यो नै यस संसारमा अकृपण हो । त्यस्ता व्यक्ति बाहेक अरू सबै कृपण हुन् भन्दै आचार्य भन्नुहुन्छ । जस्तै –

**वैशारद्यं तु वै नास्ति भेदे विचरतां सदा ।**
**भेदानिम्नाः पृथग्वादास्तस्मात्ते कृपणाः स्मृताः ॥** (९४)

अर्थात् – जुन मान्छेहरू सधैँ नै भेददृष्टि राख्तछन् । ती कृपण हुन् र तिनको कहिल्यै विशुद्धि हुँदैन । द्वैतवादी भेदवादी हुन् । त्यसैकारण ती कृपण हुन् ।

आत्मज्ञानी नै महाज्ञानी भएको कुराको उल्लेख गर्दै कारिका भन्दछ । जस्तै –

**अजे साम्ये तु ये केचिद्भविष्यन्ति सुनिश्चिताः ।**
**ते हि लोके महाज्ञानास्तच्च लोको न गाहते ॥** (९५)

अर्थात् – त्यस अज तथा साम्यरूप परमार्थतत्त्वलाई निश्चितरूपमा यही नै हो भनेर जसले जान्दछ संसारमा त्यही पुरुष नै निरतिशय तत्त्वज्ञ अर्थात् महाज्ञानी हो । त्यस परमतत्त्वलाई

सामान्य पुरुषले जान्न सक्तैन ।

यस अलातशान्तिप्रकरणको तल आउने कारिकाद्वारा जातवादको दोष देखाउँदै प्रकारान्तरले आचार्य अजातवादको ख्यापन गर्दछन् । जस्तै –

**अणुमात्रेऽपि वैधर्म्ये जायमानेऽविपश्चितः ।**
**असङ्गता सदा नास्ति किमुतावरणच्युतिः ॥ (९७)**

अर्थात् सानोभन्दा पनि सानो विधर्मी वस्तु कतै पनि उत्पन्न भयो भने त्यसले अविवेकी पुरुषलाई बाँधेर राख्तछ भने यस संसारमा फसेको त्यस्ताको आवरणच्युति अर्थात् बन्धननिर्मुक्ति कसरी हुन सक्तछ ? अतः कुनै कुराको पनि उत्पत्तिबाट बन्धन नै हुन्छ । अतः मुक्तिका लागि अजातवाद अर्थात् निरुत्पत्तिवाद नै अन्तिम उपाय भएको कुरा यस कारिकाको आशय हो ।

केही दार्शनिकहरूले अजातवादलाई प्रच्छन्न बौद्धवाद अर्थात् बौद्धदर्शन हो भनेर पनि पुराणहरूले भनेको देखिन्छ । जस्तै– *'मायावादमसच्छास्त्रं प्रच्छन्नं बौद्धमेव च'* आदि । यसै कुरालाई प्रत्याख्यान गर्दै आचार्य भन्दछन् । जस्तै –

**क्रमते न हि बुद्धस्य ज्ञानं धर्मेषु तायिनः ।**
**सर्वे धर्मास्तथा ज्ञानं नैतद्बुद्धेन भाषितम् ॥ (९९)**

अर्थात् – अखण्ड, आकाशसदृश र प्रज्ञानवान् परमार्थदर्शीको ज्ञान कुनै पनि हालतमा धर्म अर्थात् विषयहरूमा सङ्क्रमित हुँदैन । अझ अद्वैतवाद किंवा अजातवादका मतमा सम्पूर्ण धर्म वा आत्मा कहीं पनि सङ्क्रमित हुँदैन । ज्ञान, ज्ञेय र ज्ञाताको भेद नभएको

अर्थात् त्रिपुटीरहित यस अद्वय परमार्थतत्त्वको निरूपण बुद्धले कदापि गरेका थिएनन्। यद्यपि बुद्धले बाहिरी वस्तुको निषेध गरेर केवल ज्ञानको कल्पना गरेका थिए।

यसरी विचार गर्दा उनी अद्वैतवाद वा अजातवादका केही नजिक आएको देखिन्छ। तर अद्वैतपरमार्थतत्त्वभने विशुद्धरूपमा अद्वैतवेदान्तको विषय हो।

अन्तिम *'दुर्दर्शमतिगम्भीरमजं साम्यं विशारदम्'* भन्ने १०० औँ कारिकामा *'नमस्कुर्मो यथाबलम्'* भन्दै माण्डूक्योपनिषद्को व्याख्याका रूपमा लेखिएको माण्डूक्यकारिकाको समाप्ति आचार्य गौडपादले गरेकाछन्।

आचार्य गौडपादले आगमप्रकरणको प्रथमकारिका *'बहिष्प्रज्ञो विभुर्विश्वः'* बाट शुरु गरेर अलातशान्तिप्रकरणको *'दुर्दर्शमति-गम्भीरमजम्'* मा गएर समाप्त गरेकाछन्। यस माण्डूक्य-कारिकामा गौडपादाचार्यले शुरुदेखि अन्त्यसम्म अजातवादको प्रतिपादन गरेकाछन्। यो संसार भ्रमरूप अथवा मिथ्यामात्रै होइन यो त अजात अर्थात् नजन्मिएको नै हो भनेका छन्। यही नै यस उपनिषद्को मुख्य सार हो।

माण्डूक्यकारिकाका सम्बन्धमा महामहोपाध्याय पण्डित गोपीनाथ कविराजले ब्रह्मसूत्रको भूमिकामा निम्नअनुसारको टिप्पणी गरेकाछन् –

आद्यजगद्गुरु आचार्य श्रीशङ्करले बौद्धमतको अनुसरण गर्दै बौद्धमतको खण्डन गरेका हुन् भनेर केही पण्डितहरूले भनेका छन्। *'मायावादमसच्छास्त्रं प्रच्छन्नं बौद्धमेव च'* इत्यादि पौराणिक वचन यसैको परिपोषक हो। यिनीहरूका भनाइ अनुसार आचार्य

गौडपादका कारिकाको विशेषरूपले पर्यालोचन गर्दा यो कुरा थाहा हुन्छ । हुन त माण्डूक्यकारिका वस्तुतः औपनिषदब्रह्मवादको स्थापना गर्न नै प्रवृत्त भएको छ । तर पनि भाव र भाषाले यो ग्रन्थ आदिदेखि अन्त्यसम्म माध्यमिक दर्शनका प्रभावले परिपूर्ण भएको देखिन्छ । यस ग्रन्थमा माथि उल्लेख भए अनुसार आत्माका विषयमा अस्ति, नास्ति, अस्तिनास्ति र नास्तिनास्ति समेत गरेर चार कोटिको उल्लेख गरिएको छ । जस्तै –

अस्ति नास्त्यस्ति नास्तीति नास्ति नास्तीति वा पुनः ।
चलस्थिरोभयाभावैरावृणोत्येष बालिशः ॥
कोटयश्चतस्र एतास्तु ग्रहैर्यासां सदावृतः ।
भगवानाभिरस्पृष्टो येन दृष्टः स सर्वदृक् ॥

यसको सारांश यो हो कि आत्मा सत्, असत्, सदसदुभयात्मक तथा सदसद्विलक्षण यी चार कोटिहरूमा कुनै कोटिले पनि संयुक्त छैन । यसरी चतुष्कोटिविनिर्मुक्त आत्मालाई जसले साक्षात्कार गरेको छ, उही नै सर्वदर्शी अथवा सर्वज्ञ हुनसक्तछ । गौडपादभन्दा धेरै पहिले नागार्जुनले पनि माध्यमिककारिकामा यही कुरा भनेका थिए । जस्तै –

न सन्नासन्न सदसन्न चाप्यनुभयात्मकम् ।
चतुष्कोटिविनिर्मुक्तं तत्त्वं माध्यमिकाविदुः ॥

गौडपादको उक्ति नागार्जुनको उक्त कारिकाको प्रतिध्वनिमात्रै हो । नागार्जुन र गौडपाद दुवैजना परमार्थतत्त्वलाई चतुष्कोटिनिर्मुक्त भन्दछन् ।

उक्त सङ्क्षिप्त विवेचनाअनुसार शून्यवादीको तत्त्व र आचार्य गौडपादको आत्मा प्रायः एकै प्रकारको प्रतीत हुन्छ । समालोचकहरूको विचारमा गौडपादको अजातवाद पनि नागार्जुनरचित माध्यमिक–कारिकामूलक नै देखिन्छ । नागार्जुनले भनेका छन् । जस्तै –

**न स्वतो नापि परतो न द्वाभ्यां नाप्यहेतुतः ।**
**उत्पन्ना जातु विद्यन्ते भावाः क्वचन केचन ॥**

– माध्यमिककारिका १।७

त्यस्तै कुरा गौडपादाचार्यले अलातशान्तिप्रकरणमा पनि उल्लेख गरेका छन् । जस्तै –

**स्वतो वा परतो वापि न किञ्चिद्वस्तु जायते ।**
**सदसत् सदसद्वापि न किञ्चिद् वस्तु जायते ॥**

– माण्डूक्यकारिका ४।२२

माण्डूक्यकारिकामा प्रयोग भएका शब्दावली अथवा पारिभाषिक शब्दहरू केवल बौद्धदर्शनका ग्रन्थहरूमा मात्रै प्रयोग भएको पाइन्छ ।

यसरी माण्डूक्योपनिषद् र कारिकाको समेत सङ्क्षिप्त विवेचना गरियो । अजातवाद सम्बन्धी यो ग्रन्थ सङ्क्षिप्त तर सशक्त उद्घोषण हो । अद्वैतवेदान्तको क्षेत्रमा यसको अत्यन्त महत्त्वपूर्ण स्थान छ । श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका मुखबाट श्रवण गर्ने सौभाग्य पाउने भाग्यमानी मुमुक्षुका लागि यो ग्रन्थ मोक्षको साक्षात्साधन बन्नसक्तछ । कुनै पनि मुमुक्षुका लागि यो ग्रन्थ सदा पठनीय र मननीयसमेत भएको कुरा निवेदन गर्दछु । अस्तु । श्रीकृष्णार्पणमस्तु ।



# तैत्तिरीयोपनिषद्

**सर्वांशाध्वान्तनिर्मुक्तं सर्वांशाभास्करं परम् ।**
**चिदाकाशावतंसं तं सद्‌गुरुं प्रणमाम्यहम् ॥**

तैत्तिरीय उपनिषद् कृष्ण यजुर्वेदीय तैत्तिरीय आरण्यक अन्तर्गत ७, ८ र ९ प्रपाठक अन्तर्गत पर्दछ । यस उपनिषद् अन्तर्गत शिक्षावल्ली, ब्रह्मानन्दवल्ली र भृगुवल्लीसमेत पर्दछन् । शिक्षावल्लीमा बाह्र ओटा अनुवाक्‌हरू छन् । ब्रह्मानन्दवल्लीमा नौ ओटा अनुवाक्‌हरू र अन्तिम भृगुवल्लीमा दश ओटा अनुवाक्‌हरू छन् ।

यस उपनिषद्‌को शिक्षावल्लीको प्रथम अनुवाकको सम्बन्धभाष्यमा भाष्यकार आचार्य श्रीशङ्करले यसको उपक्रमका क्रममा आत्मविद् नै आप्तकाम हुने कुरा देखाउँदै मीमांसकका मतको समीक्षा पनि गर्नुभएको छ । सम्बन्धभाष्यको अन्त्यमा उपनिषत् शब्दको निरुक्ति पनि उहाँले गर्नुभएको छ ।

त्यसपछि शिक्षा वल्लीको शान्तिपाठ *'ॐ शं नो मित्रः शं वरुणः'* आउँछ । द्वितीय अनुवाकमा शिक्षाको व्याख्या गरिएको छ । यहाँ *'शिक्षा शिक्ष्यन्ते अनया इति वर्णाद्युच्चारणलक्षणम् शिक्ष्यन्त इति वा वर्णादयः शिक्षैव शिक्षा, दैर्घ्यं छान्दसम्.'* अर्थात्– जसबाट वर्णादिको उच्चारण सिकिन्छ, त्यसैलाई शिक्षा भनिन्छ ।

अथवा जे जे सिकिन्छन् ती वर्ण आदि शिक्षाजस्ता शिक्षा हुन् । त्यही ह्रस्व शिक्षालाई वेदको प्रक्रियाअनुसार दीर्घ शीक्षा भनिएको हो । दुवैको अर्थ भने एकै हो ।

तृतीय अनुवाकमा चार मन्त्रहरू छन् । यस अनुवाकमा पाँच प्रकारको संहितोपासना बताइएका छन् । चतुर्थ अनुवाकमा तीन मन्त्रहरू छन् । यस अनुवाकमा श्री र बुद्धिको कामना गर्नेका लागि जप र होमसम्बन्धी मन्त्र दिइएको छ । पञ्चम अनुवाकमा तीन मन्त्रहरू छन् । यिनमा व्याहृतिरूप ब्रह्मको आन्तरिक उपासनाको कुरा उल्लेख गरिएको छ । षष्ठ अनुवाकमा दुई मन्त्रहरू छन् । यिनमा ब्रह्मको साक्षात् उपलब्धिस्थान हृदयाकाशको वर्णन गरिएको छ । जस्तै – *भूः, भुवः, सुवः* र *महः* यी व्याहृतिरूप हिरण्यगर्भसंज्ञक ब्रह्मका अङ्गहरू हुन् । त्यस ब्रह्मको साक्षात् उपलब्धि र उपासनाका लागि हृदयाकाश स्थान भनिएको छ । जसरी विष्णुका लागि शालिग्राम नै स्थान हो । हृदयमा ब्रह्मको उपासना गऱ्यो भने मनोमयत्वादिविशिष्ट ब्रह्म हत्केलामा राखेको अमला जस्तैगरेर साक्षात् उपलब्ध हुन्छ । यसका अतिरिक्त सर्वात्मभावको प्राप्तिका लागि उपाय पनि बताउनु परेको हुँदा यो अनुवाक आएको हो । जस्तै –

स य एषोऽन्तर्हृदय आकाशः । तस्मिन्नयं पुरुषो मनोमयः । अमृतो हिरण्मयः । अन्तरेण तालुके । य एष स्तन इवावलम्बते । सेन्द्रयोनिः यत्रासौ केशान्तो विवर्तते । व्यपोह्य शीर्षकपाले । भूरित्यग्नौ प्रतितिष्ठति । भुव इति वायौ । सुवरित्यादित्ये । मह इति ब्रह्मणि ..... ।

अर्थात् – यो जुन हृदयका मध्यमा रहेको आकाश छ, त्यसैमा

नै यो मनोमय अमृतस्वरूप हिरण्मय पुरुषको निवास छ। तालुका बीचमा स्तनजस्तो झुण्डिएको जुन लिगलिगे छ, त्यसैका बीच भएर सुषुम्ना नाडी जान्छ, इत्यादि।

सप्तम अनुवाकमा पाङ्क्तरूपले गरिने ब्रह्मको उपासनाको वर्णन आउँछ। यस कुराको विधान *'पृथिव्यन्तरिक्षं द्यौर्दिशोऽवान्तरदिशः'* भन्ने मन्त्रले गरेको छ। आठौँ अनुवाकमा ॐकारोपासनाको विधान गरिएको छ। नवौँ अनुवाकमा ऋतादि शुभकर्महरूको अवश्यकर्तव्यताको विधान गरिएको छ। दशौँ अनुवाकमा त्रिशङ्कुको वेदानुवचन दिइएको छ। शिक्षावल्लीको एघारौँ अनुवाकमा वेदाध्ययनपछि अर्थात् दीक्षान्तस्नानपछि शिष्यहरूलाई आचार्यले दिएको महत्त्वपूर्ण उपदेश आउँछ। जुन उपदेश गुरुकुलको अध्ययन समाप्त गरेर स्नातक भएर घर फर्केपछि प्रत्येक गृहस्थले महामन्त्रका रूपमा लिनुपर्ने देखिन्छ।

वेदाध्ययन गराइसकेपछि आचार्यले शिष्यलाई जुन उपदेश दिन्छन्। सत्यं वद – साँचो बोल। धर्मं चर – धर्मको आचरण गर। स्वाध्यायान्मा प्रमद – स्वाध्यायमा प्रमाद नगर। आचार्याय प्रियं धनमाहृत्य प्रजातन्तुं मा व्यवच्छेत्सी – आचार्यलाई गुरुदक्षिणा दिएर गुरुको आज्ञा लिएर गृहस्थाश्रममा प्रवेश गर र योग्य सन्तान जन्माऊ। अर्थात् सन्तानपरम्पराको उच्छेद नगर। सत्यान्न प्रमदितव्यम् – सत्यबाट विचलित नहोऊ। धर्मान्न प्रमदितव्यम्– धर्ममा प्रमाद नगर। कुशलान्न प्रमदितव्यम् – कुशल कर्ममा प्रमाद नगर। भूत्यै न प्रमदितव्यम् – ऐश्वर्य दिने माङ्गलिक कार्यमा प्रमाद नगर। स्वाध्यायप्रवचनाभ्यां न प्रमदितव्यम् – स्वाध्याय र प्रवचनमा प्रमाद नगर।

देवपितृकार्याभ्यां न प्रमदितव्यम् – देवकार्य र पितृकार्यमा प्रमाद नगर। मातृदेवो भव – मातृभक्त बन। पितृदेवो भव– पितृभक्त बन। आचार्यदेवो भव – आचार्यभक्त बन। अतिथिदेवो भव – अतिथिभक्त बन। यान्यनवद्यानि कर्माणि तानि सेवितव्यानि नो इतराणि – जुन अनिन्द्य कर्महरू छन् तिनैको अनुसरण गर्नु पर्दछ निन्द्यको होइन। यान्यस्माकं सुचरितानि तानि त्वयोपास्यानि – हाम्रा जुन शुभ आचरणहरू छन् तिमीले तिनैको अनुसरण गर्नुपर्दछ।

नो इतराणि–निषेधित कामहरू नगर। श्रद्धया देयम्– श्रद्धाले देऊ। अश्रद्धयाऽदेयम् – अश्रद्धाले नदेऊ। श्रिया देयम् – गच्छे अनुसार देऊ। ह्रिया देयम् – लाजले देऊ। भिया देयम् – डरले देऊ। संविदा देयम् – मित्रताले देऊ। शिक्षावल्लीको बाह्रौँ अनुवाकमा शान्ति पाठ आउँछ र शिक्षा वल्ली समाप्त पनि हुन्छ।

तैत्तिरीयोपनिषद्को दोस्रो ब्रह्मानन्दवल्लीको प्रथम अनुवाकमा सर्वप्रथम शान्तिपाठ आउँछ। त्यसपछि ब्रह्मज्ञानको फल, सृष्टिक्रम र अन्नमयकोशरूप पक्षीको वर्णन आउँछ।

यस वल्लीको प्रथम अनुवाकमा सर्वप्रथम ब्रह्मज्ञानको फल बताइएको छ – ब्रह्मविदाप्नोति परम्–ब्रह्मवेत्ताले परमात्मालाई प्राप्त गर्दछ। तदेषाभ्युक्ता–यस सम्बन्धमा श्रुति भन्दछ–सत्यं ज्ञानमनन्तं ब्रह्म–ब्रह्म सत्य, ज्ञान र अनन्त हो। यो वेद निहितं गुहायां परमे व्योमन्–जसले ब्रह्मलाई बुद्धिरूप परम आकाशमा रहेको ठान्दछ, त्यसले सोऽश्नुते सर्वान् कामान् सह ब्रह्मणा विपश्चितेति–सर्वज्ञ ब्रह्मरूपले एकैसाथ नै सम्पूर्ण भोगहरू प्राप्त गर्दछ।

यसपछि सृष्टिको क्रम आउँछ। जस्तै – *तस्माद्वा एतस्मादात्मन आकाशः सम्भूतः । आकाशाद्वायुः । वायोरग्निः । अग्नेरापः । अद्भ्यः पृथिवी । पृथिव्या ओषयः ।* अर्थात् – त्यसै आत्माबाट आकाश उत्पन्न भयो। आकाशबाट वायु। वायुबाट अग्नि, अग्निबाट जल, जलबाट पृथिवी र पृथिवीबाट ओषधिहरू उत्पन्न भए ।

यसपछि अन्नमयकोशरूप पक्षीको वर्णन आउँछ । जस्तै – *'ओषधिभ्योऽन्नम् । अन्नात्पुरुषः । स एवा एष पुरुषोऽन्नरसमयः । तस्येदमेव शिरः । अयं दक्षिणः पक्षः । अयमुत्तरः पक्षः । अयमात्मा । इदं पुच्छं प्रतिष्ठा ।'* अर्थात् – ओषधिबाट अन्न उत्पन्न भयो र अन्नबाट पुरुष उत्पन्न भयो। यो पुरुष अन्नरसमय हो। त्यसको यो शिर नै शिर हो। त्यसको दाहिने हात नै दाहिने पखेटा हो। त्यसको देब्रे हात नै देब्रे पखेटा हो। यो शरीरको मध्य भाग आत्मा हो। यो पुच्छ प्रतिष्ठा हो।

यसरी प्रथम अनुवाक अन्नमयकोशको वर्णन गरेपछि अब द्वितीय अनुवाकले अन्नको महिमा र प्राणमय कोशको वर्णन गर्दछ। जस्तै – *अन्नाद्वै प्रजा जायन्ते। याः काश्च पृथिविं श्रिताः। अथो अन्नेनैव जीवन्ति । अथैनदपि यन्त्यन्ततः । अन्नं हि भूतानां ज्येष्ठम् । तस्मात्सर्वौषधमुच्यते। सर्वं वै तेऽन्नमाप्नुवन्ति येऽन्नं ब्रह्मोपासते। अन्नं हि भूतानां ज्येष्ठम्। तस्मात्सर्वौषधमुच्यते। अन्नाद्भूतानि जायन्ते। जातान्यन्नेन वर्धन्ते। अद्यतेऽत्ति च भूतानि। तस्मादन्नं तदुच्यत इति। तस्माद्वा एतस्मादन्नरसमयादन्योऽन्तर आत्मा प्राणमयः। तेनैष पूर्णः। स वा एष पुरुषविधि एव। तस्य पुरुषविधतामन्वयं पुरुषविधः। तस्य प्राण एव शिरः। व्यानो दक्षिण*

*पक्षः । अपान उत्तरः पक्षः । आकाश आत्मा । पृथिवी पुच्छं प्रतिष्ठा ।*

**अर्थात् – अन्नबाट नै प्रजा उत्पन्न हुन्छन् । जो जति प्रजा पृथिवीको आश्रय पाएर बाँचेका छन् ती सबै अन्नबाट नै उत्पन्न हुन्छन् । अनि ती अन्नबाट नै जीवित रहन्छन् । अन्त्यमा ती अन्नमा नै लीन हुन्छन् । किनभने अन्न नै प्राणीहरूभन्दा जेठो हो । त्यसैकारण अन्नलाई सर्वौषधि भनिन्छ । जसले अन्न नै ब्रह्म हो भनेर उपासना गर्दछन्, तिनले निश्चयपूर्वक सबै अन्न प्राप्त गर्दछन् । अन्नलाई प्राणीहरूले खान्छन् र अन्नले पनि प्राणीहरूलाई खान्छ । त्यसैकारण त्यसलाई अन्न भनिन्छ ।**

**त्यसरी बनेको यस अन्नरसमय शरीरभित्र बस्ने अर्को शरीर हो प्राणमय । त्यसैबाट यो अन्नमय कोश परिपूर्ण छ । यो दोस्रो प्राणमय कोश पनि पुरुषाकार नै हो । यसको प्राण नै शिर हो । व्यान दक्षिण पक्ष हो । अपान उत्तर पक्ष हो । आकाश अर्थात् मध्यभाग आत्मा हो । पृथिवी पुच्छ अर्थात् प्रतिष्ठा हो ।**

**यसरी उपर्युक्त श्रुतिले अन्नमय कोश पछि प्राणमय कोशको वर्णन गरेको छ । यसबाट प्राणी केवल परिच्छिन्नरूप अन्नमय कोशले मात्रै आत्मवान् नहुने रहेछ भन्ने कुरा थाहा हुन्छ । प्राणी प्राणमय कोशले नै आत्मवान् हुन्छ भन्ने कुरा यसबाट थाहा हुन्छ ।**

**अब यसपछि मनोमय कोशको महिमा वर्णन गर्नुका साथै विज्ञानमय कोशको पनि श्रुतिले वर्णन गरेकोछ । यसको वर्णन तैत्तिरीय उपनिषद्को आनन्दवल्लीको चतुर्थ अनुवाकले यसरी गरेकोछ । जस्तै –**

*यतो वाचो निवर्तन्ते । अप्राप्य मनसा सह । आनन्दं ब्रह्मणो विद्वान् । न बिभेति कदाचनेति । तस्यैष एव शारीर आत्मा यः पूर्वस्य । तस्माद्वा एतस्मान्मनोमयादन्योऽन्तर आत्मा विज्ञानमयस्तेनैष पूर्णः । स वा एव पुरुषविध एव । तस्य पुरुषविधतामन्वयं पुरुषविधः । तस्य श्रद्धैव शिरः । ऋतं दक्षिणः पक्षः । सत्यमुत्तरः पक्षः । योग आत्मा । महः पुच्छं प्रतिष्ठा ॥*

अर्थात् – जहाँबाट मनसहित वाणी उसलाई भेट्न नसकेर फर्केर आउँछ । त्यस आनन्दब्रह्मलाई जान्नेभएको पुरुष कहिल्यै पनि डराउँदैन । यो मनोमय शरीर नै पूर्ववर्ती प्राणमय कोशको आत्मा हो । यस मनोमयको आत्मा विज्ञानमय हो । यसैबाट यो पूर्ण हुन्छ । यो विज्ञानमय पनि पुरुषाकार हो । त्यसको श्रद्धा नै शिर हो । ऋत दक्षिण पक्ष हो । सत्य उत्तर पक्ष हो । योग मध्यभाग आत्मा हो । महत्तत्त्व पुच्छ अर्थात् प्रतिष्ठा हो ।

यहाँ मनोमय कोशलाई वेदरूप भनिएको छ । वेदका अर्थका विषयमा जुन निश्चयात्मिका बुद्धि हो, त्यसैलाई विज्ञान भनिन्छ । त्यो अन्तःकरणको अध्यवसायरूप धर्म हो । निश्चयात्मिका बुद्धिसम्पन्न पुरुषमा सबभन्दा पहिले श्रद्धा उत्पन्न हुन्छ । यहाँ ऋत भन्नाले शास्त्र र आफ्नू कर्तव्य अनुसार बुद्धिमा सम्यक् प्रकारले निश्चित अर्थ हो । सत्य भनेको वचन र शरीरले सम्पादन गरिने कर्म हो । योग भनेको युक्ति अर्थात् समाधान हो, यसलाई आत्माजस्तो आत्मा भनेको हो ।

पञ्चम अनुवाकमा विज्ञानको महिमा र आनन्दमय कोशको वर्णन गरिएको छ । जस्तै – *'विज्ञानं यज्ञं तनुते । कर्माणि तनुतेऽपि च । विज्ञानं देवाः सर्वे । ब्रह्म ज्येष्ठमुपासते । विज्ञानं ब्रह्म चेद्वेद ।*

*तस्माच्चेन्न प्रमाद्यति । शरीरे पाप्मनो हित्वा । सर्वान्कामान्समश्नुत इति । तस्यैष एव शारीर आत्मा यः पूर्वस्य । तस्माद्वा एतस्माद् विज्ञानमयादन्योऽन्तर आत्मानन्दमयः । तेनैष पूर्णः । स वा एष पुरुषविध एव । तस्य पुरुषविधतामन्वयं पुरुषविधः । तस्य प्रियमेव शिरः । मोदो दक्षिणः पक्षः । प्रमोद उत्तरः पक्षः । आनन्द आत्मा । ब्रह्म पुच्छं प्रतिष्ठा ॥'*

अर्थात् – विज्ञान अर्थात् विज्ञानवान् पुरुषले यज्ञको विस्तार गर्दछ । उसैले नै कर्महरूको पनि विस्तार गर्दछ । सम्पूर्ण देवताहरू ज्येष्ठ अर्थात् विज्ञान ब्रह्मको उपासना गर्दछन् । यदि साधक विज्ञान ब्रह्मलाई जान्दछ र प्रमाद गर्दैन भने उसले आफ्ना शरीरका सारा पापहरू नाश गर्दछ र समस्त कामनाहरू पूर्ण गर्दछ । यो विज्ञानमय नै पूर्ववर्ती मनोमय शरीरको आत्मा हो । अर्को यसको अन्तर्वर्ती आत्मा आनन्दमय हो । त्यसै आनन्दमयबाट नै यो पूर्ण छ । यो आनन्दमय पनि विज्ञानमय जस्तै पुरुषाकार नै हो । यसको प्रिय नै शिर हो । मोद दक्षिण पक्ष हो । प्रमोद उत्रर पक्ष हो । आनन्द आत्मा हो । ब्रह्म पुच्छ प्रतिष्ठा हो ।

ब्रह्मानन्दवल्लीका अनुवाकहरूमा ब्रह्मप्राप्तिका लागि नै श्रुतिले यसरी आनन्दमय कोशसम्मका पञ्चकोशहरूको यहाँ उल्लेख गरेको हो । ब्रह्म सत्य, ज्ञान र अनन्तरूप हो । जसलाई प्राप्त गर्नु नै जीवको अभीष्ट हो । आनन्दमय कोश सबैभन्दा भित्र छ । यसैबाट नै सबै प्राणीहरू आत्मवान् हुन्छन् । त्यो ब्रह्म नै यस आनन्दमय कोशको पुच्छ अर्थात् प्रतिष्ठा हो । अविद्याकल्पित सम्पूर्ण द्वैतको निषेधावधिभूत त्यो अद्वैत ब्रह्म नै आनन्दमय कोशको प्रतिष्ठा हो । किनभने आनन्दमयको पर्यवसान पनि एकत्वमा नै हुन्छ । अद्वैत ब्रह्म

त्यस आनन्दको प्रतिष्ठा अर्थात् पुच्छर हो ।

षष्ठ अनुवाकमा ब्रह्मलाई सत्‌रूप र असत्‌रूपमा जान्नेहरूको भेद, ब्रह्मज्ञ र अब्रह्मज्ञको ब्रह्मप्राप्ति विषयमा शङ्का र सम्पूर्ण प्रपञ्चका रूपमा ब्रह्म नै अवस्थित रहने कुराको निरूपण पनि गरिएको छ ।

यदि कुनै व्यक्तिले ब्रह्मलाई असत् भनेर जान्दछ भने त्यो स्वयं पनि असत् हुन्छ । यदि कुनै व्यक्तिले ब्रह्मलाई सत् भनेर जान्दछ भने ब्रह्मवेत्ताहरू त्यसलाई सत् सम्झन्छन् । पहिलो पाचौँ अनुवाकमा भनिएको विज्ञानमयको आत्मा आनन्द हो । यो उपदेश आचार्यबाट सुनेपछि शिष्यले कुनै विद्वान्‌को मृत्यु भएपछि उसले परमात्मालाई प्राप्त गर्छ गर्दैन ? भनेर सोधेपछि आचार्यले उत्तरस्वरूप भनेका थिए । जस्तै – *'सोऽकामयत । बहुस्यां प्रजायेयेति । स तपोऽतप्यत । स तपस्तप्त्वा इदं सर्वमसृजत यदिदं किञ्च । तत्सृष्ट्वा तदेवानुप्राविशत् ॥'* अर्थात् – त्यस परमात्माले म धेरै होऊँ अर्थात् म उत्पन्न होऊँ भनेर कामना गऱ्यो । यसपछि उसले तपस्या गऱ्यो । उसले तप गरेर नै यो सम्पूर्ण रचना गऱ्यो । यसको रचना गरेर ऊ आफैँ यसैमा अनुप्रविष्ट भयो । यसमा अनुप्रवेश गरेर सत्यस्वरूप परमात्मा मूर्त, अमूर्त, भनिने, नभनिने, आश्रय, अनाश्रय, चेतन, अचेतन, व्यावहारिक सत्य र असत्यरूप पनि भयो । यो जे पनि हो त्यसलाई ब्रह्मवेत्ताहरू सत्य भन्दछन् ।

जुन समयमा आत्मामा रहेको अव्यक्त नाम र रूपबाट व्यक्त हुन्छ, त्यसबेला ब्रह्म आफ्नू स्वरूपलाई नछोडीकनै बाहिर विभिन्न स्वरूपमा अभिव्यक्त हुन्छ । यसरी नाम र रूपको अभिव्यक्ति नै ब्रह्मले धेरै हुनु हो । यो बाहेक अरू कुनै पनि किसिमले निरवयव

ब्रह्मले धेरै वा थोरै हुनु सम्भव छैन ।

त्यो ब्रह्म सम्पूर्ण चराचरको कारणरूप हो । त्यो ब्रह्म बुद्धिरूप गुफामा द्रष्टा, श्रोता, मन्ता र विज्ञाताका रूपमा रहेको जस्तो देखिन्छ । यसैलाई उसको प्रवेश भनिएको हो । त्यसपछि नै ऊ मूर्त अमूर्त आदि सम्पूर्ण भयो ।

त्यसपछि सप्तम अनुवाक आउँछ । त्यसमा ब्रह्मको सुकृतता, आनन्दरूपता र ब्रह्मवेत्ताको अभयप्राप्तिको वर्णन पनि आउँछ । 'असद्वा इदमग्र आसीत् । ततो वै सदजायत'बाट शुरु भएको मन्त्र 'तत्त्वेव भयं विदुषो मन्वानस्य'मा गएर समाप्त हुन्छ । अर्थात् पहिले यो जगत् असत् अर्थात् अव्याकृत ब्रह्मरूप नै थियो । उसैबाट अर्थात् नामरूपात्मक व्यक्तको उत्पत्ति भयो । त्यस असत्ले स्वयं आफैँले आफैँलाई नामरूपात्मक जगत्का रूपमा बनायो । यसै कारण उसलाई सुकृत अर्थात् स्वयं निर्मित भनिन्छ । मन्त्रले भन्छ । जस्तै–

यद्वै तत्सुकृतं रसो वै सः । रसं ह्येवायं लब्ध्वानन्दी भवति ॥

अर्थात् – त्यो जुन प्रसिद्ध सुकृत हो, त्यो निश्चय नै रस हो । त्यस रसलाई पाएर नै पुरुष आनन्दी हुन्छ । यदि हृदयाकाशमा रहेको यो आनन्द अर्थात् आनन्दरूप आत्मा नभए कसले सास फेर्ने काम गर्दथ्यो ? जुन समयमा यो पुरुष अदृश्य, अशरीर, अनिर्वाच्य र निराधार ब्रह्ममा अभयस्थिति प्राप्त गर्दछ, त्यस समयमा यसले अभय प्राप्त गर्दछ । यदि यसले अलिकति पनि भेद गर्‍यो भने यो भयाक्रान्त हुन्छ । त्यो ब्रह्म भेददर्शी विद्वान्का लागि भयरूप हो ।

अष्टम अनुवाकमा ब्रह्मानन्दलाई निरतिशयत्वका रूपमा मीमांसा गरिएको छ । यसमा भनिएको छ । जस्तै – *'भीषास्माद्वातः पवते । भीषोदेति सूर्यः । भीषास्मादग्निश्चेन्द्रश्च । मृत्युर्धावति*

*पञ्चमः ॥'* यसरी प्रथम मन्त्रबाट शुरु भएर *'श्रोत्रियस्य चाकामहतस्य'* भन्ने चारौँ मन्त्रमा गएर समाप्त हुन्छ । यसमा आनन्दको मात्रा एक मानुषानन्दबाट शुरु गरेर ब्रह्मा र अकामहत श्रोत्रियको आनन्दसम्म आनन्दको तुलनात्मक वर्णन गरिएको छ । यसरी आनन्दलाई अन्त्यमा अद्वैतरूप स्वाभाविक परमानन्द भन्दै आनन्द र आनन्दीमा अभेद दर्शाइएको छ ।

यस ब्रह्मानन्दवल्लीको अष्टम अनुवाकको पाचौँ मन्त्रमा ब्रह्मात्मैक्यदृष्टिको वर्णन गर्दै यसको उपसंहार गरेको छ । निर्विकल्प ब्रह्मलाई जानेर मुमुक्षु कसैसँग पनि भयभीत हुँदैन उसले अभयस्थिति प्राप्त गर्दछ ।

यसपछि नवम अनुवाकमा भनिएको छ । जस्तै – *'यतो वाचो निवर्तन्ते अप्राप्य मनसा सह । आनन्दं ब्रह्मणो विद्वान् न बिभेति कुतश्चन । एतं ह वाव न तपति । किमहं साधु नाकरवम् । किमहं पापमकरवमिति । स य एवं विद्वानेते आत्मानं स्पृणुते । उभे ह्येवैष एते आत्मानं स्पृणुते । य एवं वेद ॥'*

अर्थात् – जहाँबाट मनसहित वाणी त्यस ब्रह्मलाई प्राप्त गर्न नसकेर फर्केर आउँछ, त्यस्तो आनन्द ब्रह्मलाई जान्ने विद्वान् कसैसँग पनि भयभीत हुँदैन । त्यस्ता ब्रह्मज्ञानीलाई पाप र पुण्यले छुन सक्तैनन् । तिनलाई परमात्मभावले देख्ने हुँदा नै उसलाई पाप र पुण्यले दुःख दिन सक्तैनन् । अद्वैत र आत्मभावले हेरेपछि ती निर्वीर्य र सन्तापरहित हुन्छन् । अतः विद्वान्का लागि ती पाप र पुण्यहरू जन्मान्तरका आरम्भक हुँदैनन् । यो उपनिषद् ब्रह्मविद्या हो । यसमा अरू विद्याहरूका अपेक्षा परम रहस्य प्रदर्शित गरिएको छ । यस विद्यामा नै परम श्रेय निहित छ ।

तैत्तिरीय उपनिषद्को अन्तिम वल्ली भृगुवल्ली हो। यसमा छोटा छोटा दश ओटा अनुवाकहरू छन्। प्रथम अनुवाक्मा भृगुले आफ्ना पिता वरुणसमक्ष गएर ब्रह्मविद्याविषयक प्रश्न गरेका र पिता वरुणले भृगुलाई ब्रह्मोपदेश गरेको कुरा आउँछ। जस्तै –

*भृगुर्वै वारुणिर्वरुणं पितरमुपससार अधीहि भगवो ब्रह्मेति । तस्मा एतत्प्रोवाच । अन्नं प्राणं चक्षुः श्रोत्रं मनो वाचमिति । तं होवाच । यतो वा इमानि भूतानि जायन्ते । येन जातानि जीवन्ति । यत्प्रयन्त्यभिसंविसन्ति । तद्विजिज्ञासस्व । तद्ब्रह्मेति । स तपोऽतप्यत । स तपस्तप्त्वा ॥*

अर्थात् – वरुणका सुप्रसिद्ध छोरा भृगुले आफ्ना पितासँग गएर प्रश्न गरे – पिताजी ! मलाई ब्रह्मका बारेमा उपदेश गर्नुहोस् । त्यसपछि वरुणले भने – अन्न, नेत्र, श्रोत्र, मन र वाक् यी सबै ब्रह्मलाई प्राप्त गर्ने द्वार हुन् । तिनैबाट सबै भूतहरू उत्पन्न हुन्छन् । उत्पन्न भएपछि जसका आश्रयमा जीवित रहन्छन्। अन्त्यमा त्यसैमा लीन हुन्छन्। त्यसैलाई विशेषरूपमा जान्ने इच्छा गर, त्यही ब्रह्म हो । त्यसपछि भृगुले तप गरे ।

द्वितीय अनुवाकमा भृगुले अन्न ब्रह्म हो भनेर जाने। त्यसरी जानेपछि र त्यसमा ब्रह्मको लक्षण अनुवाक् एक अनुसार नै मिलेपछि भृगु फेरि बाबु वरुणका अगाडि गए। तपस्या गर्ने उपदेश पाएपछि फेरि तपस्या गरेर पिता समक्ष भृगु गए। त्यसरी क्रमैसँग तेस्रो अनुवाक्मा प्राणलाई चौथो अनुवाक्मा मनलाई, पाँचौँ अनुवाक्मा विज्ञानलाई र छैटौँ अनुवाक्मा आनन्दलाई ब्रह्मका रूपमा भृगुले निश्चयपूर्वक जानेका थिए ।

यसरी जसले ब्रह्मलाई जान्ने इच्छा गर्दछ त्यसले पूर्वोक्त

अन्नदेखि आनन्दसम्मलाई साधनका रूपमा जान्नु पर्दछ। उसले इन्द्रियहरू र अन्तःकरणको समाधानरूप परम तप पनि गर्नु पर्दछ। यस प्रकरणको तात्पर्य यही नै भएको कुरा आचार्य शङ्करले आफ्नू भाष्यमा लेख्नुभएको छ।

यसपछि सातौँ अनुवाकमा अन्नको निन्दा नगर्ने व्रत, शरीर र प्राणरूप अन्नब्रह्मको उपासकलाई प्राप्त हुने फलको वर्णन गरिएको छ। अष्टम अनुवाकमा अन्नको त्याग नगर्नुरूप व्रत, जल र ज्योतिरूप अन्नब्रह्मको उपासकलाई प्राप्त हुने फलको वर्णन छ। नवम अनुवाकमा अन्नसञ्चयरूप व्रत, पृथिवी र आकाशरूप अन्न ब्रह्मका उपासकले प्राप्त गर्ने फलको वर्णन आउँछ।

तैत्तिरीय उपनिषद्को भृगुवल्लीको अन्तिम दशम अनुवाकमा ६ ओटा मन्त्रहरू छन्। एक मन्त्रदेखि चारौँ मन्त्रसम्ममा घरमा आएको अतिथिलाई दिने आश्रय, अन्न दिने विधान र त्यसबाट प्राप्त हुने फलको पनि वर्णन गरिएको छ। यसलाई प्रकारान्तरले ब्रह्मप्राप्तिको साधन भनिएको छ। पाचौँ मन्त्रमा आदित्य र देहोपाधिक चेतनको एकता जान्ने उपासकले प्राप्त गर्ने फल बताएको छ। अन्तिम छैटौँ मन्त्रमा ब्रह्मवेत्ताले गाउने सामको वर्णन छ। त्यो यस प्रकार छ – *'अहमन्नमहमन्नमहमन्नम्। अहमन्नादो३ऽमन्नादो३ऽमन्नादः। अहंश्लोककृदहंश्लोककृदहंश्लोककृत्। अहमस्मि प्रथमजा ऋता३स्य। पूर्वं देवेभ्योऽमृतस्य ना३भायि। यो मा ददाति स इदेव मा३वाः। अहमन्नमन्नमदन्तमा३द्मि। अहं विश्वं भुवनमभ्यभवा३म्। सुवर्न ज्योतीः य एवं वेद। इत्युपनिषद्॥'*

अर्थात् – म अन्न अर्थात् भोग्य हुँ। म अन्नाद अर्थात् भोक्ता हुँ। म श्लोककृत् अर्थात् दुवैको कर्ता हुँ। म नै यस सत्यासत्यरूप

जगत्को पहिलो उत्पन्न भएको हिरण्यगर्भ हुँ । म नै देवताहरूभन्दा पूर्ववर्ती विराट् र अमृतत्वको केन्द्रस्वरूप हुँ। जसले अन्नदान गर्दछ, त्यसको भलो हुन्छ। जसले अन्नदान गर्दैन, त्यसको भलो हुँदैन। म सम्पूर्ण भुवनलाई पराभव गर्दछु। हाम्रो ज्योति सूर्यको ज्योतिजस्तै नित्य प्रकाशस्वरूप हो। यो उपनिषद् ब्रह्मविद्या हो। जसले यस्तो जान्दछ। त्यसले माथि भनिएका सबै फलहरू प्राप्त गर्दछ। अर्को शब्दमा भन्ने हो भने यो सबै परमात्माको ज्ञान हो। भृगुले जस्तै शान्त, दान्त, उपरत, तितिक्षु र समाहित भएर ठूलो तपस्या गरेर जसले यी कुराहरू जान्दछ अर्थात् ज्ञान प्राप्त गर्दछ, उसले उपर्युक्त मोक्षरूप फल प्राप्त गर्दछ। अस्तु। श्रीकृष्णार्पणमस्तु ।



# ऐतरेयोपनिषद्

**मनस्तापतमः शान्त्यै यस्य पादनखच्छटा ।**
**शरच्चन्द्रनिभा भाति तं वन्दे नीलचिन्मणिम् ॥**

ऋग्वेदीय ऐतरेय ब्राह्मणको आरण्यक अन्तर्गत ४, ५ र ६ मा यो ऐतरेयोपनिषद् पर्दछ। यस उपनिषद्मा ३ अध्यायहरू छन्। यसका पहिला अध्यायमा ३ खण्ड र दोस्रो र तेस्रो अध्यायमा एक एक खण्ड छन्। यो उपनिषद् ब्रह्मविद्याप्रधान उपनिषद् हो ।

यस उपनिषद्को शुरुमा नै आचार्य शङ्करले लामू सम्बन्धभाष्य लेख्नुभएको छ। सम्बन्धभाष्यमा यस उपनिषद्को ब्रह्मविषयक कुरा अत्यन्त विशदरूपमा उल्लेख गरिएको छ।

ऐतरेयोपनिषद्को पहिलो अध्यायको पहिलो खण्डको प्रथम मन्त्रबाट सृष्टिको वर्णन शुरु गरिएको छ। जस्तै – *'ॐ आत्मा वा इदमेक एवाग्र आसीत्। नान्यत्किञ्चन मिषत्। स ईक्षत लोकान्नु सृजा इति ॥'*

अर्थात् – पहिले यहाँ एकमात्र आत्मामात्रै थियो। आत्मा बाहेक अरू कुनै पनि व्यापारयुक्त वस्तु थिएन। जसरी

साङ्ख्यवादीहरूले आत्माका अतिरिक्त स्वतन्त्र प्रधानलाई मानेका छन्भने वैशेषिकहरू परमाणुलाई मान्दछन् । औपनिषद् सिद्धान्त अनुसार आत्माका अतिरिक्त अरू कुनै पनि वस्तु थिएन । त्यसबेला आत्माले संसारको रचना गरौँ भनेर शोच्यो । अर्थात् प्राणीहरूका कर्मफलका उपभोगका निमित्त आश्रयभूत अम्भ, मरीचि, मर र आप भन्ने लोकको सिर्जना गऱ्यो ।

*स इमाँल्लोकानसृजत । अम्भो मरीचीर्मरमापोदोऽम्भः परेण दिवं द्यौः प्रतिष्ठान्तरिक्षं मरीचयः पृथिवी मरो या अधस्तात्ता आपः ।*

अर्थात् – परमात्माले अम्भ, मरीचि, मर र आप भन्ने लोकहरूको सृजना गरे । जुन द्युलोकभन्दा पर छ र स्वर्ग नै जसको प्रतिष्ठा हो त्यसलाई अम्भ भनिन्छ । त्यसले जल अर्थात् मेघलाई धारणा गर्ने भएको हुँदा पनि अम्भ भनिएको हो । अन्तरिक्ष अर्थात् भुवर्लोक मरीचि हो । त्यो द्युलोकभन्दा तल रहेको अन्तरिक्ष नै मरीचि हो । अथवा किरणहरूसँग सम्बन्धित भएका कारण पनि त्यसलाई मरीचि भनिएको हो । पृथिवी मरलोक हो । पृथिवीमा प्राणीहरू मर्ने भएकाले मरलोक भनिएको हो । पृथिवीदेखि तल रहेको लोकलाई आप भनिन्छ ।

त्यसपछि सम्पूर्ण प्राणीहरूका कर्मफलरूप उपादानका अधिष्ठानभूत चारैथरी लोकहरूको रचना गरेपछि परमात्माले पुरुषरूप लोकपालहरूको रचना गर्नु भयो । जस्तै – *'स ईक्षतेमे नु लोका लोकपालान्नु सृजा इति सोऽद्भ्य एव पुरुषं समुद्धृत्यामूर्च्छयत् ।'*

अर्थात् – यी लोकहरू तयार भए, अब मैले लोकपालहरूको सृष्टि गर्नु पर्दछ भन्ने विचार गरेर ती परमात्माले जलबाट नै

एउटा पुरुष निकालेर उसलाई सम्पूर्ण अङ्गप्रत्यङ्गहरूयुक्त बनाए ।

त्यसपछि ईश्वरले इन्द्रियगोलक, इन्द्रियहरू र इन्द्रियका अधिष्ठातृदेवताहरूको सृजना गरे । विराट् पुरुषको उद्देश्यले ईश्वरले सङ्कल्प गरे । सङ्कल्पद्वारा सिर्जित पिण्डमा अण्डाजस्तो मुख उत्पन्न भयो । मुखबाट वाक् इन्द्रिय र वाक् इन्द्रियबाट अग्नि उत्पन्न भए । त्यसपछि नासिकारन्ध्र प्रकट भयो । त्यसबाट प्राण र प्राणबाट वायु उत्पन्न भयो । त्यसपछि नेत्र, नेत्रबाट चक्षु इन्द्रिय र त्यसबाट आदित्य उत्पन्न भए । अनि कान, श्रोत्रेन्द्रिय र त्यसबाट दिशाहरू उत्पन्न भए । त्यसपछि त्वचा, त्यसबाट रौँ र त्यसबाट औषधि एवं वनस्पतिहरू उत्पन्न भए । त्यसैगरेर हृदय उत्पन्न भयो । हृदय अन्तःकरणको अधिष्ठान हो । मन अन्तःकरण हो । मनबाट चन्द्रमा उत्पन्न भए । त्यस पिण्डमा नाभि प्रकट भयो । नाभि सम्पूर्ण प्राणहरूको बन्धन हो । त्यसबाट अपान र अपानबाट मृत्युको अभिव्यक्ति भयो । अन्त्यमा शिश्न, त्यसबाट रेतस् र त्यसबाट आप उत्पन्न भयो । यो नै वीर्यको अधिष्ठाता जल हो । यसपछि प्रथम खण्ड समाप्त हुन्छ ।

ऐतरेयोपनिषद्को प्रथम अध्यायको द्वितीय खण्डको शुरुमा नै देवताहरूले याचना गरेको अन्न र आयतनको प्रसङ्ग आउँछ । सर्वप्रथम प्रथम मन्त्रमा यसरी सिर्जित इन्द्रियाभिमानी देवताहरू यस संसाररूपी समुद्रमा पतन भएको कुरा आउँछ । त्यस पूर्ववर्णित पिण्डलाई परमात्माले क्षुधा र पिपासाले युक्त गराएका थिए । ती इन्द्रियाभिमानी देवताहरूले उनीहरूलाई कुनै आश्रय स्थानको व्यवस्था गरिदिन परमात्मालाई अनुरोध गरे । जसबाट त्यस आश्रयमा बसेर अन्न अर्थात् कर्मफलको भोग गर्न ती इन्द्रियाभिमानी

देवताहरूले सकुन् ।

त्यसपछि ती देवताहरूका लागि परमात्माले गाईको शरीर सृजना गरे, तर देवताहरूले त्यसलाई अस्वीकार गरे । अनि परमात्माले तिनीहरूका लागि घोडा सृजना गरे, त्यसलाई पनि उनीहरूले अस्वीकार गरे । त्यसपछि परमात्माले ती देवताहरूका लागि मान्छेको शरीर सृजना गरे । त्यो देखेपछि ती देवताहरू त्यसमा प्रवेश गरे । त्यसरी प्रवेश गर्दा क्रमशः मुखदेखि लिएर शिश्नसम्म विभिन्न देवताहरू आफ्आफ्नू योग्यता र क्षमता अनुसार तत्तत्स्थानमा पसेका थिए । त्यसपछि परमात्माले तिनीहरूको क्षुधा र पिपासाको विभाजन गरेर तदनुसार हवि र बलिको व्यवस्था पनि गरिदिएका थिए । यहाँ ऐतरेयोपनिषद्को पहिलो अध्यायको दोस्रो खण्ड पनि समाप्त हुन्छ ।

ऐतरेयोपनिषद्को पहिलो अध्यायको तेस्रो खण्डको पहिलो मन्त्रमा लोकपालहरूका लागि परमात्माले अन्नको रचना गर्नेतर्फ विचार गरेको कुराको प्रसङ्ग आउँछ । जस्तै – *'स ईक्षतेमे नु लोकाश्च लोकपालाश्चान्नमेभ्यः सृजइति ।'* अर्थात् – यी लोकहरू र लोकपालहरूको रचना त मैले गरेँ, अब यिनीहरूका लागि अन्नको पनि सृजना गरूँ भनेर परमात्माले विचार गरे ।

त्यसपछि परमात्माले तपस्या गरेर अन्नको सृजना गरे । तर ती वाणीदेखि लिएर शिश्नसम्मका अन्नहरू भाग्न खोजे, तर अन्त्यमा ती सबै यथास्थानमा अपान वायुद्वारा ग्रहण गरिए । त्यसरी अन्नहरूको रचना गरेर परमात्माले आफैं नै त्यस शरीरमा प्रवेश गर्ने विचार गरे । धेरै शोचविचार गरेपछि परमात्मा मूर्द्धाद्वारबाट शरीरमा प्रवेश गरेको प्रसङ्ग आउँछ । जो यसप्रकार

छ । जस्तै –

स एतमेव सीमानं विदार्यैतया द्वारा प्रापद्यत । सैषा विदृतिर्नाम द्वास्तदेतन्नान्दनम् । तस्य त्रय आवसथास्त्रयः स्वप्नाः, अयमावसथोऽयमावसथोऽयमावसथ इति ॥

अर्थात् – ती परमात्मा यस सीमा अर्थात् मूर्द्धालाई फोरेर त्यसैबाट शरीरमा प्रवेश गरे । त्यसैकारण यस द्वारलाई विदृति भनिन्छ । यो नान्दन अर्थात् आनन्दप्रद हो । यो आवसथ अर्थात् नेत्र हो, यो आवसथ अर्थात् कण्ठ हो र यो आवसथ अर्थात् हृदय हो । यसरी यिनका तीन आवसथ अर्थात् वासस्थानहरू र तीन स्वप्नहरू अर्थात् सपनाजस्तै असत् वस्तुहरू देखिन्छन् ।

यस उपनिषद्ले जीवात्माको मोह देखाउँदै त्यसबाट त्यसको निवृत्तिको कुरा पनि उल्लेख गरेको छ । जस्तै –

स जातो भूतान्यभिव्यैख्यत् किमिहान्यं वावदिषदिति । स एतमेव पुरुषं ब्रह्म ततममपश्यत् । इदमदर्शमिति ॥

अर्थात् – यसरी परमात्मा मनुष्यका शरीरमा जीवरूपबाट उत्पन्न भएपछि भूतहरूलाई तादात्म्यबाट ग्रहण गरे । जीवलाई गुरुका कृपाबाट ज्ञान भएपछि म अर्थात् आत्मादेखि बाहेक अरू केही छैन भनेर जीवले भनेको थियो । साथै मैले आफ्नू स्वरूपलाई ब्रह्मरूपबाट साक्षात्कार गरेँ भनेर उसले यस पुरुषलाई नै पूर्णतम ब्रह्मरूपबाट देखेको थियो ।

यसरी जीवरूपले सबैका भित्र बस्ने भएको ब्रह्मलाई इन्द्रका रूपमा कसरी ग्रहण गरियो भन्ने सम्बन्धमा प्रथम अध्यायको अन्तिम मन्त्र भन्दछ । जस्तै –

तस्मादिदन्द्रो नामेदन्द्रो ह वै नाम तमिदन्द्रं सन्तमिन्द्र इत्याचक्षते

परोक्षेण परोक्षप्रिया इव हि देवाः परोक्षप्रिया इव हि देवाः ॥

अर्थात् – यसकारण यस परमात्माको नाम इदन्द्र भयो। परमात्मा इदन्द्रको नामबाट प्रसिद्ध छ। इदन्द्र भएर नै त्यस परमात्मालाई परोक्षरूपबाट इन्द्र भनेर भनिन्छ। किनभने देवताहरू परोक्षप्रिय नै हुन्छन्। यसपछि यो पहिलो अध्यायको तेस्रो खण्ड समाप्त हुन्छ।

उपर्युक्त अनुसार जगत्को उत्पत्ति, स्थिति र प्रलयका कारक असंसारी सर्वशक्तिमान् सर्वज्ञले तटस्थरूपमा रहेर यस सम्पूर्ण जगत्को आकाशादि क्रमले रचना गरेर प्राणादियुक्त शरीरमा परमात्माले स्वयं प्रवेश गरेका थिए। तदनुसार पुरुषले पहिलो जन्म लिएको प्रसङ्ग श्रुतिले यसरी उल्लेख गरेको छ। जस्तै –

पुरुष ह वा अयमादितो गर्भो भवति। यदेतद्रेतः तदेतत्सर्वेभ्यो–ऽङ्गेभ्यस्तेजः सम्भूत मात्मन्येवात्मानं बिभर्ति। तद्यदा स्त्रियां सिञ्चत्यथैनज्जनयति तदस्य प्रथम जन्म ॥

अर्थात् – सबभन्दा पहिले यी परमात्मा पुरुषका शरीमा गर्भरूपले स्वयं आफू नै प्रवेश गरे। यो जुन प्रसिद्ध रेतस् अर्थात् वीर्य हो, त्यो पुरुषका सम्पूर्ण अङ्गहरूबाट उत्पन्न हुने तेज वा सार हो। पुरुषले यस आत्मभूत तेजलाई आफ्ना शरीरमा नै धारणा गरेर राख्तछ। फेरि जुन समयमा यस वीर्यलाई स्त्रीमा सिञ्चन गर्दछ, त्यसपछि त्यो गर्भरूपमा परिणत हुन्छ। यो नै परमात्माको पहिलो जन्म हो।

पुरुषको दोस्रो जन्मको वयान गर्दै उपनिषद्को अर्को मन्त्रले भन्दछ। जस्तै –

सा भावयित्री भावयितव्या भवति। तं स्त्री गर्भं बिभर्ति।

सोऽग्र एव कुमारं जन्मनोऽग्रेऽधिभावयत्यात्मानमेव तद्भावयत्येषां लोकानां सन्तत्या। एवं सन्तता हीमे लोकास्तदस्य द्वितीयं जन्म ॥

अर्थात् – त्यो गर्भभूत पतिको आत्मालाई पालना गर्ने भएकी गर्भवती स्त्री उनका पतिद्वारा पालनीया हुन्छिन्। गर्भिणी स्त्री त्यस गर्भलाई पोषण गर्दछिन्।

त्यसरी गर्भिणी स्त्री त्यस गर्भलाई पोषण गर्दछिन् र त्यस गर्भरूपबाट उत्पन्न भएको त्यस कुमारको प्रसव भएपछि पिता जातकर्मादि संस्कारद्वारा संस्कारित गर्दछन्। त्यसरी पिता आफ्नू नै संस्कार गर्दछन्। किनभने यसैप्रकार यस संसारको वृद्धि हुन्छ। यसैलाई पुरुषको दोस्रो जन्म भनिन्छ।

पुरुषको तेस्रो जन्मको वर्णन गर्दै उपनिषद् भन्दछ। जस्तै –

सोऽस्यायमात्मा पुण्येभ्यः प्रतिधीयते। अथास्यायमितर आत्मा कृतकृत्यो वयोगतः प्रैति। स इतः प्रयन्नेव पुनर्जायते तदस्य पुनर्जायते तदस्य तृतीयं जन्म ॥

अर्थात् – यो पुरुषरूप आत्मा पुण्यकर्मका अनुष्ठानका लागि बाबुको ठाउँमा प्रतिनिधिरूपले स्थापित गरिन्छ। त्यसपछि यसको पितृरूप आत्मा वृद्धावस्थामा पुगेर कृतकृत्य भएर यहाँबाट प्रस्थान गर्दछ। यहाँबाट प्रस्थान गरेपछि त्यो पुरुष आफ्ना कर्मफलको भोग गर्नका लागि फेरि जन्म लिन्छ। यो नै त्यस पुरुषको तेस्रो जन्म हो।

पुरुषको तीन जन्मसम्मको वर्णान गरेपछि यस सन्दर्भमा वामदेवको उक्ति छ, त्यसको पनि वर्णन श्रुतिले गरेको छ। उपर्युक्त अनुसार जीवात्मा संसरण गर्दै जब अथाह संसार समुद्रमा अनन्तकालसम्म घुमिरहन्छ। जुन समयमा श्रुति प्रतिपादित

आत्मालाई अर्थात् ब्रह्मलाई जसले जान्दछ, त्यसै समयमा ऊ संसारको बन्धनबाट मुक्त भएर कृतकृत्य भइहाल्दछ ।

ऋषि वामदेवले आमाको गर्भमा रहँदै गरेको अनुभव र प्राप्त गरेको ज्ञानलाई सङ्क्षिप्तरूपमा ऐतरेयोपनिषद्को दोस्रो अध्यायको पहिलो खण्डको पाचौँ मन्त्रले यसरी वर्णन गरेको छ । जस्तै –

तदुक्तमृषिणा गर्भे नु सन्नन्वेषामवेदमहं देवानां जनिमानि विश्वा । शतं मा पुर आयसीरपक्षन्नधः श्येनो जवसा निरदीयमिति । गर्भ एवैतच्छयानो वामदेव एवमुवाच ॥

अर्थात् – यस मन्त्रमा ऋषि वामदेवको अनुभवलाई यसरी व्यक्त गरिएको छ । जस्तै – मैले आमाका गर्भमा रहँदैखेरि नै यी देवताहरूको सम्पूर्ण जन्मको कुरा जानेको थिएँ । अर्थात् मैले ज्ञान प्राप्त गरेको थिएँ । तत्त्वज्ञान हुनुभन्दा पहिले मलाई लोहमय शरीरहरूले अर्थात् विभिन्न योनिका शरीरहरूले अवरुद्ध गरेर राखेका थिए । अहिले तत्त्वज्ञानका प्रभावले म बाजपक्षीका समान पिँजडाको बन्धन अर्थात् सुदृढ शरीरको बन्धनलाई फोरेर बाहिर निस्किएर आएको हुँ भनेर वामदेव ऋषिले आमाका गर्भमा सुतेको बेलामा नै भनेका थिए ।

यसरी वामदेवले गर्भमा भनेको कुराको वर्णन गरेपछि श्रुतिले वामदेवको गतिको वर्णन गरेको छ । जस्तै –

स एवं विद्वानस्माच्छरीरभेदादूर्ध्व उत्क्रम्यामुष्मिन्त्स्वर्गे लोके सर्वान्कामानाप्त्वामृतः समभवत् ॥

अर्थात् – ती वामदेव ऋषिले यसप्रकारको ज्ञान पाएपछि यस शरीरको नाश भएपछि उत्क्रमण गरेर इन्द्रियहरूको विषय नभएको अजर, अमर, अमृत, अभय, सर्वज्ञ, अपूर्व, अनन्य, अनन्तर,

अवाह्य र एकमात्र प्रज्ञानामृतस्वरूप स्वर्गलोकमा दीपक जस्तै शान्त भए। यसपछि दोस्रो अध्यायको प्रथम खण्ड समाप्त हुन्छ।

ऐतरेयोपनिषद्को तेस्रो अध्यायको प्रथम खण्डमा आत्मासम्बन्धी प्रश्न प्रथम मन्त्रमा नै उठाएका छन्। जस्तै –

कोऽयमात्मेति वयमुपास्महे। कतरः स आत्मा, येन वा पश्यति येन वा शृणोति येन वा गन्धानाजिघ्रति येन वा वाचं व्याकरोति येन वा स्वादु चास्वादु च विजानाति॥

अर्थात् – हामीहरू जसको उपासना गर्दछौँ, त्यो आत्मा कुन हो ? जसबाट प्राणी देख्तछ, सुन्दछ, सुँघ्दछ र बोल्दछ। जसले स्वादु र अस्वादुको ज्ञान गर्दछ, त्यस्तो आत्मा कुन हो ?

त्यसरी आत्माका बारेमा जिज्ञासा व्यक्त गर्दै फेरि विभिन्न करणहरूका बारेमा श्रुति उल्लेख गर्दछ। जस्तै –

यदेतद्धृदयं मनश्चैतत्। संज्ञानमाज्ञानं विज्ञानं प्रज्ञानं मेधा दृष्टिर्धृतिर्मतिर्मनीषा जूतिः स्मृतिः सङ्कल्पः क्रतुरसुः कामो वश इति सर्वाण्येवैतानि प्रज्ञातस्य नामधेयानि भवन्ति॥

अर्थात् – यो हृदय नै मन पनि हो। संज्ञान अर्थात् चेतना, अज्ञान अर्थात् प्रभुता, विज्ञान, प्रज्ञान, मेधा, दृष्टि, धृति, मति, मनीषा, जूति अर्थात् रोगादिजनित दुःख, स्मृति, सङ्कल्प, क्रतु, असु अर्थात् प्राण, काम र वश अर्थात् स्त्रीसंसर्गादिको अभिलाषासमेत यी सबै नै प्रज्ञान ब्रह्मका नै नाम हुन्।

प्रज्ञानरूप आत्माको सर्वरूपता देखाउँदै तेस्रो अध्यायको तेस्रो मन्त्रले भन्दछ। जस्तै –

एष ब्रह्मैष इन्द्र एष प्रजापतिरेते सर्वे देवा इमानि च पञ्च महाभूतानि पृथिवी वायुराकाश आपो ज्योतींषीत्येतानीमानि च

क्षुद्रमिश्राणीव बीजानीतराणि चेतराणि चाण्डजानि च जारुजानि च स्वेदजानि चोद्भिजानी चाश्वा गावः पुरुषा हस्तिनो यत्किंचेदं प्राणि जङ्गमं च पतत्रि च यच्च स्थावरं सर्वं तत्प्रज्ञानेत्रम् । प्रज्ञाने प्रतिष्ठितं प्रज्ञानेत्रो लोकः प्रज्ञा प्रतिष्ठा प्रज्ञानं ब्रह्म ।।

शब्दार्थ :– एष – त्यो, ब्रह्म – ब्रह्म हो । एष – त्यो, इन्द्रः – इन्द्र हो । एष – त्यो, प्रजापति – प्रजापति हो । एते – यी, सर्वे – सबै नै, देवाः – देवताहरू, च – र, इमानि – यी, पृथिवी – पृथ्वी, वायुः – वायु, आकाशः – आकाश, आपः – जल र ज्योतींषि – तेज, इति – यसप्रकार, एतानि – यी, पञ्च – पाँच, महाभूतानि – महाभूतहरू, च – र, इमानि – यी, क्षुद्रमिश्राणि इव – ससाना मिलेका, बीजानि – बीजरूप सम्पूर्ण प्राणीहरू, च – र, इतराणि – यीदेखि बाहेक, इतराणि च – अरू पनि, अण्डजानि – फुलबाट जन्मिने, च – र, जारुजानि – सालनालबाट जन्मिने, च – र, स्वेदजानि – पसीनाबाट उत्पन्न हुने, च – र, उद्भिजानि – पृथ्वी फोरेर उत्पन्न हुने, च – त्यस्तै, अश्वाः – घोडाहरू, पुरुषाः – मान्छेहरूसमेत सबै मिलेर बनेको, यत्किञ्च – अलिकति केही, इदम् – यो जगत्, यत् च – जुन केही, पतत्रि – प्वाँख भएका, च– र, जङ्गमम् – हिँडडुल गर्ने, च– र, स्थावरम् – हलचल नगर्ने, प्राणि – प्राणीहरू, तत् – ती, सर्वम्– सबै, प्रज्ञानेत्रम् – प्रज्ञानस्वरूप परमात्माबाट शक्ति पाएर आआफ्नो काम गर्न समर्थ हुन्छन् र प्रज्ञाने – त्यस प्रज्ञानस्वरूप परमात्मा नै प्रतिष्ठितम् – स्थित हुन्छन् । लोकः – यो सम्पूर्ण ब्रह्माण्ड, प्रज्ञानेत्रः– त्यस परमात्माबाटै शक्ति प्राप्त गर्दछ । प्रज्ञा – प्रज्ञानस्वरूप परमात्मा नै प्रतिष्ठाः – यी सबैका आधार

हुन् । प्रज्ञानम् – यो प्रज्ञान नै, ब्रह्म– ब्रह्म हो ।

त्यो प्रज्ञानरूप आत्मा नै ब्रह्म हो । त्यो नै प्रजापति हो । त्यो नै अग्नि आदि सम्पूर्ण देवता, पृथिवी, वायु, आकाश, जल र तेज आदि पाँच महाभूतहरू पनि हो । यो नै ससाना जीवहरू सहित तिनीहरूको कारण पनि हो । त्यस्तै अण्डज, जरायुज, स्वेदज, उद्भिज्ज, अश्व, गाई, मनुष्य, हात्ती पनि ब्रह्म नै हो । फेरि चरा, वृक्ष, पर्वत आदि सबै नै यही निरुपाधिक ब्रह्म नै हुन् । यी सबैको लय स्थान नै प्रज्ञान ब्रह्म हो । अतः प्रज्ञान नै ब्रह्म हो । यस मन्त्रमा ऋग्वेद अन्तर्गत पर्ने ब्रह्मवाचक प्रज्ञानम् ब्रह्म भन्ने महावाक्य आएको छ । यसको ब्रह्मज्ञानका दृष्टिकोणले अत्यन्त ठूलो महत्त्व छ ।

अन्त्यमा आत्मैक्यवेत्ताको अमृतत्व प्राप्तिको वर्णन गर्दै उपनिषद् भन्दछ । जस्तै –

स एतेन प्रज्ञेनात्मनास्माल्लोका–दुत्क्रम्यामुष्मिन्स्वर्गे लोके सर्वान् कामानाप्त्वामृतः समभवत्समभवत् ॥

अर्थात् – ती वामदेव ऋषि यसै चैतन्यस्वरूपबाट नै यस लोकबाट उत्क्रमण गरेर इन्द्रियातीत स्वर्ग अर्थात् ब्रह्मलोकमा सम्पूर्ण कामनाहरू प्राप्त गर्दै अमर भए । अस्तु । श्रीकृष्णार्पणमस्तु ।



# श्वेताश्वतरोपनिषद्

**नित्यानन्दं निराधारं निखिलाधारमव्ययम् ।**
**निगमाद्यगतं नित्यं नीलकण्ठं नमाम्यहम् ॥**

श्वेताश्वतरोपनिषद् असङ्ख्य उपनिषद्हरूमध्येमा महत्त्वपूर्ण उपनिषद् हो । अत्यन्त महत्त्वपूर्ण उपनिषद्हरूमा आचार्य शङ्करले आफ्नू भाष्य लेख्नुभएको छ । यी सबै उपनिषद्हरूलाई ब्रह्मज्ञानका साधनहरूमध्येमा गणना गरिन्छ। यो उपनिषद् कृष्ण यजुर्वेद अन्तर्गत पर्दछ। यस उपनिषद्का द्रष्टा र वक्ता श्वेताश्वतर ऋषि हुन् । यो उपनिषद् विशेषरूपमा संन्यासीलाई विद्याको उपदेश गर्नका लागि नै हो भन्ने मान्यता भएको देखिन्छ। यस कुराको उल्लेख यसै उपनिषद्को छैटौँ अध्यायको एक्काइसौँ मन्त्रमा उल्लेख भएको छ । यसको वर्णनशैली अत्यन्त सुसम्बद्ध, विलक्षण, सरल, मार्मिक र हृदयग्राहीसमेत छ। यसलाई जिज्ञासु मुमुक्षुले सजिलै आत्मसात् गर्न सक्तछ ।

यस उपनिषद्मा ६ अध्यायहरू छन् र ११३ मन्त्रहरू छन् । यसको पहिलो मन्त्र जगद्गुरु श्रीशङ्कराचार्यको लामू सम्बन्ध भाष्यपछि शुरु हुन्छ। यस मन्त्रको भाष्य लेख्ने क्रममा सर्वप्रथम *'ब्रह्मवादिनो वदन्ति'* बाट सङ्क्षिप्त टीका आरम्भ गर्नुभएको

छ । पहिलो मन्त्र यसप्रकार छ । जस्तै –

**हरिः ॐ ब्रह्मवादिनो वदन्ति –**
**किं कारणं ब्रह्म कुतःस्म जाता जीवाम केन क्व च संप्रतिष्ठाः ।**
**अधिष्ठिताः केन सुखेतरेषु वर्तामहे ब्रह्मविदो व्यवस्थाम् ॥**

अर्थात् विद्वान्हरू भन्दछन् – जगत्को कारणभूत ब्रह्म कस्तो छ ? हामीहरू कसबाट उत्पन्न भयौं ? हामीहरू कसबाट जीवित रहन्छौँ ? हामीहरू केमा र कहाँ स्थित छौँ ? हे ब्रह्म जान्नेहरू हो ? हामीहरू कसबाट सुखदुःखमा प्रेरित भएर यस संसारमा घुमिरहन्छौँ ?

यसरी किम् इत्यादि प्रश्नहरू जगत्को उत्पत्ति, स्थिति, प्रलय र नियमको हेतु अर्थात् कारण के हो ? भनेर यस उपनिषद्को प्रथम मन्त्रमा आएपछि अब श्रुति ब्रह्मकारणवादका विरोधी कालादि विचारहरूको विषमरूपले देखाउँदै भन्दछ । जस्तै –

**कालः स्वभावो नियतिर्यदृच्छा भूतानि योनिः पुरुष इति चिन्त्या ।**
**संयोग एषां न त्वात्मभावादात्माप्यनीशः सुखदुःखहेतोः ॥**

अर्थात् काल, स्वभाव, नियति, यदृच्छा, भूत र पुरुषसमेत कारण हुन् होइनन् ? यस विषयमा विचार गर्नु पर्दछ । यी सबैको संयोग अर्थात् समूह पनि आत्माको अधीनमा रहेको हुँदा यो कारण हुन सक्तैन । जीवात्मा पनि सुखदुःख अर्थात् पुण्यापुण्यका अधीनमा भएको हुँदा यो पनि कारण हुन सक्तैन ।

यसरी अरू सबै कारणसमूहको निराकरण गरिसकेपछि ध्यानयोगद्वारा ऋषिहरूले साक्षात्कार गरेको ब्रह्मशक्तिका बारेमा

श्रुतिले वर्णन गरेको छ । ऋषिहरूले ध्यानयोगको अनुवर्तन गरेर आफ्नै गुणहरूले आच्छादित परमात्माको शक्तिलाई साक्षात्कार गरेका थिए । जुन परमात्मा एक्लै नै कालदेखि लिएर आत्मासम्म समस्त कारणहरूको अधिष्ठान हो । यही नै कारण ब्रह्म हो । यसै कारण ब्रह्मलाई यस उपनिषद्मा चक्ररूपले वर्णन गरिएको छ । जस्तै –

**तमेकनेमिं त्रिवृतं षोडशान्तं शतार्धारं विंशतिप्रत्यराभिः ।**
**अष्टकैः षड्भिर्विश्वरूपैकपाशं त्रिमार्गभेदं द्विनिमित्तैकमोहम् ॥**

अर्थात् – त्यस कारण ब्रह्मलाई ऋषिहरूले एक नेमि, तीन वृत्त, सोह्र अन्त, पचास अरा, बीस प्रत्यरा, ६ अष्टक, विश्वरूप एउटा पाश, तीन मार्ग, पाप र पुण्य दुवैको निमित्तभूत एक मोहयुक्त भएको भनेका छन् ।

यसभन्दा पहिलेको मन्त्रमा उपनिषद्ले जुन कारणब्रह्मलाई चक्ररूपले वर्णन गरेको थियो, अब त्यसै ब्रह्मलाई उपनिषद् नदीरूपले वर्णन गर्दछ । जस्तै –

**पञ्चस्रोतोऽम्बुं पञ्चयोन्युग्रवक्त्रां पञ्चप्राणोर्मिं पञ्चबुद्ध्यादिमूलाम् ।**
**पञ्चावर्तां पञ्चदुःखौघवेगां पञ्चाशद्भेदां पञ्चपर्वामधीमः ॥**

अर्थात् पाँच स्रोतहरू अर्थात् चक्षु आदि पाँच ज्ञानेन्द्रियहरू यिनै नै स्रोतरूप जलयुक्त नदीहरू हुन् । पाँच उद्गमस्थानका कारणभूत पाँच योनि अर्थात् पञ्चमहाभूतहरू हुन् । ती उग्र र वक्र पनि छन् । जसमा पाँच प्राणहरू अर्थात् वाक्, पाणि, पादादि कर्मेन्द्रियहरू जसका पाँच तरङ्गहरू हुन् । पाँच प्रकारका ज्ञानेन्द्रियहरू जस्तै

चक्षु आदिबाट हुने पाँच ज्ञानको कारण भूत मन हो। त्यसैलाई आवर्त अर्थात् भुमरी पनि भनिन्छ। यी पाँच प्रकारका दुःखरूप भेल अर्थात् गर्भ दुःख, जन्मदुःख, जरादुःख, व्याधिदुःख र मरणदुःख हो। त्यसैगरेर अविद्या, अस्मिता, राग, द्वेष र अभिनिवेशसमेत पञ्चक्लेशहरू नै पाँच पर्व अर्थात् आँख्ला हुन्। यसरी तयार भएको पचास भेद भएको नदीरूप कार्यब्रह्मलाई हामी जान्दछौँ।

यसपछि जीवात्माको संसारबन्धन र मोक्षको कारणसमेतको सङ्क्षिप्त चर्चा उपनिषद्ले गरेको छ। जसले परमात्मालाई भेददृष्टिले जान्दछ, त्यसले यसै संसार चक्रमा घुमिरहनु पर्दछ र जसले अभेददृष्टिले देख्तछ, ऊ अमर बन्दछ अर्थात् अमृतत्वमा प्राप्त हुन्छ।

प्रपञ्चभन्दा पृथक्रूपले वर्णन गरिएको यो ब्रह्म नै सर्वोत्कृष्ट ब्रह्म हो। यसैको प्राप्तिबाट नै मुक्ति हुन्छ। यसैमा नै भोक्ता, भोग्य र नियन्तासमेत स्थित छन्। यो चाहिँ ब्रह्मको सुप्रतिष्ठा र अविनाशीपन हो। यसमा प्रवेश भएपछि ब्रह्मवेत्ताहरू ब्रह्ममा लीन हुन्छन्। त्यसपछि उनीहरू जन्ममरणबाट मुक्त हुन्छन्।

व्यावहारिक भेद र ज्ञानद्वारा हुने मोक्षको विवेचना गर्दै अगाडि उपनिषद् भन्दछ – परस्पर क्षरयुक्त र अक्षर भएर परमात्मा यस जगत्को सञ्चालन गर्दछन्। मायाधीन जीव भोक्ताभावको कारण संसारमा बाँधिन्छ, तर ब्रह्मज्ञान भएपछि सम्पूर्ण बन्धनबाट मुक्त हुन्छ।

त्यसपछि ईश्वर, जीव र प्रकृतिको विलक्षणताको उल्लेख गर्दै तिनको यथार्थ ज्ञानबाट जीवको मुक्ति हुने कुरा पनि उपनिषद्ले उद्घोष गरेको छ। जस्तै –

**ज्ञाज्ञौ द्वावजावीशनीशावजा ह्येका भोक्तृभोग्यार्थयुक्ता ।**
**अनन्तश्चात्मा विश्वरूपो ह्यकर्ता त्रयं यदा विन्दते ब्रह्ममेतत् ॥**

उपर्युक्त अनुसार ईश्वर र जीवको भेद देखाएर तिनको ज्ञानबाट मुक्ति हुने कुरा उपनिषद्ले देखाएको छ। त्यसपछि उपनिषद् प्रधान र ईश्वरको विलक्षणता देखाएर त्यसको ज्ञानबाट अमृतत्व प्राप्त हुने कुरा बताउँछ । विनाशशील प्रधान र अविनाशी जीवात्मालाई हर नाम गरेको एउटा देवताले नियमित गर्दछन् । तिनको चिन्तन गर्नाले, ध्यान गर्नाले र उनका तत्त्वको भावना गर्नाले अर्थात् अहं ब्रह्मास्मि भन्नाले प्रारब्धको समाप्ति भएपछि विश्वरूपा मायाको निवृत्ति भएर जीव ब्रह्म बन्दछ ।

यसपछि यस उपनिषद्ले ब्रह्मज्ञानीको ब्रह्मज्ञान र ब्रह्मध्यानीको ब्रह्मध्यानबाट हुने फलको भेदलाई देखाएको छ। जस्तै –

**ज्ञात्वा देवं सर्वपाशापहानिः क्षीणैः क्लेशैर्जन्म मृत्युप्रहाणिः ।**
**तस्याभिध्यानात्तृतीयां देहभेदे विश्वैश्वर्यं केवल आप्तकामः ॥**

अर्थात् परमात्माको ज्ञान भएपछि अविद्यादि सम्पूर्ण क्लेशहरू नाश हुन्छन् । क्लेशहरूको नाश भएपछि जन्ममृत्युको दुश्चक्रको निवृत्ति हुन्छ । त्यस ब्रह्मको ध्यान गर्नाले मृत्युपछि सर्वैश्वर्ययुक्त तृतीय अवस्था अर्थात् सविशेष ब्रह्मको प्राप्ति हुन्छ । त्यसबाट सम्पूर्ण ऐश्वर्यको अनुभव गरेर फेरि निर्विशेष पूर्णानन्दस्वरूप ब्रह्मलाई आत्मभावले जान्दछ । त्यसपछि केवल आत्मकामी हुन्छ र सम्पूर्ण पुरुषार्थलाई प्राप्त गर्दछ । क्रमिकरूपले मुमुक्षु अन्त्यमा सधैँका लागि यस संसारबाट मुक्त भएर जान्छ ।

ब्रह्मज्ञान भइसकेपछि मुमुक्षुले प्राप्त गर्नुपर्ने कुनै कुरा पनि अवशेष रहँदैन। किनभने ज्ञान भइसकेपछि परमपुरुषार्थको सोझै सिद्धि हुन्छ। यसमा कुनै शङ्का छैन। यही कुराको उल्लेख गर्दै उपनिषद् अगाडि भन्दछ। जस्तै –

**एतज्ज्ञेयं नित्यमेवात्मसंस्थं नातः परं वेदितव्यं हि किञ्चित्।**
**भोक्ता भोग्यं प्रेरितारं च मत्वा सर्वं प्रोक्तं त्रिविधं ब्रह्ममेतत्॥**

अर्थात् आफ्ना आत्मामा रहेको ब्रह्मलाई सधैँ नै जान्नुपर्दछ। योभन्दा जान्नुपर्ने अरू पदार्थ केही छैन। भोक्ता जीव, भोग्य अर्थात् जगत् र प्रेरक अर्थात् ईश्वर भनेर तीन प्रकारले भनिएको एउटै पूर्ण ब्रह्म हो। यी भोक्ता, भोग्य र प्रेरक सबै नै ब्रह्मको ऐक्यरूप हो। यी भिन्नाभिन्नै तीनथरी रूप होइनन्। यही कुरा नै मुमुक्षु अर्थात् जिज्ञासुले सधैँ नै जान्नुपर्दछ।

श्वेताश्वतरोपनिषद्को दोस्रो अध्यायमा परमात्माको साक्षात्कारको उपायभूत ध्यानको कुरा बताइएको छ। त्यसका लागि अपेक्षित साधनहरूको विधान गरिएको छ। यसका सिद्धिका लागि सविता देवताका प्रार्थनाबाट शुरु गरिएको छ। जस्तै –

**युञ्जानः प्रथमं मनस्तत्त्वाय सविता धियः।**
**अग्नेर्ज्योतिर्निचाय्य पृथिव्या अध्याभरत॥**
**युक्तेन मनसा वयं देवस्य सवितुः सवे।**
**सुवर्गेयाय शक्त्या॥**

सविताको प्रार्थनापछि ध्यानयोगको विधि र त्यसको महत्त्व समेत यस उपनिषद्मा वर्णन गरिएको छ। जस्तै –

**त्रिरुन्नतं स्थाप्य समं शरीरं हृदीन्द्रियाणि मनसा संनिवेश्य ।**
**ब्रह्मोडुपेन प्रतरेत विद्वान् स्रोतांसि सर्वाणि भयावहानि ॥**

अर्थात् – शिर, घाँटी र वक्षःस्थल तीनैथरी अङ्गहरूलाई ऊँचा राख्तै शरीरलाई पनि सोझो गरेर राख्नुपर्दछ । त्यसपछि मनको माध्यमबाट इन्द्रियहरूलाई हृदयमा सन्निविष्ट गरेर विद्वान् पुरुष ओङ्काररूप डुँगाद्वारा सम्पूर्ण भयानक जलप्रवाहलाई पार गर्दछ ।

त्यसपछि प्राणायमको क्रम र त्यसको महत्त्वको वर्णन गर्ने क्रममा आचार्य शङ्करले आफ्नू भाष्यमा यस सम्बन्धमा अरू शास्त्रहरूबाट पनि उद्धृत गर्दै नाडीशुद्धि, रेचक, कुम्भक, पूरक आदिको पनि उल्लेख गर्नुभएको छ । मनलाई नियन्त्रित गरिसकेपछिमात्रै ध्यानमा जान सकिने भएको हुँदा सोही कुरालाई उपनिषद्ले यसरी वर्णन गरेको छ । जस्तै –

**प्राणान्प्रपीड्येह संयुक्तचेष्टः क्षीणे नासिकयोच्छ्वसीत ।**
**दुष्टाश्वयुक्तमिव वाहमेनं विद्वान्मनो धारयेताप्रमत्तः ॥**

अर्थात् ध्यानमा प्रवृत्त हुने साधकले युक्त आहारविहार गर्दै प्राणको निरोध गर्न सक्नुपर्दछ । जब प्राणशक्ति अर्थात् प्राणधा–रणाको सामर्थ्य क्षीण हुन्छ तब नासिकारन्ध्रबाट त्यसलाई बाहिर फ्याँक्नु पर्दछ । त्यति गरेपछि त्यस साधकले दुष्ट घोडाहरूले युक्त रथको सारथि सावधान भएजस्तै सावधान भएर आफ्नू मनलाई नियन्त्रित गर्नुपर्दछ ।

उपर्युक्त अनुसार ध्यानको विधि बताउने क्रममा यस अध्यायमा ध्यानका लागि उपयुक्त स्थानको निर्देशन, योगसिद्धिको पूर्वलक्षण,

योगसिद्धि वा तत्त्वज्ञानको प्रभाव र योगसिद्ध अथवा तत्त्वज्ञको स्थितिको पनि यहाँ वर्णन गरेको पाइन्छ। जस्तै –

यदात्मतत्त्वेन तु ब्रह्मतत्त्वं दीपोपमेनेह युक्तः प्रपश्येत्।
अजं ध्रुवं सर्वतत्त्वैर्विशुद्धं ज्ञात्वा देवं मुच्यते सर्वपाशैः॥

अर्थात् जुन समयमा योगी दीपक समान प्रकाशस्वरूप आत्मभावले ब्रह्मतत्त्वको साक्षात्कार गर्दछ, त्यस समयमा अजन्मा, निश्चल, सम्पूर्ण तत्त्वदेखि विशुद्ध देवलाई जानेर ती योगी सबैथरी बन्धनहरूबाट मुक्त भएर जान्छ।

यस अध्यायको अन्त्यमा जुन परमात्मा अग्निमा हुनुहुन्छ, जलमा हुनुहुन्छ, संसारमा सर्वत्र व्याप्त हुनुहुन्छ, ओषधि र वनस्पतिमा समेत व्याप्त हुनुहुन्छ, ती परमात्मालाई नमस्कार गरिएको छ। यहाँ सर्वान्तिर्यामी परमात्मस्वरूपको वर्णन गर्दै यो अध्याय समाप्त भएको छ।

यस उपनिषद्को तृतीय अध्यायमा एउटै परमात्मा शासक र शासित हुने कुराको वर्णन गरिएको छ। त्यो सर्वशक्तिमान् ईश्वर ईश्वरीय शक्तिद्वारा शासन गर्दछ र ऐश्वर्य सम्पन्न भएर जगत्को सृष्टि, स्थिति र प्रलयसमेत गर्दछ। आफ्नू ऐश्वर्ययुक्त शक्तिद्वारा सम्पूर्ण लोकहरूको शासन पनि गर्दछ। जसले त्यस ईश्वरलाई जान्दछ, त्यो अमर बन्दछ।

त्यस सर्वनियन्ता तथा सर्वव्यापक परमात्माको बारेमा ज्ञानीजनको अनुभव प्रदर्शन गर्दै उपनिषद् भन्दछ। जस्तै –

वेदाहमेतं पुरुषं महान्तमादित्यवर्णं तमसः परस्तात्।
तमेव विदित्वाति मृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय॥

अर्थात् – म यस अज्ञानातीत प्रकाशस्वरूप महान् आत्मालाई जान्दछु। त्यसै परमेश्वरलाई जानेर नै मुमुक्षु मृत्युबाट पार हुन्छ। यसभन्दा बाहेक परमपद प्राप्त गर्ने अरू उपाय छैन।

**अङ्गुष्ठमात्रः पुरुषोऽन्तरात्मा सदा जनानां हृदये संनिविष्टः।**
**हृदा मन्वीशो मनसाभिक्लृप्तो य एतद्विदुरमृतास्ते भवन्ति ॥**

अर्थात् – त्यो अङ्गुष्ठमात्र परिमाण भएको पुरुष अर्थात् अन्तरात्मा सधैँ नै जीवका हृदयमा अवस्थित छ। त्यो ज्ञानाधिपति हृदयमा रहेको मनद्वारा सुरक्षित छ। त्यस परमात्मालाई जसले जान्दछ, त्यसको मुक्ति हुन्छ।

ब्रह्मलाई सर्वात्मभावद्वारा प्रतिपादन गरिसकेपछि अब आउने मन्त्रले ब्रह्मको निर्विशेषरूपको वर्णन गर्दछ। जस्तै –

**अपाणिपादो जवनो ग्रहीता पशत्यचक्षुः स शृणोत्यकर्णः।**
**स वेत्ति वेद्यं न च तस्यास्ति वेत्ता तमाहुरग्र्यं पुरुषं महान्तम् ॥**

अर्थात् ब्रह्म हातखुट्टा नभएर पनि चाँडै कुद्दछ र समाउँछ। आँखा नभएर पनि देख्तछ। कान भएपनि सुन्दछ। ऊ जान्नुपर्ने सबै जान्दछ, तर त्यस ब्रह्मलाई जान्ने कोही पनि छैन। त्यस ब्रह्मलाई ऋषिमुनिहरूले सबैको आदि, पूर्ण र महान् भनेका छन्।

उपर्युक्त निर्विशेष ब्रह्मलाई जान्ने अर्थात् ब्रह्मज्ञान गर्ने मुमुक्षु शोकरहित हुने कुराको वर्णन गर्दै श्रुति भन्दछ। जस्तै–

**अणोरणीयान्महतो महीयानात्मा गुहायां निहितोऽस्य जन्तोः।**
**तमक्रतुं पश्यति वीतशोको धातुः प्रसादान्महिमानमीशम् ॥**

अर्थात् – अणुभन्दा पनि अणु र महान्‌भन्दा पनि महान् त्यो आत्मा अर्थात् परब्रह्म जीवका अन्तःकरणमा अवस्थित छ। त्यस विषयभोगसङ्कल्पशून्य महिमामय आत्मालाई विधाताको कृपाले ईश्वररूपबाट देख्तछ र जीवात्मा शोकरहित बन्दछ।

यस तृतीय अध्यायका अन्त्यमा आत्मस्वरूपका विषयमा ब्रह्मवेत्ताहरूको अनुभवको वर्णन गर्दै समाप्त हुन्छ।

चौथो अध्यायको शुरुमा नै सद्‌बुद्धिका लागि परमेश्वरसँग प्रार्थना गर्दै उपनिषद् अगाडि बढ्‌दछ। परमात्माको सर्वरूपताको वर्णन गर्दै उपनिषद् भन्दछ –

**तदेवाग्निस्तदादित्यस्तद्वायुस्तदु चन्द्रमाः ।**
**तदेव शुक्रं तद्‌ब्रह्म तदापस्तत्प्रजापतिः ॥**
**त्वं स्त्री त्वं पुमानसि त्वं कुमार उत वा कुमारी ।**
**त्वं जीर्णो दण्डेन वञ्चसि त्वं जातो भवसि विश्वतो मुखः ॥**

अर्थात् – उही अग्नि हो। उही सूर्य हो। उही चन्द्रमा हो। उही शुद्ध हो। उही ब्रह्म हो। उही जल हो र उही प्रजापति हो। फेरि अर्को मन्त्रले भन्दछ – तिमी स्त्री हौ। तिमी पुरुष हौ। तिमी कुमार वा कुमारी हौ। तिमी नै बूढो भएर लट्ठी टेकेर हिँड्‌दछौं। तिमी नै प्रपञ्चरूपले सम्पन्न भएपछि अनेकरूप लिन्छौ।

छान्दोग्योपनिषद्‌मा वर्णन गरिएको प्रकृतिको तेज, अप र अन्न अर्थात् पृथ्वीरूपी त्रिवित्‌रूपलाई नै यस उपनिषद्‌ले अजाका रूपमा जस्तै वर्णन गरेकोछ। जस्तै –

**अजामेकां लोहितशुक्लकृष्णां बह्वीः प्रजाः सृजमानां सरूपाः ।**
**अजो ह्येको जुषमाणोऽनुशेते जहात्येनां भुक्तभोगामजोऽन्यः ॥**

अर्थात् एकैनासका आफूजस्तै धेरै सन्तानहरू उत्पन्न गर्ने भएकी एउटी रातो अर्थात् तेज, सेतो अर्थात् अप् र कालो अर्थात् पृथिवीको वर्ण भएकी अजा अर्थात् बाख्रीलाई एउटा बोको अर्थात् अनादि काम र कर्मले गर्दा स्वरूपबाट भ्रष्ट भएको विज्ञानात्मा यसैलाई आफ्नू स्वरूप ठानेर सेवन गर्दै भोग पनि गर्दछ। अर्को विज्ञानात्मा जीव गुरु र शास्त्रको उपदेशद्वारा अविद्यारूपी अन्धकारलाई नष्ट गरेर यस बहुरूपिणा प्रकृतिलाई छोडिदिन्छ।

उपर्युक्त अनुसार प्रकृति र त्यसमा संलग्न तथा तटस्थ जीवात्माको वर्णन गरेपछि अब उपनिषद् परमार्थतत्त्वको निश्चय सूत्रभूत तल आउने दुइटा मन्त्रहरूद्वारा गर्दछ। जस्तै–

**द्वा सुपर्णा सयुजा सखाया समानं वृक्षं परिषस्व जाते।**
**तयोरन्यः पिप्पलं स्वादवत्त्यनश्नन्नन्यो अभिचाकशीतिः ॥**

अर्थात् – सधैँ आपसमा मिलेर बस्ने भएका समान नाम भएका सुन्दर गति भएका दुइटा चराहरू एउटै शरीररूपी वृक्षमा बस्तछन्। ती हुन् जीवात्मा र परमात्मा अर्थात् साक्षी। ती दुई चराहरूमध्ये एउटा चरो जीवात्मा शरीररूपी वृक्षमा फलेको स्वादिष्ट आफ्नू कर्मफलको भोग गर्दछ भने अर्को चरो अर्थात् साक्षी फलको भोग नगरेर हेरी मात्रै रहन्छ।

त्यसपछि अर्को मन्त्रले वर्णन गर्दै भन्दछ। जस्तै –

**समाने वृक्षे पुरुषो निमग्नोऽनीशया शोचति मुह्यमानः।**
**जुष्टं यदा पश्यत्यन्यमीशमस्य महिमानमिति वीतशोकः ॥**

अर्थात् – त्यस एउटै वृक्षमा रहेको जीवात्मा हेहात्मभावले

ग्रस्त भएर मोहयुक्त हुँदै अत्यन्त दीनभावले शोक गर्दछ। जुन समयमा यस भोगासक्त जीवात्माले आफूसँगै रहेको शुद्ध, बुद्ध, सत्, चित्, अनन्दरूप साक्षी चैतन्यलाई जान्दछ, त्यस परमात्माको महिमालाई जान्दछ, तब त्यो असत्, जड, दुःख र अङ्काररूप जीवात्मा शोकरहित हुन्छ।

यस चौथो अध्यायको अन्त्यमा ईश्वर इन्द्रियादिको विषय नभएको, प्रत्यक्‌रूप भएको र त्यसका साथ आत्माको एकत्वको ज्ञान भएपछि मुक्ति हुने कुरा बुझ्नेपछि मात्र मुक्ति हुने कुराको वर्णन गर्दै उपनिषद् भन्दछ। जस्तै –

**न संदृशे तिष्ठति रूपमस्य न चक्षुषा पश्यति कश्चनैनम्।**
**हृदा हृदिस्थं मनसा य एनमेवं विदुरमृतास्ते भवन्ति ॥**

अर्थात् परमात्माको स्वरूपको ग्रहण नेत्रादि इन्द्रियहरूद्वारा हुनसक्तैन। कुनै पनि पुरुषले आफ्ना मायिक चर्मचक्षुद्वारा परमात्मालाई देख्नसक्तैन। जसले यस हृदयमा अवस्थित परमात्मालाई शुद्ध अन्तःकरणबाट यसप्रकार जान्दछ, त्यो अमर हुन्छ।

श्वेताश्वतरोपनिषद्‌को पञ्चम अध्याय अक्षराश्रित विद्या, अविद्या, तिनका प्रशासक परमेश्वरको स्वरूप र महात्म्यबाट शुरु भएको छ। चतुर्थ अध्यायमा वर्णन गर्न बाँकी रहेका अपूर्व विषयको प्रतिपादन गर्नका लागि नै यो प्रथम मन्त्र शुरुभएको छ। जस्तै –

**द्वे अक्षरे ब्रह्मपरे त्वनन्ते विद्याविद्ये निहिते यत्र गूढे।**
**क्षरं त्वविद्या ह्यमृतं तु विद्या विद्याविद्ये ईशते यस्तु सोऽन्यः ॥**

अर्थात् – हिरण्यगर्भभन्दा उत्कृष्ट, अविनाशी तथा अनन्त परब्रह्ममा विद्या र अविद्या दुवै अव्यक्तभावमा रहेका छन्। ती दुइटामध्ये क्षर अविद्या हो र अमृत विद्या हो। यो विद्या नै मोक्षको हेतु हो। यी विद्या र अविद्या दुवैलाई जसले शासन गर्दछ ती यी दुवैका साक्षी हुन्। साक्षी भएको कारण यी दुवैबाट भिन्नै छन्।

यस उपनिषद्ले माथिका मन्त्रहरूद्वारा सारांशमा तत्पदार्थ अर्थात् परमतत्त्वका बारेमा वर्णन गरेको छ। अब यसपछि त्वंपदार्थ अर्थात् जीवतत्त्वको सङ्क्षिप्तरूपमा उपनिषद्ले वर्णन गर्दछ। त्यही आत्मा नै कर्तृत्व, भोक्तृत्व र प्रमातृत्व आदि मायिक उपाधिहरूले युक्त भएर संसारमा घुमिरहन्छ। यही कुरा मन्त्रले भनेकोछ। जस्तै –

**गुणान्वयो यः फलकर्मकर्ता कृतस्य तस्यैव स चोपभोक्ता।**
**स विश्वरूपस्त्रिगुणस्त्रिवर्त्मा प्राणाधिपः सञ्चरति स्वकर्मभिः॥**

अर्थात् – जसको कर्म र ज्ञानजनित वासनामय गुणहरूका साथ सम्बन्ध छ र त्यही जीव नै गुणान्वय हो। त्यसै जीवले नै फलका लागि कर्म गर्दछ र कर्मबाट प्राप्त कर्मफल पनि उसै जीवले भोग गर्दछ। कार्यकारणभावले नानाथरी देहहरू धारणा गर्दछ। यस जीवका सत्त्व, रजस् र तमस् गुणहरू छन्। यसका देवयानादि तीन मार्गहरू छन्। अर्को शब्दमा भन्ने हो भने धर्म, अधर्म र ज्ञानरूप तीन मार्गहरू छन् भन्नु अझ उपयुक्त हुने देखिन्छ।

त्यो जीव पाँच वृत्तियुक्त प्राणको मालिक भएर सञ्चार

गर्दछ । त्यो जीवात्मा यस संसारमा आफ्ना पूर्वसञ्चित कर्महरूलाई बोकेर हिँड्दछ ।

यस जीवले के कारणले विभिन्न शरीरहरू लिन्छ भन्ने सम्बन्धमा सङ्क्षिप्त चर्चा उपनिषद्ले गरेको छ । जसरी अन्न र जलका सेवनबाट शरीरको वृद्धि हुन्छ, त्यसैगरेर सङ्कल्प, स्पर्श, दर्शन र मोहबाट कर्म हुन्छ । त्यसपछि यो जीवात्मा विभिन्न योनिहरूमा गएर आफूले गरेका पूर्व कर्म अनुसारका रूपहरू धारणा गर्दछ ।

यस गहन संसारका भित्र त्यस अनादि, अनन्त, विश्वस्रष्टा, अनेकरूप विश्वव्यापक ज्योतिःस्वरूप परमात्मालाई जानेर जीवात्मा समस्त पाशहरू अर्थात् अविद्या, काम र कर्मादिहरूबाट मुक्त हुन्छ । यसपछि पाचौँ अध्याय समाप्त हुन्छ ।

श्वेताश्वतरोपनिषद्को अन्तिम छैटौँ अध्यायको शुरुको मन्त्रबाट नै सृष्टिचक्रसञ्चालनको वर्णन गरिएको छ । प्रथम मन्त्रले भन्दछ । जस्तै –

**स्वभावमेके कवयो वदन्ति कालं तथान्ये परिमुह्यमानाः ।**
**देवस्यैष महिमा तु लोके येनेदं भ्राम्यते ब्रह्मचक्रम् ॥**

अर्थात् – यस संसारको सञ्चालनमा काल कारण भएको भन्ने कसैको भनाइ भएको पाइन्छ । कसैको स्वभाव र केही अन्यान्यको विभिन्न भनाइहरू भएका पाइन्छन् । थरीथरीको विचार व्यक्त गर्ने सबै मोहग्रस्त छन् । यो भगवान्को महिमा अनुसार नै ब्रह्मचक्र घुमिरहेको छ । यस कुराको विशेष चर्चा यसै उपनिषद्को प्रथम अध्यायको चारौँ मन्त्रमा गरिएको छ ।

यस अध्यायमा क्रमैसँग चिन्तनीय परमेश्वरको स्वरूप र महिमाको वर्णन गरिएको छ। त्यसपछि भगवदर्पण कर्मबाट भगवत्प्राप्ति हुने कुरा बताइएको छ। त्यसपछि उपासनाबाट भक्तलाई हुने भगवत्प्राप्ति र ज्ञानबाट ज्ञानीलाई हुने तत्त्वानुभवको उल्लेख पनि गरिएको छ। परमेश्वरको महत्ताको वर्णन गर्दै श्रुतिले भनेको छ। जस्तै –

**न तस्य कार्यं करणं च विद्यते न तत्समश्चाभ्यधिकश्च दृश्यते ।**
**परास्य शक्तिर्विविधैव श्रूयते स्वाभाविकी ज्ञानबलक्रिया च ॥**

**न तस्य कश्चित्पतिरस्ति लोके न चेशिता नैव च तस्य लिङ्गम् ।**
**स कारणं करणाधिपाधिपो न चास्य कश्चिज्जनिता न चाधिपः ॥**

अर्थात् – परब्रह्म परमेश्वरका शरीर र इन्द्रियहरूसमेत छैनन्। परमेश्वर बराबर र उनीभन्दा ठूला पनि अरू कोही छैनन्। ती परमेश्वरका पराशक्ति नाना प्रकारका छन् भन्ने सुनिन्छ। ती भनेका स्वाभाविकी ज्ञानक्रिया र बलक्रिया हुन्। किनभने संसारमा ती परमेश्वरको कोही पनि मालिक छैन। कोही शासक र त्यसको चिन्हसमेत पनि छैन। ती सबैका कारण हुन् र इन्द्रियाधिष्ठाता जीवका पनि स्वामी हुन्। उनका न कोही उत्पत्तिकर्ता छन् न त कोही स्वामी नै छन्। त्यसैकारण परमात्मालाई सर्वेश्वर भनिन्छ।

परमेश्वरको स्वरूपको निर्देशन गर्दै र उनलाई विशेष ज्ञानले मात्रै जानिने कुराको वर्णन तलका मन्त्रहरूले गरेका छन्। जस्तै –

**एको देवः सर्वभूतेषु गूढः सर्वव्यापी सर्वभूतान्तरात्मा ।**
**कर्माध्यक्षः सर्वभूताधिवासः साक्षी चेता केवलो निर्गुणश्च ॥**

अर्थात् – सम्पूर्ण प्राणीहरूका अन्तर्हृदयमा एउटै सर्वव्यापक, अन्तरात्मा, कर्महरूका अधिष्ठाता र सर्वभूताधिवासी परमात्मा बस्नुभएको छ । ती परमात्मा नै समस्त भूतप्राणीका साक्षी अर्थात् सर्वद्रष्टा हुन् । *'साक्षाद्द्रष्टरि संज्ञायाम्'* भन्ने पाणिनिसूत्रका अनुसार साक्षी शब्दको अर्थ द्रष्टा हुन्छ । त्यही ब्रह्म नै चेता हो अर्थात् ब्रह्मले नै सबैलाई चेतनत्व प्रदान गर्दछ । त्यही ब्रह्म केवल अर्थात् उपाधिशून्य र निर्गुण अर्थात् सत्त्व, रज र तमोगुणले रहित पनि छ ।

परमात्मा परब्रह्मको ज्ञानले नित्य सुख अर्थात् मोक्षको प्राप्ति हुने भन्दै श्रुति भन्दछ । जस्तै –

**एको वशी निष्क्रियाणां बहूनामेकं बीजं बहुधा यः करोति ।**
**तमात्मस्थं येऽनुपश्यन्ति धीरास्तेषां सुखं शाश्वतं नेतरेषाम् ॥**

अर्थात् – एक, अद्वितीय र स्वतन्त्र परमात्माले धेरै बीजस्थानीय निष्क्रिय भूतसूक्ष्मलाई अनेक रूपमा परिणत गरिदिन्छन् । त्यस्ता परमात्मालाई आफ्ना अन्तःकरणमा जसले देख्तछ, त्यस्ता मतिमान् ब्रह्मज्ञानीलाई नित्य सुख अर्थात् मोक्ष प्राप्ति हुन्छ । ती बाहेक अरू अमतिमान् अज्ञानीलाई नित्य सुख अर्थात् मोक्ष प्राप्त हुँदैन ।

फेरि अर्को मन्त्रले परब्रह्मका बारेमा भनेकोछ । जस्तै –

**नित्यो नित्यानां चेतनश्चेतनानामेको बहूनां यो विदधाति कामान् ।**
**तत्कारणं साङ्ख्ययोगाधिगम्यं ज्ञात्वा देवं मुच्यते सर्वपाशैः ॥**

अर्थात् ब्रह्म नित्यमा नित्य छ । चेतनमा चेतन छ । आफू एक्लै भएर पनि धेरै जीवात्माहरूलाई भोग प्रदान गर्दछ । साङ्ख्ययोगद्वारा जान्न सकिने त्यस सबैको कारण भएको परमात्मदेवलाई जानेपछि पुरुष समस्त बन्धनहरूबाट मुक्त भएर जान्छ ।

माथिल्लो मन्त्रमा *'चेतनश्चेतनानाम्'* अर्थात् चेतनमा चेतन भनिएको हुँदा परमात्मामा कसरी चेतनहरूको चेतन भयो भन्ने जिज्ञासा उत्पन्न हुन सक्ने देखिन्छ । यस जिज्ञासालाई शान्त पार्दै अर्को मन्त्रले उसै परमात्मा परब्रह्मको प्रकाशबाट नै सम्पूर्ण चराचर प्रकाशित भएको कुराको वर्णन गर्दछ । जस्तै–

**न तत्र सूर्यो भाति न चन्द्रतारकं नेमा विद्युतो भान्ति कुतोऽयमग्निः ।**
**तमेव भान्तमनुभाति सर्वं तस्य भासा सर्वमिदं विभाति ॥**

अर्थात् त्यस परब्रह्म परमात्मालाई सूर्यले प्रकाशित गर्न सक्तैन, चन्द्रमाले, ताराहरूले र बिजुलीले पनि त्यस परमात्मालाई प्रकाशित गर्न सक्तैनन् भने अग्निले प्रकाशित गर्न सक्ने त कुरै भएन । किनभने त्यसै स्वयं प्रकाशरूप परमात्माबाट नै यो सम्पूर्ण चराचर प्रकाशित भएर चम्किरहेको छ । सूर्यचन्द्र आदि पनि त्यसै परब्रह्मको प्रकाश पाएर प्रकाशित हुने गर्दछन् ।

यसरी सर्वप्रकाशस्वरूप तथा सर्वनियन्ता परब्रह्मको ज्ञान हुने कुराको निश्चय भयो । ब्रह्मज्ञान बाहेक अरू कुनै कुराले पनि मोक्ष हुन नसक्ने कुरामा अझै जोड दिँदै उपनिषद् भन्दछ । जस्तै–

**एको हंसो भुवनस्यास्य मध्ये स एवाग्निः सलिले संनिविष्टः ।**
**तमेव विदित्वाति मृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय ॥**

शब्दार्थ, अस्य – यस दृश्यमान्, भुवनस्य – ब्रह्माण्डका, मध्ये – माझमा, एकः – एउटा, हंसः – प्रकाशस्वरूप परमात्मा रहेको छ । स एव – उही नै, सलिले – पानीमा, संनिविष्टः – रहेको, अग्निः – आगो हो । तम् – त्यसै सर्वव्यापक परमात्मालाई, विदित्वा – जानेर, एव – नै, मान्छे, मृत्युम् – मृत्युलाई, अत्येति – नाघ्दछ । अयनाय – मोक्षका लागि, अन्यः – अर्को, पन्थाः – बाटो, न विद्यते – छैन ।

यस भुवनका मध्यमा एउटा स्वयंप्रकाश हंस अर्थात् परमात्मा छ । त्यही परमात्मा जल अर्थात् पञ्चाहुतिरूप देहमा पनि छ । त्यो अग्नि हो । (यसका लागि बृहदारण्यकोपनिषद् ६।२।९ पठनीय छ ।) त्यसै परमात्मालाई जानेर नै पुरुषले मृत्युबाट पार पाउँछ । परब्रह्मको ज्ञान बाहेक मोक्षप्राप्तिको अरू कुनै पनि उपाय अर्थात् बाटो छैन ।

परमपद प्राप्तिका लागि परमेश्वरका स्वरूपको विशेषरूपले वर्णन गर्दै फेरि श्रुति भन्दछ –

**स विश्वकृद्विश्वविदात्मयोनिर्ज्ञः कालकारो गुणी सर्वविद्यः ।**
**प्रधानक्षेत्रज्ञपतिर्गुणेशः संसारमोक्षस्थितिबन्धहेतुः ॥**

अर्थात् ती परमात्मा विश्वकर्ता हुन् । विश्ववेत्ता हुन् । आत्मयोनि अर्थात् स्वयंभू हुन् । परमात्मा ज्ञाता हुन् । परमात्मा कालका प्रेरक हुन् । परमात्मा अपहतपाप्मत्वादि गुणका धनी हुन् । परमात्मा सम्पूर्ण विद्याहरूका आश्रयस्थल हुन् । परमात्मा प्रधान र पुरुषका अध्यक्ष हुन् । गुणहरूका नियामक हुन्, संसारका मोक्ष, स्थिति र बन्धनका हेतु अर्थात् कारण पनि हुन् ।

परमात्मा नै संसारका मोक्ष, स्थिति र बन्धनका कारण

भएका हुँदा मुमुक्षु पुरुषले सबै प्रकारले उनकै शरणमा जानु पर्दछ । अतः भगवत्शरणागतिको उपदेश गर्दै श्रुति भन्दछ । जस्तै –

**यो ब्रह्माणं विदधाति पूर्वं यो वै वेदांश्च प्रहिणोति तस्मै ।**
**तं ह देवमात्मबुद्धिप्रकाशं मुमुक्षुर्वै शरणमहं प्रपद्ये ॥**

शब्दार्थ :– यः – जुन परमेश्वरले, वै – निश्चय नै, पूर्वम् – सबभन्दा पहिले, ब्रह्माणम् – ब्रह्मालाई, वेदान् – सम्पूर्ण वेदहरूको ज्ञान, प्रहिणोति – प्रदान गरेका थिए । तम् आत्मबुद्धिप्रकाशम् – त्यस आत्मज्ञानविषयक बुद्धिलाई बाहिर प्रकट गर्ने भएका, ह देवम् – प्रसिद्ध देव परमेश्वरका, अहम् मुमुक्षुः – मोक्षको इच्छा गर्ने म साधक, शरणम् – शरणमा, प्रपद्ये – प्राप्त हुन्छु ।

पदार्थ :– परमात्माले सृष्टिका आरम्भमा सर्वप्रथम ब्रह्माजीको सृष्टि गरेका थिए । ब्रह्माजीलाई ज्ञान दिन परमात्माले वेदलाई प्रवृत्त गराएका थिए । त्यसरी ज्ञानको भण्डार भएको वेदलाई प्रवृत्त गराएर आत्मरूपी बुद्धिलाई प्रकाशित गर्ने परमात्माका शरणमा म मुमुक्षुका रूपमा पर्दछु । मोक्षका अतिरिक्त म अरू कुनै पनि फलको इच्छा गर्दिन भन्ने नै यसको अर्थ भएको देखिन्छ ।

यहाँसम्म सृष्टि आदि कार्यबाट लक्षियत हुने ब्रह्मको तटस्थ स्वरूपको वर्णन श्रुतिले गरेको छ भने यसपछि तलको मन्त्रबाट साक्षात्स्वरूप अर्थात् स्वरूपलक्षणबाट ब्रह्मको वर्णन गरिएको छ । जस्तै –

**निष्कलं निष्क्रियं शान्तं निरवद्यं निरञ्जनम् ।**
**अमृतस्य परं सेतुं दग्धेन्धनमिवानलम् ॥**

अर्थात् – जुन परमात्मा कलाहीन अर्थात् निरवयव छन् । परमात्मा क्रियाहीन अर्थात् आफ्नै महिमा किंवा कूटस्थ साक्षीका रूपमा स्थित छन् । परमात्मा शान्त अर्थात् सम्पूर्ण विकारहरूले रहित छन् । परमात्मा निरवद्य अर्थात् अनिन्द्य, निरञ्जन अर्थात् निर्लेप र अमृत अर्थात् मोक्षका सेतु सरह छन् । परमात्मा इन्धन बलिसकेर धूमादि विकाररहित जाज्वल्यमान् अग्नि जस्ता छन् । त्यस्ता परमात्माका शरणमा म पर्दछु ।

के परब्रह्मको ज्ञानबाट अर्थात् ब्रह्मज्ञानबाटमात्रै मुमुक्षुले मोक्ष प्राप्त गर्न सक्तछ ? यसका लागि के अरू कुनै पनि साधनहरूको आवश्यकता पर्दैन ? भन्ने इत्यादि जिज्ञासाहरू साधकका मनमा उपस्थित हुनसक्तछन् । यसका सम्बन्धमा ब्रह्मज्ञानविना दुःखको आत्यन्तिक निवृत्ति र ब्रह्मप्राप्तिसमेत हुननसक्ने कुराको उद्घोषण उपनिषद्ले गरेको छ । यस उद्घोषणलाई तल उद्धृत गरिन्छ । जस्तै –

**यदा चर्मवदाकाशं वेष्टयिष्यन्ति मानवाः ।**
**तदा देवमविज्ञाय दुःखस्यान्तो भविष्यति ॥**

अर्थात् – जुन समयमा मानिसहरूले आकाशलाई छाला बेरेझैँ गरेर बेर्न वा पट्याउन सक्नेछन्, तब ब्रह्मज्ञानविना पनि दुःखको अन्त्य हुनेछ ।

यसको तात्पर्य ब्रह्मज्ञान नगरीकनै कुनै मनुष्यको दुःखको निवृत्ति वा मोक्ष हुनुभनेको अत्यन्त असम्भव कुरा हो । त्यो भनेको विभु तथा अमूर्त आकाशलाई परिच्छिन्न एवं मूर्तस्वरूप छालालाई मान्द्रो बेरेझैँ बेर्न खोज्नु हो ।

अन्त्यमा परमेश्वर र गुरुको महत्त्व देखाउँदै श्रुति भन्दछ। जस्तै –

**यस्य देवे परा भक्तिर्यथा देवे तथा गुरौ।**
**तस्यैते कथिता ह्यर्थाः प्रकाशन्ते महात्मनः ॥**

अर्थात् जसको परमेश्वरमा भक्ति छ र त्यस्तै भक्ति गुरुमा पनि छ, त्यस्ता उच्चस्तरका महात्मा अधिकारीलाई मात्रै यो श्वेताश्वतर जस्तो उत्कृष्ट उपनिषद् सुन्ने अधिकार हुन्छ। त्यस्ता उत्तम अधिकारीलाई श्रोत्रिय ब्रह्मनिष्ठ गुरुले उपदेश गरेमात्रै ब्रह्मतत्त्व स्वानुभवको विषय हुनसक्तछ।



# छान्दोग्योपनिषद्

सच्चिदानन्दसान्द्राय सर्वातीताय साक्षिणे ।
नमः श्रीदेशिकेन्द्राय शिवायाशिवघातिने ॥

सामवेदको कौथुम शाखाको ताण्ड्यब्राह्मणलाई पञ्चविंश ब्राह्मण पनि भनिन्छ, त्यसैका अन्तिम आठ भागहरू छान्दोग्योपनिषद् हो । यसै कौथुमलाई तलवकार ब्राह्मण भनिन्छ । केनोपनिषद् पनि तलवकारकै शाखा हो । त्यसैकारण नै दुवै उपनिषद्को शान्तिपाठ एउटै छ । यस उपनिषद्को अत्यन्त महत्त्वपूर्ण स्थान छ । यसको वर्णनशैली अत्यन्त क्रमबद्ध र युक्तियुक्त छ । यसमा तत्त्वज्ञान, तदुपयोगी कर्म र उपासनाहरूको समेत विशद र विस्तृत वर्णन छ । यद्यपि आजभोलि औपनिषदकर्म र उपासना प्रायः लोप भइसकेका देखिन्छन् । तर पनि यसैका आधारमा नै हाम्रा स्मार्त, श्रौत, तान्त्रिक र पौराणिक उपासनाहरूको परम्परा आविर्भाव भएको देखिन्छ ।

अद्वैतवेदान्तको प्रक्रिया अनुसार जीव अविद्याका तीन दोषहरूले आवृत भएको हुन्छ । ती दोषहरू हुन् – मल दोष, विक्षेप दोष र आवरण दोष । यिनमा मल दोष अर्थात् अन्तःकरणको मलिन संस्कारजनित दोषको निवृत्ति निष्काम कर्मबाट हुन्छ । विक्षेप

अर्थात् चित्तको चाञ्चल्य दोषको नाश उपासनाबाट हुन्छ । आवरण दोष अर्थात् स्वरूपविस्मृति वा अज्ञानको नाश ज्ञानबाट हुन्छ । यसप्रकार चित्तका यी त्रिविध दोषहरूलाई नाश गर्नका लागि भिन्नाभिन्नै यी तीनथरी उपायहरू हुन् । यी तीनथरी उपायहरूद्वारा तीन प्रकारका गतिहरू मानिसले प्राप्त गर्दछ ।

सकामकर्मीहरू धूममार्गद्वारा स्वर्गादि लोकहरूमा जान्छन् । पुण्य समाप्त भएपछि ती कर्मीहरू फेरि पृथिवीमा नै आएर जन्म लिन्छन् र अविद्या, काम र कर्मका दुश्चक्रमा पर्दछन् । निष्कामकर्मी र उपासकहरू अर्चिरादि मार्गबाट आफ्ना उपास्यदेवका लोकमा जान्छन् । त्यहाँ आाफ्ना अधिकार अनुसार सालोक्य आदि मुक्ति प्राप्त गर्दछन् । यी दुईथरी मार्गहरूको विशदरूपमा वर्णन यस उपनिषद्को पाचौँ अध्यायमा गरिएको छ ।

उपर्युक्त दुईथरी मार्गहरूभन्दा भिन्नै तत्त्वज्ञानीको गति हुन्छ । तत्त्वज्ञानीका प्राणको उत्क्रमण हुँदैन । तत्त्वज्ञानीका शरीरका तत्त्वहरू यहीँ आफ्ना आफ्ना मूलतत्त्वहरूमा लीन हुन्छन् । तत्त्वज्ञानीलाई यहीँ कैवल्यपद प्राप्त हुन्छ ।

अद्वैतसिद्धान्त अनुसार मोक्षको साक्षात्साधन ज्ञान नै हो । यस बारेमा *'ऋते ज्ञानान्नमुक्तिः' 'ज्ञानादेव तु कैवल्यम्' 'अथ येऽन्यथातो विदुरन्यराजानस्ते क्षय्यलोका भवन्ति' 'सर्व एते पुण्यलोका भवन्ति ब्रह्मसंस्थोऽमृतत्वमेति'* आदि थुप्रै श्रुतिहरू छन् । निष्काम कर्मद्वारा मलदोष र उपासनाद्वारा विक्षेपदोषको निवृत्ति भएपछि ज्ञानद्वारा ज्ञानीको मुक्ति हुन्छ । ज्ञानद्वारा आत्मसाक्षात्कार हुन्छ । त्यसपछि ज्ञानीका दृष्टिमा संसार र संसारबन्धनको अत्यन्ताभाव हुन्छ । ज्ञानीका दृष्टिमा सर्वत्र अशेषविशेषशून्य एक

अखण्ड चिदानन्दघन सत्तामात्र बाँकी रहन्छ। यसरी ज्ञानीका दृष्टिमा प्रपञ्च नै रहँदैन भने आफ्नू पञ्चकोशात्मक शरीर र त्यसको स्थिति वा विनाश नै कहाँ रहन्छ र ? उनका लागि जीवन्मुक्ति र विदेहमुक्तिको समेत कुनै अर्थ नै रहँदैन। उनी त नित्यमुक्त नै हुन्। त्यस्ता ज्ञानीको वास्तविक स्वरूपको जानकारी नभएको कारण नै मानिसहरू उनमा जीवन्मुक्ति र विदेहमुक्तिको आरोप गर्दछन्। ज्ञानी पुरुष मुक्त नै हुन् र उनी मुक्तस्वरूप नै हुन्। उनले फेरि मुक्त भइरहनुपर्दैन। श्रुतिले 'विमुक्तश्च विमुच्यते' भनेको पनि छ।

यसरी विचार गर्दा मोक्षको साक्षात् साधन ज्ञान नै हुन आउँछ। तर पनि निष्काम कर्म र उपासना परम्परया ज्ञानका साधन हुन्। कर्मको निरूपण श्रुतिले अरू शाखाद्वारा गरिसकेको हुँदा अब यस उपनिषद्ले आत्माको निरूपण गर्ने काम गर्दछ। त्यसैका लागि यो उपनिषद् आरम्भ गरिएको हो। यसमा पनि तत्त्वज्ञानका लागि उपयोगी हुने विभिन्न उपासनाहरूको वर्णन गरिएको छ। यस उपनिषद्मा जम्मा आठ अध्यायहरू छन्। जसमा पहिलेका पाँच अध्यायहरूमा मुख्यरूपमा उपासनाको वर्णन छ र अन्तिम तीन अध्यायहरूमा ज्ञानको वर्णन गरिएको छ।

यस उपनिषद्मा उपासना र ज्ञान दुवैको अत्यन्त सुन्दर विवेचना गरिएको छ। ती विधाहरूलाई सजिलोसँग संझाउनका लागि ठाउँठाउँमा आख्यायिकाहरू पनि दिइएका छन्। जसबाट ती दुरूह विषयहरू हृयङ्गम गर्न सुगम हुनुका साथै तिनबाट धेरै प्रकारका शिक्षा पनि लिनसकिन्छ।

प्रथम अध्यायमा इभ्य गाउँमा बस्ने उषस्तिको कथा आउँछ।

उषस्ति यज्ञयागादि कर्मकाण्डमा अत्यन्त कुशल थिए। एकपटक उनको कुरुदेशमा असिना र ढुङ्गाको वर्षा भएको थियो। त्यसबाट कुरुदेशमा ठूलो अनिकाल परेको थियो। त्यसबाट उषस्ति कैयौँ दिनसम्म भोकै परेका थिए। जब उनी मर्नै लागेका थिए तब उनले एउटा माउतेसँग गएर प्राणरक्षार्थ केही अन्न मागेका थिए। माउतेसँग केही उच्छिष्ट अर्थात् जुठो गहत थियो। उषस्तिले त्यही उच्छिष्ट खाना खाएर आफ्नू प्राणको रक्षा गरेका थिए। त्यसपछि हात्तीको माउतेले जब आफ्नू उच्छिष्ट जल पनि उषस्तिलाई दिन खोजेको थियो, तब उषस्तिले यो उच्छिष्ट जल म खान्न भनेर निषेध गरेका थिए। त्यसबाट आश्चर्य मान्दै माउतेले उच्छिष्ट खाना खानु चाहिँ हुने तर उच्छिष्ट जल किन खान नहुने ? भनेर प्रश्न गरेको थियो। त्यसको उत्तरमा उषस्तिले भनेका थिए। जस्तै – *'न वा आजीविष्यमिमानखादन्.... कामो मे उदपानम्'* अर्थात् तिम्रो उच्छिष्ट गहत नखाएको भए म बाँच्ने थिइन तर पानी भने मेरा इच्छा अनुसार म जहाँ पनि पाउन सक्तछु। यसरी उच्छिष्ट जललाई उषस्तिले निषेध गरेर आफ्नू आदर्शको रक्षा गरेका थिए। मानिसले आफ्नू प्राणको रक्षा गरेपछिमात्रै आचारको रक्षा गर्नसक्तछ भन्ने शिक्षा यस आख्यायिकाबाट लिनसकिन्छ।

यस छान्दोग्योपनिषद्को प्रथम अध्यायमा शिलक, दाल्भ्य र प्रवाहणको संवाद आउँछ। पाँचौँ अध्यायमा उद्दालकसहित प्राचीनशालादि पाँच महर्षिहरूले राजा अश्वपतिसँग गएर वैश्वानर आत्माका बारेमा जिज्ञासा राखेका थिए। यी दुइटा प्रसङ्गहरूबाट सनातन शिष्टाचार अनुसार उपदेश दिने अधिकार ब्राह्मणहरूलाई मात्रै भएको देखिन्छ। तर यदि अरू कुनै द्विजाति अर्थात् क्षत्रिय र

वैश्यसँग पनि कुनै उत्कृष्ट विद्या छ भने गुरूपसत्तिको साटो अरू नै शिष्ट व्यवहारद्वारा विद्या ग्रहण गर्न सकिन्छ भन्ने शिक्षा यसबाट ग्रहण गर्न सकिन्छ। कुनै पनि कल्याणकारिणी विद्याग्रहण गर्नका लागि कति त्याग, तप, सेवा, सत्य र विनय आदिको आवश्यकता पर्दोरहेछ भन्ने कुराको शिक्षा यस उपनिषद्का विभिन्न उपाख्यानहरूबाट पाउँनसकिन्छ ।

राजा जानश्रुतिले संवर्गविद्याका लागि गाडीवान् रैक्वको तिरस्कार सहेका थिए। त्यतिमात्रै होइन राजा जानश्रुतिले धेरै धनसम्पत्ति, राज्य र आफ्नी छोरी समेत गाडीवाला रैक्वलाई दिएर संवर्गविद्या ग्रहण गरेका थिए।

इन्द्रले आत्मविद्या प्राप्तिका लागि एकसय एक वर्षसम्म ब्रह्मचर्यव्रतको पालना गरेका थिए। सत्यकाम जाबालले गुरु हारिद्रुम गौतमको सेवाका साथै गुरुका गाईहरूको सेवा गरेर ब्रह्मविद्या प्राप्त गरेका थिए। जुनबेला सत्यकाम वनबाट गाईहरू लिएर गुरुकहाँ आएका थिए, त्यसबेला सत्यकामको तेजलाई देखेर उनका गुरु गौतमले उनलाई सोधेका थिए। जस्तै – *'ब्रह्मविदिव वै सोम्य भासि को नु त्वानुशशास'* अर्थात् हे सोम्य ! तिमी ब्रह्मवेत्ताजस्ता देखिन्छौ, तिमीलाई कसले उपदेश दियो ? त्यसैगरेर सत्यकामका शिष्य उपकोशललाई पनि नियमानुसार अग्निहोत्र गर्दागर्दै नै गुरुकृपाबाट ब्रह्मविद्या प्राप्त भएको थियो। आफ्नू काम र कर्तव्य अत्यन्त निष्ठाका साथ सम्पन्न गरेमा सिद्धिप्राप्त हुन्छ भन्ने कुराको शिक्षा यी आख्यायिकाहरूबाट प्राप्त गर्नसकिन्छ।

सातौँ अध्यायमा सनत्कुमार र नारदको संवाद आउँछ। देवर्षि नारद आत्मज्ञानका लागि जिज्ञासा राखेर सनत्कुमारका

शरणमा गएका थिए। सनत्कुमारले देवर्षि नारदलाई प्रश्न गरेका थिए – 'तिमी कुन कुन विद्या जान्दछौ ? मलाई भन, त्यसपछि म तिमीलाई उपदेश गर्दछु।' यसको उत्तरमा नारदले ऋग्वेद, यजुर्वेद, सामवेद, अथर्ववेद, इतिहासपुराणरूप पञ्चम वेद, व्याकरण, श्राद्धकल्प, गणित, उत्पातज्ञान, निधिशास्त्र, तर्कशास्त्र, नीतिशास्त्र, निरुक्त, शिक्षा, भूततन्त्र, धनुर्वेद, ज्योतिष, गारुड र सङ्गीतविद्यासमेत जान्दछु भनेर उत्तर दिएका थिए। तर सबै ती विद्याहरू जानेका भए तापनि नारदजीलाई शान्ति थिएन। कुनै राजालाई राज्य, वैभव, स्त्री, पुत्र र सम्मानसमेत सबै कुरा प्राप्त भए तापनि शरीरमा पीडा छ भने त्यसलाई शान्ति हुँदैन। त्यसैगरेर सम्पूर्ण शास्त्रहरू पढेको भए तापनि आत्मज्ञान अथवा ब्रह्मज्ञानविना मानिसलाई शान्ति हुनसक्तैन। परमात्माको साक्षात्कार नभईकन दुःखबाट छुटकारा पाउँन खोज्नु भनेको आकाशलाई मृगचर्मजस्तै पटचाउन खोज्नु जस्तै असम्भव हो। भनिएको पनि छ। जस्तै –

**यदा चर्मवदाकाशं वेष्टयिष्यन्ति मानवाः।**
**तदा देवमविज्ञाय दुःखस्यान्तो भविष्यति ॥**

त्यसैकारण नारदजी भन्दछन्। जस्तै– *'सोऽहं भगवो मन्त्रविदेवास्मि नात्मविच्छ्रुतं ह्येव मे भगवद्दृशेभ्यस्तरति शोकमात्मविदिति सोऽहं भगवः शोचामि तं मा भगवाञ्छोकस्य पारं तारयतु।'* अर्थात् हे भगवन्! म केवल शास्त्रज्ञ हुँ तर आत्मज्ञ भने होइन। आत्मवेत्ता नै शोकबाट पारि तर्दछ भन्ने कुरा मैले सुनेको छु। अहिले म शोकले ग्रस्तछु, अतः मलाई शोकबाट पारि तार्नुहओस्। नारदको यस्तो भनाइ अनुसार

शास्त्रज्ञानबाट मात्रै संसृतिचक्ररूप शोकसमुद्रबाट पार हुन सकिँदैन । त्यसका लागि उपनिषद्ब्रह्मविद्या श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसँग पढ्नु अति आवश्यक छ । मोक्षका लागि अरू बाटो छैन ।

यस उपनिषद्मा मोक्षपरक मन्त्रहरू, महावाक्यहरू र आख्यानहरू समेत भरपूर छन् । प्राचीन समयदेखि नै यस उपनिषद्को आत्मज्ञानका क्षेत्रमा अत्यन्त ठूलो महत्त्व रहेको छ । ब्रह्मसूत्र अर्थात् वेदान्तसूत्रमा जुनजुन श्रुतिहरूमाथि विचार गरिएको छ, ती श्रुतिहरूमध्ये सबभन्दा बढी यसै छान्दोग्योपनिषद्माथि विचार भएको छ । यो उपनिषद् जिज्ञासुहरूका लागि ज्ञानको अक्षयनिधि नै हो । *'तत्त्वमसि'* महावाक्य अद्वैतसम्प्रदायको मूल मन्त्र नै हो । यो महावाक्य यसै उपनिषद्को छैटौँ अध्यायभित्र पर्दछ । यहाँ आरुणिले विभिन्न दृष्टान्तहरू दिएर नौपटक *'तत्त्वमसि'* महावाक्यद्वारा आफ्ना छोरा श्वेतकेतुलाई आत्मतत्त्वको उपदेश गरेका छन् ।

उपनिषद्दर्शन नै सम्यग्दर्शन हो । यसबाटमात्रै जीवले मोक्ष प्राप्त गर्न सक्तछ । ज्ञानबाहेक अरू कुनै पनि उपायद्वारा मुक्ति प्राप्त हुन सक्तैन । ज्ञानका लागि यो उपनिषद् श्रोत्रिय ब्रह्मनिष्ठ सद्गुरुका मुखबाट सुनेर मनन र निदिध्यासन गर्नु पर्दछ । परम पुरुषार्थ भनेको मोक्ष प्राप्त गर्नु नै हो । मानवजीवन पाएर पनि मोक्षलाभ गर्न सकिएन भने ठूलो हानि हुन्छ । यही कुरा श्रुतिले पनि भनेको छ । जस्तै – *'इह चेदवेदीदथ सत्यमस्ति न चेदिहावेदी-न्महती विनष्टिः.'* (केन.२।५) *'ज्ञानादेव तु कैवल्यम् ।' नान्यःपन्था विद्यतेऽयनाय ।'* भनेर अरू उपनिषद्हरूले पनि भनेका छन् ।



# बृहदारण्यकोपनिषद्

**शङ्करः शङ्कराचार्यः सद्गुरुः शर्वसन्निभः ।**
**सर्वेषां शङ्कराः सन्तु सच्चिदानन्दरुपिणः ॥**

उपनिषद् नै तत्त्वज्ञानको आदि स्रोत हो । यो बृहदारण्यकोपनिषद् यजुर्वेदको काण्वी शाखा अन्तर्गतको वाजसनेयी ब्राह्मणमा पर्दछ । आकारको दृष्टिले यो उपनिषद् अरू उपनिषद्हरूभन्दा विशाल छ । आरण्य अर्थात् वनमा पढिने भएको हुँदा यसलाई आरण्यक भनिएको हो । यसरी बृहत् र आरण्यक दुई शब्दहरू मिलेर यस उपनिषद्को नाम बृहदारण्यक भएको हो । यसै कुरालाई भाष्यकार आद्यजगद्गुरु श्रीशङ्कराचार्यले भाष्यको शुरुमा नामनिरुक्तिका सन्दर्भमा नै *'सेयं षडध्यायी अरण्येऽनूच्यमानत्वादारण्यकम्, बृहत्त्वात्परिणामतो बृहदारण्यकम् ।'* भनेर लेख्नु भएको छ । त्यसपछि उहाँका साक्षात् शिष्य वार्तिककार सुरेश्वराचार्यले अर्थतः पनि यसको बृहत्तालाई स्वीकार गरेकाछन् *'बृहत्त्वाद्ग्रन्थतोऽर्थाच्च बृहदारण्यकं मतम् ।'* (सं.वा.९)

भाष्यकार श्रीशङ्कराचार्यले अरू उपनिषद्हरूमाभन्दा यस उपनिषद्मा अत्यन्त विशद, विवेचनायुक्त र विद्वत्तापूर्ण भाष्य लेख्नुभएको छ । उपनिषद्भाष्यहरूमा यो उत्कृष्ट भाष्य हो ।

यसमा सन्निवेश भएका विषयहरू र प्रसङ्गहरू यहाँ अत्यन्त सङ्क्षिप्तरूपमा उल्लेख गर्ने प्रयास गरिनेछ ।

यस उपनिषद्को प्रारम्भ प्रथम अध्यायको प्रथम ब्राह्मणको प्रथम मन्त्र *'ॐ उषा वा अश्वस्य मेध्यस्य शिरः'* बाट अश्वमेधको कुरा शुरु भएको छ । यसमा यज्ञीय अश्वका अवयवहरूमा विराट्का अवयवहरूको दृष्टिको विधान गरिएको छ । यसमा कालादि दृष्टिका साथै महिमा संज्ञक ग्रहादिमा अहरादि दृष्टिको, दोस्रो ब्राह्मणमा अश्वमेध सम्बन्धी अग्निको उत्पत्ति, जलबाट विराट्रूप अग्निको उत्पत्ति र त्यस अग्निका अवयवहरूमा प्राचीदिगादिदृष्टिको विधान गरिएको छ । त्यसपछि संवत्सर र वाक्को उत्पत्ति, ऋगादिको उत्पत्ति र मृत्युको अतृत्वको कुरासमेत यस ब्राह्मण भित्र आउँछन् ।

यसपछिको तेस्रो ब्राह्मणमा प्रजापतिका पुत्र देवता र असुरका बीचको विग्रहको वर्णन आउँछ । यसमा इन्द्रियहरूका दैवी र आसुरी वृत्तिहरूलाई देवता र असुररूपबाट लिइएको छ । इन्द्रियहरू स्वभावैले बहिर्मुख भएको कुरा अरू उपनिषद्हरूमा पनि वर्णन भएको पाइन्छ । जस्तै– *'पराञ्चि खानि व्यतृणत् स्वयम्भू ।'* (कठोपनिषद् २।१।१) सामान्यरूपमा इन्द्रियहरूमा आसुरी अर्थात् स्वार्थपरक प्रवृत्तिको नै प्रधानता रहेको हुन्छ । पुण्य र पापसंस्कारहरूका कारणले गर्दा दैवी र आसुरी वृत्तिहरूको उत्कर्ष र अपकर्ष भई नै रहन्छ । शास्त्रविहित कर्म र उपासनाबाट दैवीवृत्तिको उत्कर्ष हुन्छ । तिनलाई छोडेर स्वेच्छाचार गर्नाले आसुरीवृत्तिको बल बढ्दछ ।

यस कुरालाई आख्यायिकाका माध्यमबाट वर्णन गरिएको

छ। एकपटक देवताहरूले उद्गीथका माध्यमबाट असुरहरूलाई पराभव गर्ने निश्चय गरेका थिए। उद्गीथलाई यज्ञकर्मको एउटा अङ्ग मानिन्छ। त्यसैद्वारा देवताहरूले आसुरीवृत्तिलाई दवाउने विचार गरेका थिए। देवताहरूले वाक्, घ्राण, चक्षु, श्रोत्र र त्वक्का अभिमानी देवताहरूलाई आफ्नालागि उद्गान गर्नकालागि आदेश गरेका थिए। ती अभिमानी देवताहरूले एकएक गरेर प्रत्येकले आ–आफ्ना कर्महरूद्वारा दैवीवृत्तिको प्रबलताका लागि उद्गान गरेका थिए। त्यसको कल्याणमय फल आफैंले भोग गर्न चाहेका थिए। त्यो उनीहरूको स्वार्थ थियो। ऋत्विक्को धर्म, उसले जे सुकै गरे पनि त्यसको फल यजमानले पाउनु पर्छ भन्ने नै हुनुपर्दछ। स्वार्थी प्रवृत्ति नै आसुरी वृत्ति हो। त्यसैकारण तिनीहरूले गरेका सबै कर्महरू व्यर्थ भएर गएका थिए। अन्त्यमा मुख्य प्राणसँग उद्गानका लागि प्रार्थना गरिएको थियो।

प्राण परम उदार र सर्वथा अनासक्त छ। ऊ कुनै पनि विषयको आफैं भोग गर्दैन। उसैका कृपाले सम्पूर्ण इन्द्रियहरूले आ–आफ्ना विषयहरूको भोग गर्दछन्। अरू सबै इन्द्रियहरू सुते पनि जागा रहे पनि प्राण भने सधैं जागा भइरहन्छ। प्राणले उद्गान गरेपछि असुरहरू पछिपरेका थिए र देवताहरूको विजय भएको थियो।

यस आख्यायिकाबाट के थाहा हुन्छ भने पापवृत्तिको मूल वास्तवमा स्वार्थ नै हो। जबसम्म अन्तःकरणमा स्वार्थको कुनै पनि अंश रहन्छ तबसम्म जीवात्मा भोगासक्तिरूप पापमय बन्धनबाट मुक्त हुनसक्तैन। स्वार्थ नभएपछि संसारको अरू कुनै पनि बन्धनले जीवात्मालाई बाँध्न सक्तैन भन्ने कुराका अतिरिक्त यस ब्राह्मणमा प्राणको शुद्धता, प्राणोपासकले प्राप्त गर्ने फल, प्राणद्वारा अग्न्यादिले

प्राप्त गरेको देवत्वभावका साथै अन्त्यमा प्राणोपासकका लागि जपको विधान पनि गरिएको छ।

चतुर्थ ब्राह्मणमा प्रजापतिको उपासना र फल, प्रजापतिबाट भएको सृष्टिको वर्णन, आत्माको उपासना, ब्राह्मण आदि जातिको उत्पत्ति, कर्माधिकारी जीव, धर्मको उत्पत्ति, प्रवृत्तिको बीजभूत काम र पाङ्क्तकर्मको वर्णनसमेत आउँछ। त्यसपछिको पञ्चम ब्राह्मणमा सप्तान्नको सृष्टि र त्यसको विभाग, आत्मार्थ अन्नको आध्यात्मिक, आधिभौतिक र आधिदैविकरूपमा वर्णन गरिएको छ। लोकत्रयको प्राप्तिको साधन र देवलोकको उत्कृष्टताको वर्णन, सम्प्रत्तिकर्म र व्रतमीमांसासमेतको वर्णन यस ब्राह्मणभित्र पर्दछ। षष्ठ ब्राह्मणमा नामसामान्यभूता वाक्‌को वर्णन, रूपसामान्यभूत चक्षुको वर्णन र कर्मसामान्यभूत आत्मा अर्थात् शरीरको वर्णन गरिएको छ। यी सबैको आत्मा अर्थात् शरीरमा नै अन्तर्भाव भएको देखाइएको छ।

दोस्रो अध्यायको प्रथम ब्राह्मणमा दृप्तबालाकि गार्ग्य र राजा अजातशत्रुको संवाद आउँछ। राजा अजातशत्रु तत्त्वज्ञ थिए भने दृप्तबालाकि गार्ग्य ज्ञानाभिमानी थिए। गार्ग्यले अजातशत्रुलाई ब्रह्मको उपदेश गर्दछु भनेपछि उनले गार्ग्यलाई तुरुन्तै एकहजार स्वर्णमुद्रा भेटी चढाएका थिए। त्यसपछि गार्ग्यले जुनजुन आदित्यादिका अभिमानी पुरुषहरूमा ब्रह्मत्वको आरोप गरेर ब्रह्मको उपदेश गरेकाथिए। राजा अजात शत्रुले ती सबैलाई परिच्छिन्न देवमात्र हुन् भनेर निषेध गरिदिएकाथिए। ती देवताहरूको उपासनामात्र गर्न सकिने कुरा पनि उनले भनेका थिए। त्यसपछि गार्ग्यको अभिमान गलित भएर गएकोथियो। राजाले गार्ग्यको हात समातेर उनलाई आफ्ना महलका भित्र लिएर गएका थिए।

महलभित्र सुतिरहेको मानिसका समीपमा गएर प्राणका अभिमानी देवता चन्द्रमाका बृहत्, पाण्डरवास, सोमराजन् आदि नामहरूले बोलाएका थिए । तर ती नामहरूले बोलाउँदा पनि त्यो मानिस नउठेपछि राजाले उसलाई हातले घचघच्याएपछि त्यो मानिस उठेको थियो ।

यस ब्राह्मणमा सुषुप्ति अवस्थामा विज्ञानमय आत्माको स्थिति, स्वपिति शब्दको निर्वचन, स्वप्नवृत्तिको स्वरूप, सुषुप्तको स्वरूप र अन्त्यमा आत्माबाट जगत्को उत्पत्तिमा ऊर्णनाभि अनि विष्फुलिङ्गको समेत वर्णन आउँछ ।

उपर्युक्त कुराबाट जति पनि नाम र रूपाभिमानी देवताहरू छन् ती वस्तुतः विज्ञानमय आत्मा होइनन् । विज्ञानात्मा नाम र रूपभन्दा पर छ भन्ने थाहा हुन्छ । सामान्यतया सबैतिर व्याप्त भए पनि हृदयदेशमा त्यसको विशेष अभिव्यक्ति हुन्छ । वस्तुतः उही नै सबैको प्रेरक र भोक्ता पनि हो । अरू इन्द्रियाभिमानी देवताहरू पनि उसकै विभूतिहरू हुन् । उसको सत्ताविना कसैको पनि स्वतन्त्र अस्तित्व छैन । इन्द्रियहरूलाई प्रेरित गर्ने भएको हुँदा त्यसको नाम प्राण हो भने त्योभन्दा पनि माथि ऊ प्राणको पनि प्राण हो ।

यसै अध्यायको दोस्रो ब्राह्मणमा शिशुब्राह्मण आउँछ । त्यस ब्राह्मणामा शिशुसंज्ञक मध्यमप्राणाको त्यस प्राणाका उपकरणहरूसहित वर्णन गरिएको छ । मध्यमप्राणरूप शिशुका नेत्रान्तर्गत सात अक्षितिहरूको वर्णन गर्नुका साथै श्रोत्रादि प्राणहरू सहित चमसदृष्टिको विधान र अन्त्यमा विभागपूर्वक सप्तर्षिदृष्टिको पनि वर्णन गरिएको छ ।

तेस्रो ब्राह्मणमा मूर्तामूर्त ब्राह्मण आउँछ । यो ब्राह्मण *'द्वे वाव*

*ब्रह्मणो रूपे मूर्तं चैवामूर्तं च मर्त्यं च स्थितं च यच्च सच्च त्यच्च ।'* भन्ने मन्त्रबाट शुरु भएर अन्त्यमा *'तस्य हैतस्य पुरुषस्य रूपम् ।'* भन्ने मन्त्रमा गएर समाप्त हुन्छ । यसरी प्रथम मन्त्रले ब्रह्मका मूर्त र अमूर्त गरेर दुईप्रकारका रूपहरूको वर्णन गरेको छ भने दोस्रो मन्त्रले मूर्तामूर्तको विभागपूर्वक मूर्तरूप र त्यसको रसको वर्णन गरेको छ । चौथो मन्त्रले अध्यात्म मूर्तामूर्तको विभागपूर्वक मूर्तको वर्णन गरेको छ । पाचौँ मन्त्रले अध्यात्म अमूर्तको विशेषणहरूसहित वर्णन गरेको छ । अन्तिम मन्त्रले इन्द्रियात्मा पुरुषका स्वरूपको विशदरूपमा वर्णन गरेको छ ।

यस ब्राह्मणको अन्तिम मन्त्रको भाष्यमा श्रीशङ्कराचार्यले वासनाका सम्बन्धमा गर्नुभएको विश्लेषणको यहाँ सङ्क्षिप्त चर्चा गर्नु सान्दर्भिक ठान्दछु । सत्यको पनि सत्य परमात्माका स्वरूपको वर्णन गर्नु आवश्यक भएको हुँदा यहाँ सम्पूर्ण सत्यको वर्णन गर्नु आवश्यक छ । सत्यका नै वासनाहरू हुन् । यी वासनाहरू प्रकृत लिङ्गात्मा पुरुषका रूप हुन् ।

ती रूपहरू कुन कुन हुन्, अब तिनको वर्णन गरिन्छ । संसारमा जसरी माहारजन वस्त्र भनेर बेसारले रंगाएको वस्त्रलाई भनिन्छ, किनभने संस्कृतमा बेसारलाई महारजन भनिन्छ । त्यसैगरेर स्त्री आदि विषयहरूको संयोग भएपछि चित्तको पनि त्यस्तै नै रञ्जनाकार वासनामयरूप उत्पन्न हुन्छ । जसबाट यो पुरुष अर्थात् लिङ्गात्मा पनि महारजन वस्त्रजस्तै भएर रङ्गिन्छ भनेर भनिन्छ । त्यसैगरेर सेता भेडाका रौँ जस्तो सेतो रङको अर्को वासनाको रूप हुन्छ । फेरि अर्को इन्द्रगोप अर्थात् अत्यन्त रातो रङ्गको कीरोजस्तै पुरुषको वासनाको रूप पनि हुन्छ । यसमा

कतै विषयविशेषका अपेक्षाबाट रागको तारतम्य हुन्छ भने कहीँ पुरुषका चित्तवृत्तिका अपेक्षाबाट हुन्छ ।

अर्कातिर संसारमा जसरी आगाको ज्वाला दीप्तिमान् हुन्छ, त्यसैगरेर कतैकतै कुनै पुरुषको वासनाको रूप पनि हुन्छ । अनि जसरी पुण्डरीक अर्थात् सेतो कमलको रङ हुन्छ, त्यस्तैगरेर कुनै कुनै वासनाको रूप पनि हुन्छ । फेरि संसारमा सकृद्विद्युत् अर्थात् एकपटक चम्किएको विजुलीले सबैतिर प्रकाश दिन्छ, त्यसैगरेर ज्ञानरूप प्रकाशको वृद्धिको अपेक्षाले कसैकसैको वासनाको रूप पनि हुन्छ । वासनाका यी रूपहरूको आदि, मध्य र अन्त्य, सङ्ख्या, देश, काल, निमित्त आदि कुनै कुराको पनि निश्चय गर्नसकिँदैन । किनभने वासनाहरू अगणित हुन्छन् । वासनाका हेतुको पनि कुनै अन्त्य छैन । यो कुरा यसै उपनिषद्को छैटौँ अध्यायमा *'इदंमयः अदोमयः'* आदि श्रुतिमा आउनेछन् ।

चौथो ब्राह्मणमा याज्ञवल्क्य र मैत्रेयीको संवाद छ । याज्ञवल्क्यका दुइटी पत्नी मैत्रेयी र कात्यायनी थिए । तिनीहरूमा मैत्रेयी ब्रह्मवादिनी थिइन् र कात्यायनी सामान्य गृहिणी थिइन् । यही संवाद सम्प्रदायभेदले यसै उपनिषद्को चौथो अध्यायको पाचौँ ब्राह्मणमा फेरि पनि आउँछ । अन्त्यमा याज्ञवल्क्यले संन्यास लिने इच्छा गरेपछि आफ्ना दुइटै पत्नीहरूलाई आफ्नू सम्पत्ति बाँडिदिने विचार व्यक्त गरेका थिए । मैत्रेयीले सम्पत्ति लिने इच्छा व्यक्त नगरेर उनीबाट ज्ञानप्राप्त गर्ने इच्छा गरेकी थिइन्भने कात्यायनीले याज्ञवल्क्यले दिएको सम्पत्ति स्वीकार गरेकी थिइन् ।

याज्ञवल्क्यमैत्रेयीसंवाद ब्रह्मविद्याका प्रसङ्गमा यसको अत्यन्त महत्त्व छ । मैत्रेयीले चौथो ब्राह्मणाको तेस्रो मन्त्रमा

अमृतत्वसाधनविषयक प्रश्न आफ्ना पति ब्रह्मज्ञानी याज्ञवल्क्यसँग गरेकी थिइन् – *'सा होवाच मैत्रेयी येनाहं नामृता स्यां किमहं तेन कुर्यां यदेव भगवान्वेद तदेव मे ब्रूहीति ।'* अर्थात् ती मैत्रेयीले भनिन् – जसबाट म अमर हुन सक्तिन त्यसलाई लिएर अर्थात् त्यस्तो सम्पत्तिलाई लिएर मैले के गर्ने ? हे श्रीमन् ! हजूर जे जस्तो अमृतत्वको साधन जान्नुहुन्छ त्यही कुरा मलाई भन्नुहोस् ।

त्यसपछि याज्ञवल्क्यले पाचौँ लाम् मन्त्रद्वारा अत्यन्त प्रिय आत्माका लागि अरू सबै कुरा प्रिय हुने कुरा आफ्नी पत्नी मैत्रेयीलाई बताएका थिए । जस्तै – *'स होवाच न वा अरे पत्युः कामाय पतिः प्रियो भवत्यात्मनस्तु कामाय पतिः प्रियो भवति । ..... आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यो मैत्रेय्यात्मनो वा अरे दर्शनेन श्रवणेन मत्या विज्ञानेनेदं सर्वविदितम् ॥'* अर्थात् हे मैत्रेयि ! पतिका लागि पति प्रिय हुँदैन, आफ्नैलागि नै पति प्रिय हुन्छ ...... हे मैत्रेयि ! यो आत्मा नै दर्शनीय, श्रवणीय, मननीय र ध्यान गर्न योग्य छ । अतः यसै आत्माको नै दर्शन, श्रवण, मनन र विज्ञानबाट नै यी सबैको ज्ञान हुन्छ ।

आत्मा नै द्रष्टव्य अर्थात् दर्शन गर्न योग्य छ । यो आत्मा नै साक्षात्कारको विषय बनाउन योग्य छ । यो आत्मा पहिले आचार्य र शास्त्रद्वारा श्रवण गर्न योग्य छ । त्यसपछि यो आत्मा तर्कद्वारा अर्थात् स्वार्थानुमान र परार्थानुमानद्वारा जान्न योग्य छ । यो आत्मा निदिध्यासन अर्थात् निश्चयपूर्वक ध्यान गर्न योग्य छ । किनभने यसरी श्रवण, मनन र निदिध्यासनरूप साधनहरू सम्पन्न भएपछिमात्रै आत्मसाक्षात्कार हुन्छ । जुन समयमा यी सबै साधनहरूको एकता हुन्छ, त्यसै समयमा नै ब्रह्मैकत्व विषयक सम्यक् दर्शनको प्रसाद

प्राप्त हुन्छ । अन्यथा श्रवणमात्रैले प्राप्त हुनसक्तैन ।

दोस्रो अध्यायको चौथो ब्राह्मणमा जम्मा १४ मन्त्रहरू छन् । अन्त्यमा याज्ञवल्क्यले मैत्रेयीलाई गरेको उपदेशपछि यो ब्राह्मण समाप्त हुन्छ । जस्तै – *'यत्र हि द्वैतमिव भवति तदितर इतरं जिघ्रति तदितर इतरं पश्यति तदितर इतरं शृणोति तदितर इतरमभिवदति तदितर इतरं मनुते तदितर इतरं विजानाति यत्र वा अस्य सर्वमात्मैवाभूत्तत्केन कं जिघ्रेत्तत्केन कं पश्येत्तत्केन कं शृणुयात्तत्केन कमभिवदेत्तत्केन कं मन्वीत तत्केन कं विजानीयात् । येनेदं सर्वं विजानाति तं केन विजानीयाद्विज्ञातारमरे केन विजानीयादिति ।'* अर्थात् जहाँ द्वैतजस्तो हुन्छ, त्यहीं एउटाले अर्कालाई सुँघ्दछ, देख्तछ, सुन्दछ, अभिवादन गर्दछ, मनन गर्दछ र जान्दछ । तर जहाँ एउटै आत्मा हुन्छ, त्यहाँ कसले कसलाई सुँघ्ने, देख्ने, अभिवादन गर्ने, मनन गर्ने र जान्ने ? जसले यी सबै कुरा जान्दछ, उसलाई केद्वारा जान्ने ? हे मैत्रेयि ! विज्ञातालाई कुन साधनद्वारा जान्ने ?

मैत्रेयी ब्राह्मणपछि मधुब्राह्मण आउँछ । यस उपनिषद्‌मा *'आत्मैवेदं सर्वम्'* भनेर गरिएको प्रतिज्ञालाई पूर्ण गर्न नै मधुब्राह्मण शुरु गरिएको हो । पृथिवी आदिमा मधुदृष्टि र तिनका अन्तर्वर्ती पुरुष र शारीर पुरुषको अभिन्नता, आत्माको सर्वाधिपतित्व र सर्वाश्रयत्वको निरूपण, दध्यङ्ङाथर्वणले अश्विनीकुमारहरूलाई गरेको मधुविद्याको समेत उपदेशको आख्यायिकासमेत यस ब्राह्मणभित्र पर्दछन् । *'इमं पृथिवी सर्वेषां भूतानां मधु ....'* भन्ने प्रथम मन्त्रबाट यो ब्राह्मण शुरु भएर *'इदं वै तन्मधु दध्यङ्ङाथर्वणोऽश्विभ्यामुवाच ....'* भन्ने १९ औं मन्त्रमा गएर पाचौं ब्राह्मण

समाप्त हुन्छ । त्यसपछि छैटौँ ब्राह्मण मधुविद्याको सम्प्रदायपरम्परा *'अथ वंशः । पौतिमाष्यो'* बाट शुरु भएर *'ब्रह्मणो ब्रह्म स्वयम्भु ब्रह्मणे नमः'* मा गएर समाप्त हुन्छ ।

यस मधुब्राह्मणमा मह थरीथरीका फूलहरूको सार अथवा कार्य हो भने फूललाई त्यसको कारण हो भनेर देखाइएको छ । यहाँ मह उपकार्य र फूल उपकारक देखिन्छ । यो उपकार्यभाव र उपकारकभावलाई नै यस ब्राह्मणमा मधु भनिएको हो । यहाँ पृथ्वी, जल, अग्नि, वायु, आकाश, सूर्य, चन्द्रमा, विद्युत् र दिशा आदि सबै पदार्थहरू भूतहरूका कार्य हुन् र ती भूतहरू ती कार्यहरूका कारणहरू हुन् । यसरी तिनीहरू एक अर्कामा उपकारक र उपकार्यभाव सम्बन्ध छ । त्यस नाताले तिनीहरू एक अर्काका मधु हुन आउँछन् । यसरी यो व्यावहारिक दृष्टि भयो भने पारमार्थिक दृष्टिमा ती सबैको अधिष्ठान भने पुरुष हो । त्यही नै तिनीहरूको अध्यात्म अर्थात् मूलभूत वास्तविकस्वरूप हो । यसैको नाम आत्मा हो । त्यही आत्मा नै अमृत ब्रह्म हो र सर्वरूप हो । यसरी यस मधुब्राह्मणमा अधिष्ठानदृष्टिबाट सम्पूर्ण प्रपञ्चलाई ब्रह्मरूपबाट हेरिएको छ । जस्तै – इन्द्रो मायाभिः पुरुरूप ईयते । (बृ.उ.२।५।१९)

उपर्युक्त मधुब्राह्मण मनन र निदिध्यासनका लागि आएको हो । आचार्य शङ्करले यस ब्राह्मणको शुरुमा नै *'आत्मैवेदं सर्वम् ।'* (छा.उ.७।२५।२) भनेर उपनिषद्ले गरेको प्रतिज्ञालाई यहाँ आएर निगमनद्वारा उक्त हेतुलाई प्रतिपादन गरेका छन् । नैयायिकहरूले *'हेत्वपदेशात् प्रतिज्ञायाः पुनर्वचनं निगमनम्'* भनेका छन् । यसको अर्थ हेतुको प्रतिपादन गरेर प्रतिज्ञालाई फेरि भन्नु निगमन हो । उक्त प्रतिज्ञा पूरा गर्न उपनिषद्ले प्रथम मन्त्रको पृथिवीदेखि लिएर

१५ औं मन्त्रको आत्मासम्मलाई ब्रह्मात्मभावले वर्णन गरेको छ। यसमा १५ थरी विभिन्न उदाहरणहरू दिएर १५ थरी पर्यायहरूद्वारा *'आत्मैवेदं सर्वम्'* भन्ने प्रतिज्ञालाई निगमन विधिद्वारा बुझाइएको छ।

तेस्रो अध्यायको प्रथम ब्राह्मण याज्ञवल्कीय काण्ड *'ॐ जनको ह वैदेहो बहुदक्षिणेन'* भन्ने प्रथम मन्त्रबाट शुरु भएर *'याज्ञवल्क्येति होवाच'* भन्ने १० औँ मन्त्रमा गएर समाप्त हुन्छ। यसमा प्रारम्भमा नै राजा जनकद्वारा घोषित बहुदक्षिणायुक्त यज्ञको प्रसङ्ग आउँछ।

यस उपनिषद्को तेस्रो अध्यायदेखि याज्ञवल्कीय काण्ड शुरु हुन्छ। यसको प्रथम ब्राह्मणमा राजा जनकले गरेको यज्ञको र शास्त्रार्थको लामॊ प्रसङ्ग आउँछ।

एकपटक विदेहदेशका राजा जनकले एउटा धेरै दक्षिणायुक्त यज्ञद्वारा यजन गरेका थिए। त्यस यज्ञमा कुरु र पाञ्चाल देशका ब्राह्मणहरू एकत्रित भएका थिए। राजा जनकलाई जान्ने इच्छा भएर त्यहाँ एकत्रित ब्राह्मणहरूमा अनूचानतम अर्थात् राम्रो प्रवचन गर्नेहरूमध्ये सबभन्दा श्रेष्ठ ब्राह्मणलाई आफ्ना गोशालामा रहेका प्रत्येकका सींगमा दश–दश पाद सुवर्ण बाँधिएका एकहजार कोरली लैना गाईहरू दिने घोषणा उनले गरेका थिए। तर त्यहाँ एकत्रित ब्राह्मणहरूमध्ये कसैले पनि गाईहरू लैजाने हिम्मत गर्न सकेका थिएनन्। त्यसैबेला सभामा उठेर याज्ञवल्क्यले आफ्ना शिष्य ब्रह्मचारी सामश्रवालाई ती गाईहरू फुकाएर आश्रममा लैजाने आदेश दिएका थिए।

यसबाट अरू ब्राह्मणहरूमा क्रोध उत्पन्न भएको थियो। ब्राह्मणहरूमध्ये राजा जनकका यज्ञका होता अश्वलले सभामा

उठेर याज्ञवल्क्यलाई *'त्वं नु खलु नो याज्ञवल्क्य ब्रह्मिष्ठोऽसी ३ इति'* अर्थात् हे याज्ञवल्क्य ! हामीहरू सबैमध्येमा के तपाईँ नै ब्रह्मिष्ठ हुनुहुन्छ ? भनेर सोधेका थिए । त्यसको उत्तरमा याज्ञवल्क्यले *'नमो वयं ब्रह्मिष्ठाय कुर्मो, गो कामा एव वयं स्म'* अर्थात् ब्रह्मिष्ठलाई ता हामीहरू नमस्कार गर्दछौँ । हामीहरू ता केवल गाईहरू लैजान इच्छा गर्ने हौँ भनेर जबाफ दिएपछि अश्वलले याज्ञवल्क्यसँग प्रश्नहरू सोधेका थिए । याज्ञवल्क्यले त्यसको उत्तर दिएका थिए ।

तृतीय अध्यायको द्वितीय ब्राह्मणमा याज्ञवल्क्य र आर्तभागको संवाद आउँछ । यसमा *'अथ हैनं जारत्कारव आर्तभागः पप्रच्छ'* बाट प्रथम मन्त्र शुरु भएर *'याज्ञवल्क्येति होवाच यत्रास्य पुरुषस्य'* भन्ने १३ औँ मन्त्रमा पुगेर यो ब्राह्मण समाप्त हुन्छ । यसमा आर्तभागले ग्रह र अतिग्रहको सङ्ख्या र स्वरूप, घ्राणादि इन्द्रियहरूको ग्रहत्व र गन्धादि विषयहरूको अतिग्रहत्व, सर्वभक्षक मृत्युको खाद्यत्व, तत्त्वज्ञको देहावसानक्रम र अन्त्यमा इन्द्रियाभिमानी देवताहरू निवृत्त भएपछि अस्वतन्त्रकर्ता पुरुषको स्थितिसम्बन्धी प्रश्नहरूसमेत याज्ञवल्क्यलाई सोधेका थिए । ती सबै प्रश्नहरूको विद्वत्तापूर्ण जबाफ एक एक गरेर याज्ञवल्क्यले दिएका थिए ।

तृतीय अध्यायको तृतीय ब्राह्मणमा याज्ञवल्क्य भुज्युसंवाद आउँछ । यो ब्राह्मण *'अथ हैनं भुज्युर्लाह्यानिः पप्रच्छ याज्ञवल्क्येति होवाच ।'* भन्ने प्रथम मन्त्रबाट शुरु भएर *'स होवाचोवाच वैः'* भन्ने दोस्रो मन्त्रमा गएर समाप्त हुन्छ । यसमा पारिक्षित कहाँ रहेका थिए ? भन्ने प्रश्नबाट प्रसङ्ग शुरु भएर अन्त्यमा पारिक्षितहरूको गतिको वर्णन गरिएको छ ।

यसै तृतीयाध्यायको चतुर्थ ब्राह्मणमा याज्ञवल्क्य र उषस्तको

संवाद आउँछ। यो ब्राह्मण *'अथ हैनमुषस्तश्चाक्रायणः पप्रच्छ याज्ञवल्क्येति ...'* भन्ने प्रथम मन्त्रबाट शुरु भएर *'स होवाचोष-स्तश्चाक्रायणो यथा...'* भन्ने द्वितीय मन्त्रमा गएर यो ब्राह्मण समाप्त हुन्छ। यसमा सर्वान्तर आत्माको निरूपण भएको छ। जस्तै – *'न दृष्टेर्द्रष्टारं पश्येर्न श्रुतेः श्रोतारं शृणुया न मतेर्मन्तारं मन्वीथा न विज्ञातेर्विज्ञातारं विजानीयाः। एष त आत्मा सर्वान्तरोऽतोऽन्यंदार्तम्।'* यस ब्राह्मणमा आत्माको सर्वव्यापकता र सर्वातिशयतासमेतको उल्लेख भएको छ।

यसै अध्यायको पञ्चम ब्राह्मणमा याज्ञवल्क्य र कहोलको संवाद आउँछ। यसमा एउटामात्र मन्त्र छ। *'अथ हैनं कहोलः कौषीतकेयः पप्रच्छ ...'* बाट शुरु भएर 'कौषीतकेय उपरराम'मा समाप्त भएको छ। यस ब्राह्मणमा संन्याससहित आत्मज्ञानको निरूपण गरिएको छ – 'तस्मात् ब्राह्मणः पाण्डित्यं निर्विद्य बाल्येन तिष्ठासेत्।' भनेर भनिएको छ।

यसपछि तृतीय अध्यायको छैटौँ ब्राह्मणमा याज्ञवल्क्य र गार्गीको प्रथम संवाद आउँछ। यसमा ब्रह्मवादिनी वाचक्नवी गार्गीले सभामा उभिएर यस लोकबाट आरम्भ गरेर ब्रह्मलोकसम्मको प्रत्येकको कारणको कारणका बारेमा सोधेकी थिइन्। ती सबैको उत्तर पाइसकेपछि ब्रह्मलोक केमा ओतप्रोत छ भनेर गार्गीले जब सोधेकी थिइन् तब याज्ञवल्कयले *'गार्गि मातिप्राक्षीर्मा ते मूर्धा व्यपप्तदनतिप्रश्न्यां वै देवतामतिपृच्छसि गार्गिमातिप्राक्षिरिति ततो ह गार्गी वाचक्नव्युपरराम'* अर्थात् हे गार्गि ! अति प्रश्न नगर, तिम्रो टाउको फुट्नेछ, तिमीले जसका विषयमा अति प्रश्न गर्नु हुँदैनथ्यो, तिनै देवताका बारेमा तिमी अति प्रश्न गरिरहेकी छ्यौ। हे गार्गि ! तिमी अति प्रश्न नगर।

भनेपछि वचक्नुकी छोरी गार्गी चुपलागेकी थिइन् । किनभने जहाँ कुनै विषयको निर्णय गर्नका लागि प्रश्नोत्तर गरिन्छ । तर त्यसोगर्दा निःसन्दिग्ध वस्तुका विषयमा पनि सन्देह गर्नु अपराध मानिन्छ । यसप्रकारको नियम भङ्ग गर्नाले शाकल्यको शिर फुटेको थियो । यसको प्रसङ्ग नवम ब्राह्मणमा आउँछ ।

तृतीय अध्यायको सप्तम ब्राह्मणमा याज्ञवल्क्य र आरुणिको संवाद आएको छ । यसमा *'अथ हैनमुद्दालक आरुणिः पप्रच्छ याज्ञवल्क्येति....'* भन्ने प्रथम मन्त्रबाट शुरु भएर *'विज्ञातैष त आत्मान्तर्याम्यमृतोऽतोऽन्यदार्तं ततो होद्दालक आरुणिरुपरराम ।'* भन्ने २३ औं मन्त्रमा पुगेर यो ब्राह्मण समाप्त हुन्छ । यस ब्राह्मणमा सूत्र र अन्तर्यामीका विषयमा आरुणिले याज्ञवल्क्यलाई प्रश्न सोधेका थिए । *'वायुर्वै गौतम तत् सूत्रं वायुना वै गौतम .... सूत्रेण सन्दृब्धानि भवन्ति ।'* भनेर सूत्रका बारेमा र *'यः पृथिव्यां तिष्ठन् पृथिव्या अन्तरो यं पृथिवी न वेद यस्य पृथिवी शरीरं यः पृथिवीमन्तरो यमयत्येष त आत्मान्तर्याम्यमृतः ।'* भनेर अन्तर्यामीका बारेमा समेत याज्ञवल्क्यले उत्तर दिएका थिए ।

आठौं ब्राह्मणमा गएर वाचक्नवीकी छोरी गार्गीले फेरि याज्ञवल्क्यसँग दुइटा प्रश्नहरू गर्ने अनुमति माग्दै दुइटा प्रश्नहरू सोधेकी थिइन् । यसमा *'सा होवाचाहं वै त्वा याज्ञवल्क्य'* बाट प्रथम मन्त्र शुरु भएर *'सा होवाच ब्राह्मणा ... कश्चिद्ब्रह्मोद्यं जेतेति ततो ह वाचक्नव्युपरराम ।'* भन्ने १२ औं मन्त्रमा पुगेर टुङ्गिएको छ । यसमा क्षुधादिरहित निरुपाधिक साक्षात् अपरोक्ष सर्वान्तर ब्रह्मको निरूपण गरिएको छ । यसमा अनुमान प्रमाणद्वारा अक्षरको निरूपण गरिएको छ । अनि त्यसपछि अक्षरको स्वरूप, लक्षण र

अद्वितीयत्वको पनि निर्धारण गरिएको छ। अन्त्यमा सभामा गार्गीले ब्रह्मविषयक वादमा याज्ञवल्क्यलाई कसैले पनि जित्न सक्ने छैनन् भन्ने आफ्नू निर्णय सुनाउँदै उनी उपराम भएकी थिइन्।

तृतीय अध्यायको नवम ब्राह्मणमा याज्ञवल्क्य र शाकल्यको संवाद आउँछ। उक्त ब्राह्मण *'अथ हैनं विदग्धः शाकल्य पप्रच्छ कति देवा याज्ञवल्क्येति'* बाट शुरु भएर *'अथहोवाच ब्राह्मणा भगवन्तो यो वः .... ते ह ब्राह्मणा न दधृषुः।'* भन्ने मन्त्रमा गएर यो ब्राह्मण समाप्त हुन्छ। यसमा देवताहरूको सङ्ख्या, तेत्तीस देवताहरूको विवरण र अन्त्यमा एक देवको वर्णन गरिएको छ।

त्यसपछि प्राणब्रह्मका आठप्रकारका भेद, देवता र प्रतिष्ठासहित पूर्वादि चारै दिशाहरूको वर्णनका साथै ध्रुवा दिशाको पनि वर्णन आउँछ। अनि हृदय र शरीरको अन्योन्याश्रयत्वको वर्णन, समानपर्यन्त शरीरादिको प्रतिष्ठा र आत्मस्वरूपको वर्णन गरिएका लामा लामा प्रसङ्गहरू यस ब्राह्मणमा आउँछन्।

यसरी शाकल्यसँगको याज्ञवल्क्यको लामू प्रश्नोत्तरका सन्दर्भमा शाकल्यले याज्ञवल्क्यसँग अति प्रश्न गरेका थिए। असन्दिग्ध वस्तुका विषयमा सन्देह गरेर प्रश्न सोध्नुलाई अपराध मानिन्छ। अतः यस ब्राह्मणको २६ औँ मन्त्रको अन्त्यमा याज्ञवल्क्यले *'औपनिषदं पुरुषं पृच्छामि तं चेन्मे न विवक्ष्यसि मूर्धा विपतिष्यतीति। तं ह न मेने शाकल्यस्तस्य ह मूर्धा विपपातापि हास्य परिमोषिणोऽस्थीन्यप जह्रुरन्यन्मन्यमानाः।'* अर्थात् हे शाकल्य ! तिमीलाई औपनिषद् पुरुषका बारेमा म सोद्धछु, यदि तिमीले मलाई सो कुराको स्पष्ट जबाफ दिनसकेनौभने तिम्रो टाउको फुट्नेछ। शाकल्यले सो कुरा नजानेका हुँदा जबाफ दिन सकेका थिएनन् र उनको टाउको फुटेको थियो।

उनका हाडहरू चोरहरूले चोरेर लगेका थिए।

नवम ब्राह्मणको अन्त्यमा याज्ञवल्क्यले सभासद् ब्राह्मणहरूलाई 'हे पूज्य ब्राह्मणगण ! तपाईंहरूमध्ये जसलाई मसँग प्रश्न सोध्ने इच्छा छ सोध्नुहोस्, म जबाफ दिन्छु। अथवा तपाईंहरूसँग म प्रश्न सोध्छु, मलाई जबाफ दिनुहोस्।' भनेका थिए। तर ब्राह्मणहरूले याज्ञवल्क्यसँग प्रश्न सोध्ने साहस गर्न सकेका थिएनन्।

बृहदारण्यकोपनिषद्को चौथो अध्यायको प्रथम ब्राह्मणबाट जनक र याज्ञवल्क्यको संवाद शुरुहुन्छ।

एकदिन जनकका सभामा याज्ञवल्क्य आएका थिए। त्यस अवसरमा जनक र याज्ञवल्क्यका बीचमा संवाद भएको थियो। प्रथम मन्त्र *'ॐ जनको ह वैदेह आसाञ्चक्रे ...'* बाट यो ब्राह्मण शुरु भएर *'यदेव ते कश्चिदब्रवीत्तच्छृणवामेत्यब्रवीन्मे विदग्धः शाकल्यः ... याज्ञवल्क्यः पिता मेऽमन्यत नाननुशिष्य हरेतेति।'* भन्ने सातौं मन्त्रमा गएर यो ब्राह्मण समाप्त भएको छ।

जनकले याज्ञवल्क्यलाई हे ब्रह्मन् ! तपाईं के पशुका इच्छाले अथवा प्रश्न सुन्ने इच्छाले यहाँ आउनु भएको हो ? भनेर सोधेका थिए। याज्ञवल्क्यले हे राजन् ! म दुवै कामका लागि यहाँ आएको हुँ, भनेर राजालाई जबाफ दिएका थिए।

दोस्रो मन्त्रमा शैलिनिले भनेको वाग्ब्रह्मको उपासनाको फलसहित वर्णन आउँछ। तेस्रो मन्त्रमा उदङ्कले बताएको ब्रह्मको उपासना फलसहित वर्णन गरिएको छ। चौथो मन्त्रमा बर्कुले भनेको चक्षुर्ब्रह्मको उपासना फलसहित, पाचौं मन्त्रले गर्दभीविपीतले बताएको श्रोत्रब्रह्मको उपासना फलसहित, छैटौं मन्त्रमा जाबालले भनेको मनोब्रह्मको उपासना फलसहित र सातौं मन्त्रमा शाकल्यले भनेको

हृदयब्रह्मको उपासना फलसहित वर्णन गरिएको छ ।

सारांशमा, राजा जनकले विभिन्न विद्वान्हरूबाट वाक्, प्राण, चक्षु आदिलाई ब्रह्मका रूपमा सुनेका थिए । याज्ञवल्क्यले तिनका आयतन र प्रतिष्ठाका बारेमा राजा जनकलाई सोधेका थिए । जनकलाई सो कुरा थाहा थिएन । याज्ञवल्क्यले ती सबैको एकएक गरेर आयतन र प्रतिष्ठाकासाथै ती प्रत्येकको उपासना र फलसमेतका बारेमा भनेका थिए । त्यसपछि राजा जनक खुशी भएर गुरु याज्ञवल्क्यलाई एकहजार गाईहरू प्रदान गर्ने प्रस्ताव राखेका थिए । तर शिष्यलाई कृतार्थ नगरी गुरुदक्षिणा लिन नमिल्ने भन्दै याज्ञवल्क्यले त्यो लिन अस्वीकार गरेका थिए । त्यसपछि प्रथम ब्राह्मण समाप्त हुन्छ ।

बृहदारण्यकोपनिषद्को चतुर्थ अध्यायको दोस्रो ब्राह्मणमा *'जनको ह वैदेहः.... ब्रवीतु भगवान्'* भनेर राजा जनकले याज्ञवल्क्यसमक्ष गुरूपसत्ति गरेका थिए । दोस्रो मन्त्रमा दक्षिणनेत्रस्थ इन्द्रसंज्ञक पुरुषको परिचय दिइएको छ । तेस्रो मन्त्रमा वामनेत्रस्थ इन्द्रपत्नीको र विराट्को परिचय दिइएको छ । यसै मन्त्रमा नै ती दुवैको संस्ताव, अन्न, प्रवरण र मार्गादिको समेत वर्णन गरिएको छ । चौथो तथा अन्तिम मन्त्रमा प्राणात्मभूत विद्वान्को सर्वात्मकताको वर्णन पछि राजा जनकले अभय प्राप्त गरेको प्रसङ्ग आउँछ– *'अभयं वै जनक प्राप्तोऽसीति होवाच याज्ञवल्क्यः ।'* त्यसपछि कृतज्ञ हुँदै 'सहोवाच जनको वैदेहोऽभयं त्वा गच्छताद् याज्ञवल्क्य यो नो भगवन्नभयं वेदयसे नमस्तेऽस्त्विमे विदेहा अयमहमस्मि ।' अर्थात् हे जनक ! निश्चय नै तिमीले अभय प्राप्त गर्‍यौ भनेर याज्ञवल्क्यले जनकलाई भनेपछि हे भगवन् याज्ञवल्क्य ! जुन हजूरले मलाई अभय

ब्रह्मको ज्ञान गराउनु भयो, त्यस्ता हजूरलाई पनि अभय प्राप्त हओस्। म हजूरलाई नमस्कार गर्दछु। यो विदेह राज्य र म आफैँलाई पनि हजूरमा समर्पण गर्दछु भनेर राजा जनकले आफ्नू सर्वस्व गुरु याज्ञवल्क्यलाई समर्पण गरेका थिए।

बृहदारण्यकोपनिषद्को तृतीय ब्राह्मण *'जनकं ह वैदेहं याज्ञवल्क्यो जगाम स मेने ....'* भन्ने प्रथम मन्त्रबाट शुरु भएर *'तद् यथा राजानं .... यत्रैतदूर्ध्वोच्छ्वासी भवति।'* भन्ने ३८ औँ मन्त्रमा गएर समाप्त भएको छ।

चारौँ अध्यायको तेस्रो ब्राह्मणको प्रथम मन्त्रमा राजा जनकलाई भेट्न याज्ञवल्क्य राजदरबार गएका थिए। पहिले नै राजाले याज्ञवल्क्यबाट इच्छानुसार प्रश्न गर्न पाउने वरदानलाई उपयोग गर्दै राजा जनकले याज्ञवल्क्यसँग प्रश्न गरेका थिए। ती प्रश्नहरूमा पुरुषका व्यवहारमा काम आउने आदित्यज्योति, चन्द्रज्योति, अग्निज्योति, वाग्ज्योति र आत्मज्योतिका बारेमा प्रश्नोत्तरपूर्वक सूक्ष्म विश्लेषण गरिएको छ। यसलाई ब्रह्मज्ञानको प्रत्यक्ष साधनका रूपमा वर्णन गरिएको छ। आत्माको स्वरूपको वर्णन गर्नुका साथै आत्माले जन्ममरणका साथै देहेन्द्रियरूप पापको ग्रहण र त्याग समेत गर्ने कुरा बताइएको छ। आत्माका दुई स्थानहरूको वर्णन गर्नुका अतिरिक्त स्वप्नावस्थामा रथादिको अभाव भएको कारण त्यस समयमा आत्मा स्वयंज्योति भएको कुराको वर्णन पनि गरिएको छ। स्वप्नावस्थाका विषयमा मतभेद र त्यसको स्वयंज्योतिष्ठ्व भएको कुराको अन्त्यमा निश्चय गरिएकोछ।

त्यसपछि जाग्रत्, स्वप्न र सुषुप्तिका भोगबाटआत्माको असङ्गतताको वर्णन गरिएको छ। पुरुषको अवस्थान्तर अर्थात्

सञ्चारकार्यमा महामत्स्यको दृष्टान्त दिइएको छ। जस्तै – *'तद् यथा महामत्स्य उभेकूले अनुसञ्चरति पूर्वं चापरं चैवमेवायं पुरुष एतावुभावन्तावनुसञ्चरति स्वप्नान्तं च बुद्धान्तं च।'* अर्थात् जसरी कुनै अत्यन्त ठूलो माछो नदीमा पूर्व पश्चिम सबैतिर निर्वाध घुमिरहन्छ। त्यसैगरेर यो पुरुष स्वप्नस्थान र जागरितस्थानमा बारम्बार चङ्क्रमण अर्थात् आवतजावत गरिरहन्छ।

सुषुप्ति अवस्थालाई आत्माको विश्रान्ति स्थान मानिएको छ। यसमा श्येनपक्षी अर्थात् बाजको उदाहरण दिइएको छ – *'तद् यथास्मिन्नाकाशे श्येनो वा सुपर्णो वा विपरिपत्य श्रान्तः संहत्य पक्षौ संलयायैव ध्रियत एवमेवायं पुरुष एतस्मा अन्ताय धावति यत्र सुप्तो न कञ्चन काम कामयते न कञ्चन स्वप्नं पश्यति।'* अर्थात् जसरी यस आकाशमा श्येन अर्थात् बाज पक्षी र सुपर्ण अर्थात् गरुड पक्षी सबैतिर उडेर थाकेपछि आफ्ना पखेटाहरूलाई समेटेर ती पक्षीहरू आफ्नू वासस्थानतर्फ उड्दछन्। त्यसैगरेर यो पुरुष सुषुप्तिस्थानतर्फ पस्तछ। जहाँ पुगेपछि कुनै भोगको इच्छा गर्दैन र सपना पनि देख्तैन।

त्यसपछि स्वप्नदर्शनको स्थान भएको हिता नामक नाडीको वर्णन आउँछ – *'ता वा अस्यैता हिता नाम नाड्यो यथा केशः सहस्रधा भिन्नस्तावताणिम्ना तिष्ठन्ति शुक्लस्य, नीलस्य पिङ्गलस्य हरितस्य लोहितस्य पूर्णा अथ यत्रैनं घ्नन्तीव जिनन्तीव हस्तीव विच्छाययति गर्तमिव पतति यदेव जाग्रद्भयं पश्यति तदत्राविद्यया मन्यतेऽथ यत्र देव इव राजेवाहमेवेदं सर्वोऽस्मीति मन्यते सोऽस्य परमो लोकः।'* अर्थात् हिता नामको नाडी रौँ जस्तै हजारौँ भागमा विभाजित भएर रहेको छ। त्यो नाडी सेतो, नीलो,

पँहेलो, हरियो र रातो रङको रसले पूर्ण छ। यसप्रकार जे पनि जाग्रत् अवस्थामा भय देखिन्छ, त्यसैलाई सपनामा अविद्यावश देखिन्छ। जहाँ देवताका समान, राजाका समान अथवा जे हुँ सबै मै हुँ भनेर मान्दछ, त्यो नै यसको परमलोक हो।

यसपछि मोक्षका स्वरूपको प्रदर्शन गर्नका लागि स्त्रीसँग आलिङ्गनयुक्त भएको पुरुषको दृष्टान्त दिइएको छ – *'तद् वा अस्यैतदतिच्छन्दा अपहतपाप्माभयं रूपम्। तद् यथा प्रियया स्त्रिया सम्परिष्वक्तो न बाह्यं किञ्चन वेद नान्तरमेवमेवायं पुरुषः प्राज्ञेनात्मना सम्परिष्वक्तो न बाह्यं किञ्चन वेद नान्तरं तद्वा अस्यैतदाप्तकाम-मात्मकाममकामंरूपं शोकान्तरम्।'* अर्थात् त्यो यसको कामरहित, पापरहित र अभयरूप हो। जसरी आफ्नी प्यारी भार्यासँग अँगालो मारेर बसेको पुरुषलाई बाहिरको र भित्रको पनि केही कुरा थाहा हुँदैन। त्यसैगरेर यस पुरुषको प्राज्ञात्मासँग आलिङ्गन हुँदा त्यसले बाहिरको विषय र भित्रको विषय पनि जान्दैन। यो यसको आप्तकाम, आत्मकाम, अकाम र शोकशून्य रूप हो।

यस ब्राह्मणको २२ औँ मन्त्रमा सुषुप्ति अवस्थामा रहेको आत्माको निःसङ्ग र निःशोक स्थितिको वर्णन गरिएको छ। जस्तै – *'अत्र पिताऽपिता भवति .... तदा सर्वाञ्छोकान् हृदयस्य भवति।'* अर्थात् सुषुप्तावस्थामा पिता अपिता हुन्छन्, माता अमाता हुन्छिन् ..... हृदयका सम्पूर्ण शोकहरूलाई पार गर्दछ।

यसैगरेर २३ औँ मन्त्रमा स्वयंज्योति आत्मामा दृष्टि आदिको अनुभव नहुनाको कारण स्पष्टरूपमा बताइएको छ। जस्तै – *'यद् वै तन्न पश्यति पश्यन् वै तन्न पश्यति न हि द्रष्टुर्दृष्टेर्विपरिलोपो विद्यतेऽविनाशित्वात्। न तु तद्द्वितीयमस्ति ततोऽन्यद् विभक्त यत्*

*पश्येत् ।'* अर्थात् ऊ जुन देख्तैन, त्यो ऊ देखेरै पनि देख्तैन। द्रष्टाको दृष्टि कहिल्यै पनि लोप हुँदैन, किनभने ऊ अविनाशी हो। त्यस समयमा ऊदेखि भिन्न अर्को वस्तु हुँदै नभएको हुँदा उसले अरू कसलाई देख्ने ? त्यसैकुराको २४ औँदेखि ३० औँसम्मका मन्त्रहरूले विस्तृतरूपमा व्याख्या गरेका छन्।

अर्को ३१ औँ मन्त्रले जाग्रत् अवस्था र स्वप्न अवस्थामा पुरुषलाई विशेष ज्ञान हुनुको कारण बताइएको छ– *'यत्र वा अन्यदिव स्यात् तत्रान्योऽन्यद् वदेदन्योऽन्यच्छृणुयादन्योऽन्यत् स्पृशेदन्योऽन्यद् विजानीयात् ।'* अर्थात् जाग्रत् र स्वप्नावस्थामा आत्माभन्दा भिन्नैजस्तो हुन्छ र त्यस अवस्थामा एकले अर्कालाई देख्तछ। एकले अर्कालाई सुँघ्दछ, चाख्तछ, बोल्दछ, सुन्दछ, मनन गर्दछ, स्पर्श गर्दछ र जान्दछ ।

यी दुई अवस्थाभन्दा भिन्नै स्थिति सुषुप्ति अवस्थाको देखाइएको छ। यो कुरा ३२ औँ मन्त्रमा वर्णन गरिएको छ। सुषुप्ति अवस्थामा एक अद्वैत द्रष्टामात्रै बाँकी रहन्छ। त्यस अवस्थामा माया अर्थात् अविद्याका कार्यहरू पूर्णरूपमा शान्त हुन्छन्। यस अवस्थामा आनन्दमात्रै बाँकी रहन्छ भन्ने कुराको यसमा वर्णन गरिएको छ। ३३ औँ मन्त्रमा माथि ब्रह्मादेखि लिएर तल मनुष्य पर्यन्तमा रहने आनन्दका मात्राको विस्तृत वर्णन गरिएको छ। पुरुष अर्थात् आत्माको यस संसाररूप जागरित स्थानमा फेरि आगमन हुने कुरा ३४ औँ मन्त्रमा वर्णन गरिएको छ – *'स वा एष एतस्मिन् स्वप्नान्ते रत्वा चरित्वा दृष्ट्वैव पुण्यं च पापं च पुनः प्रतिन्यायं प्रतियोन्याद्रवति बुद्धान्तायैव ।'* त्यो पुरुष अर्थात् जीवात्मा यस स्वप्नान्तमा रमण र घुमघाम गरेर अनि पाप तथा पुण्यसमेत हेरेर जुन बाटोबाट गएको

थियो त्यही बाटोबाट नै फेरि यथास्थान अर्थात् जागरित अवस्थामा फर्कन्छ ।

त्यसपछि मर्न लागेका प्राणीको दशाको वर्णन ३५ औँ मन्त्रले गरेको छ । जसरी यो आत्मा स्वप्नस्थानबाट जागरितस्थानमा आउँछ, त्यसैगरेर त्यो यस शरीरबाट अर्को शरीरमा जान्छ । जस्तै – *'तद् यथानः सुसमाहितमुत्सर्जद् यायादेवमेवायं शारीर आत्मा प्राज्ञेनात्मनान्वारूढ उत्ससर्जन् याति यत्रैतदूर्ध्वोच्छ्वासी भवति ।'* अर्थात् संसारमा जसरी धेरै गह्राैं मालसामानहरू लादेको गाढा आवाज निकाल्दै हिँड्दछ । त्यसैगरेर यो देही आत्मा पनि प्राज्ञात्मामा अधिष्ठित भएर शब्द गर्दै जान्छ । किनभने यो जीवात्मालाई मृत्युका समयमा ऊर्ध्वोच्छ्वास हुन्छ अर्थात् उभर्को लाग्दछ ।

उपर्युक्त अनुसार म्रियमाणप्राणीलाई ऊर्ध्वोच्छास कुन समयमा के कारणले, कसरी र किन हुन्छ ? भन्ने सम्बन्धमा ३६ औँ मन्त्रले भन्दछ – *'स यत्रायमणिमानं न्येति जरया वोपतपता वाणिमानं निगच्छति तद् यथाम्रं वोदुम्बरं वा पिप्पलं वा बन्धनात् प्रमुच्यत एवमेवायं पुरुष एभ्योऽङ्गेभ्यः सम्प्रमुच्य पुन प्रतिन्यायं प्रतियोन्याद्रवति प्राणायैव ।'* अर्थात् यो शरीर जुनबेला बुढ्याइँ वा रोग आदिका कारणबाट दुब्लो हुन्छ, त्यस समयमा आँप, डुम्री अथवा पिप्पलको फल आफ्ना भेट्नाबाट खुस्किएर झरेझैं गरेर यो पुरुष पनि यस स्थूलशरीरबाट छुटेर पहिले जुन बाटोबाट आएको थियो उसै बाटोबाट प्रत्येक योनिमा प्राणविशेषका अभिव्यक्तिका लागि जान्छ । प्राणको देहान्तरग्रहणका सम्बन्धमा ३७ औँ मन्त्रमा श्रुति भन्दछ – *'तद् यथा राजानमायान्तमुग्राः प्रत्येनसः सूतग्रामण्योऽन्नैः पानैरावसथैः प्रतिकल्पन्तेऽयमायात्ययमागच्छतीत्येवं हैवंविदं सर्वाणि भूतानि*

*प्रतिकल्पन्तः इदं ब्रह्मायातीदमागच्छतीति ।'* अर्थात् जसरी राजाको सवारी हुँदा राजाका चाकडीदार अर्थात् उग्रकर्ममा नियुक्त भएका सूत तथा गाउँका नेताहरू खान, पान र आवासस्थानको समेत व्यवस्था मिलाउँदछन् । त्यसपछि राजाको सवारी हुन्छ भनेर प्रतीक्षा गरेर बस्तछन् । त्यसैगरेर प्रारब्धकर्मको फल भोग्न जाने भएका पुरुषका सम्पूर्ण भूतहरू र इन्द्रियहरूका अनुग्राहक सम्पूर्ण आदित्यादि देवताहरू पनि यो ब्रह्म आउँछ अर्थात् जीवात्मा आउँछ भन्दै प्रतीक्षा गरेर बस्तछन् ।

बृहदारण्यकोपनिषद्को चतुर्थ अध्यायको तृतीय ब्राह्मणको अन्तिम ३८ औँ मन्त्रले जीवात्माका देहान्तरका समयमा उसका साथमा के के जान्छन् भन्ने कुराको वर्णन गरेको छ – *'तद् यथा राजानं प्रयियासन्तमुग्राः प्रत्येनसः सूतग्रामण्योऽभिसमा–यन्त्येवमेवेममात्मान–मन्तकाले सर्वे प्राणा अभिसमायन्ति यत्रैतदूर्ध्वोच्छ्वासी भवति ।'* अर्थात् जसरी भ्रमणका लागि तयार भएका राजाका लागि अभिमुख उग्रकर्मा तथा पापकर्ममा नियुक्त सूत र गाउँका नेताहरू साथै जान्छन्, त्यसैगरेर म्रियमाण पुरुष जब ऊर्ध्वोच्छ्वास लिन लाग्दछ तब अन्तकालमा सम्पूर्ण इन्द्रिय अर्थात् प्राणहरू आत्माको अभिमुख भएर उसका साथै जान्छन् ।

चतुर्थ अध्यायको चौथो ब्राह्मण *'स यत्रायमात्माबाल्यम्'* भन्ने प्रथम मन्त्रबाट शुरु भएर *'स वा एष महानज आत्माजरोऽमरोऽमृतोऽभयो ब्रह्माभयं वै ब्रह्माभयं हि वै ब्रह्म भवति य एवं वेद'* भन्ने २५ औँ मन्त्रमा पुगेर समाप्त हुन्छ । प्रथम मन्त्रमा मरणोन्मुख जीवको दशाको वर्णन गरेर दोस्रो मन्त्रमा लिङ्गात्मामा विभिन्न इन्द्रियहरूको लय र लिङ्गात्माको उत्क्रमणको वर्णन गरिएको छ । तेस्रो मन्त्रले

जुकाको उदाहरण दिएर देहान्तरमा जान लागेको जीवात्माले पुरानो शरीरलाई त्यागेर अर्को नयाँ देहलाई समात्छ भनिएको छ। मन्त्रहरूले गतिका विभिन्न उदाहरणहरू दिएका छन्।

यस चौथो ब्राह्मणको छैटौँ मन्त्रमा कामना अनुसार जीवात्मा शुभ र अशुभ गतिमा जाने कुराको वर्णन गरिएको छ। तर जसको कामना छैन त्यसको मोक्ष हुने कुरा श्रुतिले यसरी वर्णन गरेको छ – *'योऽकामो निष्काम आप्तकाम आत्मकामो न तस्य प्राणा उत्क्रामन्ति ब्रह्मैव सन् ब्रह्माप्येति।'* अर्थात् जो अकाम, निष्काम, आप्तकाम र आत्मकाम हुन्छ, उसका प्राणहरूको उत्क्रमण हुँदैन, ऊ ब्रह्म नै भएर ब्रह्ममा मिल्दछ। यसै कुरालाई ७ औँ मन्त्रले यसरी भनेको छ – *'यदा सर्वे प्रमुच्यन्ते कामा येऽस्य हृदि श्रिताः। अथ मर्त्योऽमृतो भवत्यत्र ब्रह्म समश्नुत इति। तद्यथाहिनिर्ल्वयनी वल्मीके मृता प्रत्यस्ता शयीतैवमेदेवं शरीरं शेतेऽथायमशरीरोऽमृतः प्राणो ब्रह्मैव तेज एव।'* अर्थात् जुन समयमा हृदयमा रहेका सम्पूर्ण कामनाहरूको नाश हुन्छ, त्यसपछि मरणधर्मा मान्छे अमृत हुन्छ। यहीँ यसै शरीरमा नै त्यस्ता कामनाशून्य महात्मालाई ब्रह्मको प्राप्ति हुन्छ। दृष्टान्तका रूपमा जसरी सर्पको काँचुली धमिराका गोलामाथि मृत तथा सर्पद्वारा परित्यक्त अवस्थामा रहन्छ, त्यसैगरेर यो शरीर लडिरहन्छ र यो अशरीर प्राण भने ब्रह्म नै हो र यो तेज हो।

उक्त उपदेश गुरु याज्ञवल्क्यबाट सुनेपछि राजा जनकले– *'सोऽहं भगवते सहस्रं ददामीति होवाच जनको वैदेहः।'* अर्थात् म विदेहराज जनक हजूरलाई हजार गाई दिन्छु भनेर राजा जनकले भनेका थिए।

आत्मकामी ब्रह्मज्ञानीको मोक्ष हुने कुरा बताउँदै मोक्षमार्गका

सम्बन्धमा रहेको मतमतान्तरको पनि श्रुतिले वर्णन गरेको छ। विद्या र अविद्यारत पुरुषका गतिको साथै अज्ञानीले प्राप्त गर्ने अनन्दलोकको पनि यहाँ वर्णन गरिएको छ। आत्मज्ञानीको निश्चिन्त स्थिति, आत्माको महत्त्व, आत्मज्ञान नगर्नेले भोग्नुपर्ने दुर्गति र अभेददर्शी आत्मज्ञानीको निर्भयताको पनि उल्लेख गरिएको छ।

नानात्वदर्शी जीवात्माको दुर्गतिको वर्णन गर्दै श्रुतिले भनेकोछ– *'मनसैवानुद्रष्टव्यं नेह नानास्ति किञ्चन। मृत्योः स मृत्युमाप्नोति य इह नानेव पश्यति ॥'* अर्थात् ब्रह्मलाई आचार्यका उपदेश अनुसार मनले नै देख्नु पर्दछ। ब्रह्ममा नाना केही छैन। जसले ब्रह्ममा नानाजस्तो देख्तछ, त्यो मृत्युबाट मृत्युमा नै पुग्दछ। त्यसपछि ब्रह्मदर्शनको विधि र ब्रह्मनिष्ठामा ज्यादा शास्त्रको अध्ययन बाधक हुने कुराको वर्णन पनि गरिएकोछ। जस्तै – *'तमेव धीरो विज्ञाय प्रज्ञां कुर्वीत ब्राह्मणः। नानुध्यायाद् बहूञ्छब्दान् वाचो विग्लापनं हि तत् ॥'* अर्थात् बुद्धिमान् ब्रह्मज्ञानीले ब्रह्मलाई जानेर आफ्नू प्रज्ञालाई ब्रह्ममा लगाओस्। अरू धेरैथरी शब्द अर्थात् शास्त्रहरूको अनुध्यान अर्थात् निरन्तर चिन्तन नगरोस्। त्यसो गर्ने भनेको वाणीको श्रममात्रै हो।

बृहदारण्यकोपनिषद्को चतुर्थ अध्यायको चतुर्थ ब्राह्मणको लामो २२ औँ मन्त्रमा आत्माको स्वरूप र आत्मप्राप्तिको साधन भएको संन्यासको वर्णनसमेत गरिएको छ। यसै मन्त्रमा आत्माको स्थितिको पनि प्रतिपादन गरिएको छ। उक्त मन्त्रको केही अंश यहाँ प्रस्तुत गरिन्छ। जस्तै – *'स वा एष महानज योऽयं विज्ञानमयः प्राणेषु य एषोऽन्तर्हृदय आकाशस्तस्मिञ्छेते सर्वस्य वशी सर्वस्येशानः सर्वस्याधिपतिः ..... तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन*

*दानेन तपसानाशकेनैतमेव विदित्वा मुनिर्भवति । एतमेव प्रव्राजिनो लोकमिच्छन्तः प्रव्रजन्ति । एतद्ध स्म वै तत्पूर्वे विद्वांसः प्रजां न कामयन्ते किं प्रजया करिष्यामो येषां नोऽयमात्मायं लोक इति ते ह स्म पुत्रैषणाश्च वित्तैषणायाश्च लौकैषणयाश्च व्युत्थायाथ भिक्षाचर्यं चरन्ति ...।'* अर्थात् यो महान् अजन्मा आत्मा, जुन आत्मा प्राणमा विज्ञानमय हो, जुन हृदयमा आकाश हो र ऊ त्यहीँ सुत्तछ । त्यस आत्माले सबैलाई आफ्ना वशमा राख्तछ र ऊ सबैको अधिपति पनि हो । त्यस आत्मालाई ब्राह्मणहरू वेदको स्वाध्याय, यज्ञ, दान र निष्काम तपद्वारा जान्ने इच्छा गर्दछन् । त्यसै आत्मालाई जानेर मुनि हुन्छन् । यसै आत्मलोकको इच्छा गरेर नै त्यागी पुरुषहरू सबै कुरा त्याग गरेर संन्यासी हुन्छन् । किनभने पूर्ववर्ती विद्वान्हरू सन्तानको इच्छा गर्दैनथे । उनीहरू पुत्रैषणा, वित्तैषणा र लोकैषणासमेतबाट माथि उठेर भिक्षाचर्या गर्दथे ।

यस ब्राह्मणको २३ औँ मन्त्रले ब्रह्मवेत्ताको स्थिति र गुरु याज्ञवल्क्यका समक्ष राजा जनकले गरेको आत्मसमर्पणको वर्णन गरेको छ । जस्तै – *'एष नित्यो महिमा ब्राह्मणस्य न वर्धते कर्मणा नो कनीयान् । .... ब्रह्मणो भवत्येष ब्रह्मलोकः सम्राडेनं प्रापितोऽसि होवाच याज्ञवल्क्यः सोऽहं भगवते विदेहान् ददामि मां चापि सह दास्यायेति ।'* अर्थात् यो ब्रह्मवेत्ताको नित्य महिमा हो । जुन कर्मद्वारा बढ्दैन र घट्तैन पनि । ...........यो पापरहित, निष्काम र संशयरहित ब्राह्मण हुन्छ । हे सम्राट् ! यो ब्रह्मलोक हो । तिमीलाई मैले त्यहाँ पुऱ्याइदिएँ भनेर गुरु याज्ञवल्क्यले भनेपछि राजा जनकले म हजूरलाई विदेहराज्य दिन्छु र म आफैँ पनि हजूरका दासका रूपमा आत्मसमर्पण गर्दछु भनेका थिए ।

यस ब्राह्मणको अन्त्यको २५ औँ मन्त्रले ब्रह्मको स्वरूप र ब्रह्मज्ञको स्थितिको वर्णन गरेको छ । वस्तुतः बृहदारण्यकोपनिषद्मा यहाँसम्म भनिएका सबै कुराहरूलाई सङ्ग्रहित गरेर यस कण्डिकामा भनिएको छ । सम्पूर्ण आरण्यकको तात्पर्य यत्ति नै हो भनेर श्रीशङ्कराचार्यले आफ्नू भाष्यमा लेख्नुभएको छ । जस्तै – *'स वा एष महानज आत्माजरोऽमरोऽमृतोऽभयो ब्रह्माभयं वै ब्रह्माभयं हि वै ब्रह्म भवति य एवं वेद ।'* अर्थात् यो महान् अजन्मा आत्मा अजर, अमर, अमृत र अभय ब्रह्म हो । अभय नै ब्रह्म हो भनेर जसले जान्दछ, त्यो अभय ब्रह्म हुन्छ ।

बृहदारण्यकोपनिषद्को चौथो अध्यायको पाचौँ ब्राह्मणमा याज्ञवल्क्य र मैत्रेयीको संवाद आउँछ । यही संवाद द्वितीय अध्यायको चतुर्थ ब्राह्मणमा पनि आएको छ । यसका सम्बन्धमा पञ्चम ब्राह्मणको शुरुमा नै श्रीशङ्कराचार्यले भाष्य लेख्नुभएको छ । त्यसको सारांश यहाँ दिइन्छ । दोस्रो अध्यायमा आगमप्रधान मधुकाण्डद्वारा ब्रह्मतत्त्वको निश्चय गरिएको छ । त्यसैगरेर दोस्रो अध्यायको युक्तिप्रधान याज्ञवल्कीय काण्डमा पक्षप्रतिपक्षको माध्यमद्वारा पनि विचार गरिएको छ । तदनन्तर यस अध्यायमा पनि गुरु र शिष्यका बीचमा प्रश्नोत्तरको शैलीद्वारा विस्तारपूर्वक विचार गरिएको छ ।

त्यसपछि अब फेरि निगमनस्थानीय मैत्रेयी ब्राह्मण आरम्भ हुन्छ । वाक्यमर्मज्ञहरूले *'हेत्वपदेशात् प्रतिज्ञायाः पुनर्वचनं निगमनम्'* अर्थात् हेतुको उल्लेख गरेर प्रतिज्ञाको पुनः कथन गर्नुलाई निगमन भनेका छन् । यसै कुरालाई अर्को शब्दमा लेख्नुपर्दा आगमनप्रधान मधुकाण्डले जुन संन्यासयुक्त आत्मज्ञानलाई अमृतत्वको साधन भनेर भनेको थियो । त्यही संन्यासलाई अमृतत्वको साधन हो

भनेर तर्कले पनि भनेको छ । यो याज्ञवल्कीय काण्ड तर्कप्रधान नै हो । यहाँ अमृतत्वको साधन संन्यासयुक्त आत्मज्ञान नै हो भनेर भनिएको छ। यो कुरा शास्त्र र तर्क दुवै दृष्टिबाट निश्चित गरिएको छ। यी दुवैबाट निश्चय भएको अर्थ अव्यभिचारी हुनेहुँदा श्रद्धेय हुन्छ । यस मैत्रेयी ब्राह्मणको चर्चा दोस्रो अध्यायको चौथो ब्राह्मणमा भइसकेको छ । त्यही कुरा यहाँको मैत्रेयी ब्राह्मणमा पनि पाइन्छ । माथि चर्चा गर्न छुटेका केही महत्त्वपूर्ण मन्त्रहरूको मात्र सारांशमा यहाँ चर्चा गरिनेछ ।

मैत्रेयीले नाशवान् सांसारिक साधनको साटो कहिल्यै नाश नहुने अमृतत्वसाधन सम्बन्धी प्रश्न आफ्ना ब्रह्मज्ञानी पतिसँग गरेकी थिइन् । त्यसपछि याज्ञवल्क्यले उपदेश गर्ने क्रममा मैत्रेयीलाई सान्त्वना दिँदै *'न वा अरे पत्युः कामाय पतिः प्रियो भवत्यात्मनस्तु कामाय पतिः प्रियो भवति। .... आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यो मैत्रेय्यात्मनि खल्वरे दृष्टे श्रुते मते विज्ञाते इदं सर्वं विदितम् ।'* भन्ने लामो तथा महत्त्वपूर्ण मन्त्रबाट उपदेश दिएका थिए । यस मन्त्रको अर्थ यस्तो छ, याज्ञवल्क्य भन्दछन् – हे मैत्रेयि ! पतिका लागि पति प्रिय हुँदैन आफ्नै लागि पति प्रिय हुन्छ । त्यसैगरेर स्त्रीका लागि स्त्री प्रिय हुन्नन्, छोराका लागि छोरो प्रिय हुँदैन, सम्पत्तिका लागि सम्पत्ति प्रिय हुँदैन, आफ्नै लागि यी सबै प्रिय हुन्छन् । अतः हे मैत्रेयि ! आत्मा नै दर्शनीय, श्रवणीय, मननीय र निदिध्यासन गर्न योग्य छ। हे मैत्रेयि ! आत्माको दर्शन, श्रवण, मनन र ज्ञान भएपछि यी सबैको ज्ञान हुन्छ ।

मैत्रेयीलाई उपदेश गर्ने क्रममा याज्ञवल्क्यले भेददृष्टि राख्न नहुने कुरा ७ औँ मन्त्रबाट देखाउँदै यो सम्पूर्ण जगत् ब्रह्म अर्थात्

आत्मतत्त्व नै हो भनेर उपदेश गरेका थिए । सबैलाई आत्मरूपले ग्रहण गर्ने कुराको उपदेश गर्दै याज्ञवल्क्यले दुन्दुभि, शङ्ख र वीणाका शब्दको दृष्टान्त दिएका थिए । त्यसैगरेर अर्को उदाहरण *'अरे अस्य महतो भूतस्य निश्वसितमेतद् यद्ऋग्वेदो यजुर्वेदः सामवेदोऽथर्वाङ्गिरस इतिहासः पुराणं विद्या उपनिषदः श्लोकाः सूत्राण्यनुव्याख्यानानि व्याख्यानानीष्टं हुतमाशितं पायितमयं च लोकः परश्च लोकः सर्वाणि च भूतान्यस्यैवैतानि सर्वाणि निश्वसितानि ।'* अर्थात् हे मैत्रेयि ! यी ऋग्वेद र यजुर्वेददेखि लिएर लोक, परलोक र सम्पूर्ण भूतहरू पनि यसै परमात्माका निश्वास हुन् ।

अर्को दृष्टान्त दिँदै आज्ञवल्क्य मैत्रेयीलाई भन्दछन् – *'स यथा सैन्धवघनोऽनन्तरोऽबाह्यः कृत्स्नो रसघन एवैवं वा अरेऽयमात्मानन्तरोऽबाह्यः कृत्स्नः प्रज्ञानघन एवैतेभ्यो भूतेभ्यः समुत्थाय तान्येवानुविनश्यति न प्रेत्य संज्ञास्तीत्यरे ब्रवीमीति होवाच याज्ञवल्क्यः ।'* अर्थात् जसरी नूनको डल्लो भित्रबाहिरको भेदरहित सम्पूर्णरूपमा रसघन हुन्छ । त्यसैगरेर हे मैत्रेयि ! यो आत्मा भित्रबाहिरको भेदरहित सम्पूर्णरूपमा प्रज्ञानघन छ । यो आत्मा यी भूतहरूबाट उत्थित भएर यिनैकासाथ समाप्त हुन्छ । यसपछि यस आत्माको कुनै संज्ञा शेष रहँदैन ।

यसरी याज्ञवल्क्यले निर्बिशेष आत्माका बारेमा मैत्रेयीलाई उपदेश गरेपछि उनले शङ्का व्यक्त गर्दै याज्ञवल्क्यलाई प्रश्न गरेकी थिइन् । त्यसपछि शङ्काको समाधान गर्दै याज्ञवल्क्यले भनेका थिए – *'सा होवाच मैत्रय्यत्रैव मा भगवान् मोहान्तमापीपिपन्न वा अहमिमं विजानामीति स होवाच न वा अरेऽहं मोहं ब्रवीम्यविनाशी वा अरेऽयमात्मानुच्छित्तिधर्मा ।'* अर्थात् मैत्रेयीले भनिन् हे श्रीमन् ! तपाईंले त मलाई मोहयुक्त बनाइदिनुभयो । मैले यसलाई कत्ति पनि

बुझ्न सकिन। याज्ञवल्क्यले भने – हे मैत्रेयि ! मैले मोहको कुरै गरेको छैन। हे मैत्रेयि ! सुन, यो आत्मा निश्चय नै अविनाशी र अनुच्छेदरूप धर्मयुक्त हो।

चौथो अध्यायको पाचौँ ब्राह्मणको अन्तिम मन्त्रको भूमिकाको रूपमा श्रीशङ्कराचार्यले आफ्नू भाष्यमा लेख्नुभएको छ – चारै प्रपाठकहरूमा एक समान आत्मा अर्थात् परब्रह्मको निश्चय गरिएको छ। उपेय एउटै भए पनि त्यसलाई जान्ने उपाय भने भिन्न भिन्न बताइएको छ। यसलाई द्वितीय अध्यायको तृतीय ब्राह्मणको छैटौँ मन्त्रले *'अथात आदेशो नेतिनेति'* भनेर निर्देश गरेको छ। त्यसैको नवौँ ब्राह्मणमा प्राणरूप पणको उल्लेखद्वारा शाकल्य र याज्ञवल्क्यका बीचमा भएको संवादमा निश्चय गरिएको छ। फेरि पञ्चम प्रपाठकको समाप्तिमा, त्यसपछि जनक र याज्ञवल्क्यसंवादमा र यस उपनिषद्को समाप्तिमा पनि यसै कुराको निर्णय गरिएको छ। यी चारै थरी प्रपाठकहरूको तात्पर्य आत्मामा नै पर्यवसित छ। यिनका बीचमा अरू कुनै अर्थ विवक्षित छैन। यसै कुरालाई देखाउनका लागि नै अन्त्यमा *'स एष नेति नेति'* इत्यादिबाट उपसंहार गरिएको छ।

यस ब्राह्मणको अन्तिम १५ औँ मन्त्रमा अहिलेसम्म आफूले गरेको ब्रह्मज्ञानको उपदेशलाई उपसंहार गर्दै याज्ञवल्क्य संन्यास लिन्छन्। जस्तै –

यत्र हि द्वैतमिव भवति तदितर इतरं पश्यति तदितर इतरं जिघ्रति तदितर इतरं रसयते तदितर इतरमभिवदति तदितर इतरं शृणोति तदितर इतरं मनुते तदितर इतरं स्पृशति तदितर इतरं विजानाति यत्र त्वस्य सर्वमात्मैवाभूत् तत्केन कं पश्येत् तत्

केन कं जिघ्रेत् तत्केन कं रसयेत् तत्केन कमभिवदेत् तत् केन कं शृणुयात् तत् केन कं मन्वीत तत् केन कं स्पृशेत् तत् केन कं विजानीयात् येनेदं सर्वं विजानाति तं केन विजानीयात् स एष नेति नेत्यात्मागृह्यो न हि गृह्यतेऽशीर्यो न हि शीर्यतेऽसङ्गो न हि सज्यतेऽसितो न व्यथते न रिष्यति विज्ञातारमरे केन विजानीयादित्युक्तानुशासनादि मैत्रेय्येतावदरे खल्वमृतत्वमिति होक्त्वा याज्ञवल्क्यो विजहार ।

अर्थात् अज्ञान अवस्थामा द्वैत जस्तो हुन्छ । त्यसै अवस्था एकले अर्कोलाई देख्तछ, सुँघ्दछ, रसास्वादन गर्दछ र एकले अर्कालाई विशेषरूपले जान्दछ । तर जसले यहाँ सबैतिर आफूलाई आत्मरूपमा देख्तछ, त्यसबेला कसले कसलाई देख्ने, सुँघ्ने, रसास्वादन गर्ने, अभिवादन गर्ने, सुन्ने, मनन गर्ने, स्पर्श गर्ने र कसले कसलाई जान्ने ? जसद्वारा पुरुष यी सबैलाई जान्दछ, उसलाई कुन साधनले जान्ने ? 'नेति नेति' यसप्रकार निर्देशन गरिएको आत्मा अगृह्य, अशीर्य, असङ्ग र अबद्ध छ । हे मैत्रेयि ! विज्ञातालाई कसले जान्ने ? यसरी मैले तिमीलाई उपदेश गरेँ । हे मैत्रेयि ! निश्चयरूपमा अमृतत्व यति नै हो । त्यसपछि याज्ञवल्क्यले संन्यास लिएकाथिए । यसै अध्यायको छैटौँ ब्राह्मणमा याज्ञवल्कीय काण्डको वंशपरम्परा आउँछ ।

पञ्चम अध्यायबाट खिलभाग शुरु हुन्छ । यसको प्रथम ब्राह्मणमा *'ॐ पूर्णमदः पूर्णमिदम्'* भन्ने मन्त्रको व्याख्या गरिएको छ । यसमा पूर्णब्रह्म र त्यस ब्रह्मबाट उत्पन्न भएको पूर्णकार्यको वर्णन गरिएको छ । त्यसपछि *'ॐ खं ब्रह्म'* को उपासनाको वर्णन गरिएको छ ।

यसै अध्यायको द्वितीय ब्राह्मणमा एउटा शिक्षाप्रद आख्यान

आएकोछ। प्रजापतिका तीनथरी पुत्र देवता, असुर र मनुष्यहरू थिए। उनीहरूले आफ्ना पिता प्रजापतिलाई हरतरहले सेवा गरेपछि तीनैजनालाई एउटै 'द' को प्रजापतिले उपदेश गरेका थिए। भोगप्रधान देवताहरूले 'द'को अर्थ दमन अर्थात् इन्द्रियदमन गर्ने भन्ने सम्भिएका थिए। क्रूर प्रकृतिका असुरहरूले 'द'को अर्थ दया गर्ने भन्ने सम्भिएका थिए भने लोभी मनुष्यहरूले 'द'को अर्थ दान गर्ने भनेर सम्भिएका थिए।

तृतीय ब्राह्मणमा हृदयब्रह्मको उपासनाको कुरा *'एष प्रजापतिर्यद् हृदयमेतत् ब्रह्मैतत्'* भन्ने मन्त्रले वर्णन गरेको छ। चतुर्थ ब्राह्मणमा *'तद् वै तदेतदेव तदास सत्यमेव'* भन्ने कण्डिकाले सत्य ब्रह्मको उपासना बताएको छ। पञ्चम ब्राह्मणमा प्रथमज सत्यब्रह्म र सत्य नामक अक्षरको उपासना *'आप एवेदमग्र आसुरता आपः सत्यमसृजन्त सत्यं ब्रह्म प्रजापतिं प्रजापतिर्देवान्स्ते देवाः'* बाट वर्णन भएको छ। अनि एक आपसमा प्रतिष्ठित सत्य नामक आदित्य मण्डलमा र आँखामा पनि रहेका पुरुषको उपासनाको वर्णन *'तद् यत्तत् सत्यमसौ स आदित्यो य एष'* भन्ने मन्त्रले गरेको छ। यसपछि अहः संज्ञक आदित्यमण्डलस्थ पुरुषको व्याहृतिरूप अवयव र अहंसंज्ञक चाक्षुष पुरुषको व्याहृतिरूप अवयवको पनि वर्णन गरिएको छ।

छैटौं ब्राह्मणमा *'मनोमयोऽयं पुरुषो भाः सत्यस्तस्मिन्नन्तर्हृदये यथा व्रीहिर्वा यवो वा स एष सर्वस्येशानः सर्वस्याधिपतिः सर्वमिदं प्रशास्ति यदिदं किञ्च'* भन्ने हृदयस्थ मनोमय पुरुषको उपासनाको वर्णन गरिएको छ। सातौँ ब्राह्मणमा विद्युद्ब्रह्मको, आठौँ ब्राह्मणमा धेनुरूपबाट वाक्को उपासना, नवम ब्राह्मणमा पुरुषान्तर्गत वैश्वानराग्नि,

त्यसको घोष र मरणकालको सूचक अरिष्टको वर्णन गरिएको छ । दशम ब्राह्मणमा प्रकरणान्तर्गत उपासनाहरूबाट प्राप्तहुने गतिको उल्लेख गरिएको छ। अगाडिका ब्राह्मणहरूमा क्रमशः व्याधि, श्मशानगमन, अग्निदाहमा परम तपोदृष्टिको विधान, अन्नप्राणरूप ब्रह्मको उपासना र तद्विषयक आख्यानहरू परेका छन् ।

त्यसपछिका ब्राह्मणहरूमा उक्थ, यजुः, साम र क्षत्रदृष्टिबाट प्राणको उपासनाको कुरा आएको छ । चतुर्दश ब्राह्मणमा गायत्रीको प्रथम लोकरूप पादको, द्वितीय त्रयीरूप पादको, तृतीय प्राणादिपादको र तुरीय दर्शन परोरजापादको उपासनाको वर्णन आउँछ । यसका साथै गायत्रीको परम प्रतिष्ठा प्राण हो भन्नुका अतिरिक्त गायत्री शब्दको निर्वचन र वटुका लागि गरिएको गायत्रीका उपदेशका फलको पनि वर्णन गरिएको छ । गायत्रीका महत्त्वको ख्यापनका अतिरिक्त अनुष्टुप्छन्दको सावित्रीको उपदेश गर्न निषेध गरिएको छ। अनुष्टुप्छन्दको सावित्री नजपिने भएको हुँदा धेरैलाई थाहा नहुन सक्तछ। त्यसैकारण उक्त मन्त्र यहाँ दिइएकोछ। जस्तै –

तत्सवितुर्वृणीमहे वयं देवस्य भोजनम् ।
श्रेष्ठं सर्वधातमं तुरं भगस्य धीमहि ॥

गायत्रीका प्रत्येक पदको महत्त्व, उपस्थान र त्यसका फलको वर्णनका साथै त्यसका मुखविधानलाई अर्थवादका दृष्टिले व्याख्या गरिएको छ ।

पञ्चम अध्यायको पञ्चदश ब्राह्मणमा ज्ञानकर्मसमुच्चयकर्ताले आफ्नू अन्तकालमा आदित्य र अग्निसँग गरिएको प्रार्थना दिएको छ। जो यसप्रकारछ । जस्तै –

हिरण्मयेन पात्रेण सत्यस्यापिहितं मुखम् । तत्त्वं पूषन्नपावृणु सत्यधर्माय दृष्टये । पूषन्नेकर्षे यम सूर्य प्राजापत्य व्यूह रश्मीन् । समूह तेजो यत्ते रूपं कल्याणतमं तत्ते पश्यामि । योऽसावसौ पुरुषः सोऽहमस्मि । वायुरनिलममृतमथेदं भस्मान्तंशरीरम् । ॐ क्रतो स्मर कृतं स्मर क्रतो स्मर कृतं स्मर । अग्ने नय सुपथा राये अस्मान् विश्वानि देव वयुनानि विद्वान् युयोध्यस्मज्जुहुराणमेनो भूमिष्ठां ते नमउक्तिं विधेम ।

अर्थात् सत्यसंज्ञक ब्रह्मको मुख ज्योतिर्मय पात्रबाट आच्छादित छ । संसारलाई पोषणगर्ने हे सूर्यदेव ! तपाईं त्यस मुखलाई सत्यधर्मका लागि त्यसको दर्शन गर्न उघारिदिनुहोस् । हे पूषन् ! हे एकर्षे ! हे यम ! हे सूर्य ! हे प्राजापत्य ! आफ्ना किरणहरूलाई हटाउनुहोस् र तेजलाई समेट्नुहोस् । तपाईंको अत्यन्त कल्याणमयरूपलाई म हेर्न चाहन्छु । यो जुन आदित्यमण्डस्थ पुरुष हो त्यो नै म अमृतस्वरूप हुँ । मृत्युपछि मेरो प्राणवायु यस बाह्यवायुमा मिलोस् । यो शरीर भष्म भएर पृथ्वीमा मिलोस् । हे प्रणवरूप एवं मनोमय क्रतुरूप अग्निदेव ! जुन सम्झन योग्य छ त्यसलाई स्मरण गर । मैले जे गरेँ त्यसलाई स्मरण गर । हे क्रतुरूप अग्निदेव ! जुन स्मरण गर्न योग्य छ त्यसैलाई स्मरण गर । गरेका कामको स्मरण गर । हे अग्ने ! हामीहरूलाई तपाईं कर्मफल प्राप्तिका लागि शुभ मार्गबाट लिएर हिड्नुहोस् । हे देव ! तपाईं सम्पूर्ण प्राणीहरूका समस्त प्रज्ञानलाई जान्नुहुन्छ । हाम्रा कुटिल पापहरूलाई हामीहरूबाट हटाइदिनुहओस् । हामीहरू तपाईंलाई बारम्बार नमस्कार गर्दछौं । यी मन्त्रहरू ईशावास्योपनिषद्का अन्त्यमा पनि आएका छन् । यसैकारण यिनको अत्यन्त ठूलो महत्त्व रहेको देखिन्छ ।

छैटौँ अध्यायको प्रथम ब्राह्मणमा जेष्ठ श्रेष्ठ दृष्टिले प्राणोपासना, वसिष्ठादिदृष्टिले वाक्को उपासना, प्रतिष्ठादृष्टिले चक्षुको उपासना, सम्पदृष्टिले श्रोत्रको उपासना, आयतनदृष्टिले मनको उपासना र प्रजापतिदृष्टिले रेतस्को उपासनाको वर्णन गरिएको छ। यसै ब्राह्मणमा नै विभिन्न इन्द्रियहरूका बीचमा भएको वादविवादद्वारा प्राणको उत्कृष्टता देखाइएको छ।

श्वेतकेतुले आफ्ना पितासँग शिक्षा प्राप्त गरेपछि आफ्नू यश फैलाउन उनी एक पटक पाञ्चाल नरेश प्रवाहणका राजसभामा गएका थिए। राजाले श्वेतकेतुलाई अभिमानी सम्झेर पाँच ओटा प्रश्नहरू सोधेका थिए। ती पाँचओटै प्रश्नहरू जीवन र मरणसँग सम्बन्धित थिए। श्वेतकेतुले त्यसको उत्तर दिन नसकेपछि निराश भए आफ्ना गुरु तथा पिता आरुणिकहाँ उनी गएका थिए। आरुणिले पनि आफ्ना छोरालाई त्यसको उत्तर दिन सकेका थिएनन्। छोरालाई समेत साथमा लिएर विद्या जान्न आरुणि राजा प्रवाहणकहाँ जान खोजेका थिए। तर छोरा श्वेतकेतु रिसाएर राजा समक्ष जान मानेनन्। आरुणि एक्लै गएर राजा प्रवाहणको स्वीकृति लिएर वाणीमात्रद्वारा क्षत्रिय राजाको शिष्यत्व उनले स्वीकार गरेका थिए। यस सम्बन्धमा श्रीशङ्कराचार्यले आफ्नू भाष्यमा 'प्राचीन शास्त्रीय पद्धतिअनुसार विद्या प्राप्त गर्न इच्छा गर्ने पूर्ववर्ती ब्राह्मणहरू क्षत्रिय अथवा वैश्यसँग आपत्तिकालमा केवल वाणीद्वारामात्र शिष्यवृत्तिद्वारा उपसन्न हुन्थे। कुनै प्रकारको उपहार चढाएर अथवा सेवाशुश्रूषा आदिद्वारा ब्राह्मणहरू शिष्यत्व स्वीकार गर्दैनथे। त्यसैकारण गौतमले *'उपायनकीर्त्या'* अर्थात् उपसत्तिको भनाइमात्रले त्यहाँ निवास गरेका थिए। वस्तुतः सेवा आदिबाट उपसत्ति गरेका

थिएनन् ।' भनेर उल्लेख गर्नुभएको छ । राजा प्रवाहणले उपदेश गर्ने क्रममा पञ्चाग्नि विद्याको समेत उपदेश गरेका थिए । यसको प्रसङ्ग छान्दोग्योपनिषद्मा पनि आउँछ । शाखा भेदले एउटै कुरा विभिन्न उपनिषद्हरूमा विभिन्न शैलीले उल्लेख गरेको पाइन्छ ।

छैटौँ अध्यायको तृतीय ब्राह्मणमा श्रीमन्थकर्म, त्यसको विधि, त्यसको सामग्री, हवनविधि र मन्थभक्षणको विधिसमेत बताइएको छ । चतुर्थ ब्राह्मणमा सन्तानोत्पत्तिविज्ञान र नामकर्मको वर्णन गरिएको छ । अन्तिम ब्राह्मणमा *'अथ वंशः । पौतिमाषीपुत्रः'* भन्ने मन्त्रबाट समस्त प्रवचनहरूका वंशको उल्लेख गरिएको छ ।

यसरी विशालकाय बृहदारण्यकोपनिषद्को सङ्क्षिप्त रूपमा चर्चा गरियो । यस उपनिषद्को वर्णनशैली अत्यन्त रोचक, सुव्यवस्थित र युक्तिपूर्ण छ । शुक्लयजुर्वेद अन्तर्गतको यस उपनिषद्ले ब्रह्मज्ञान गराउने सन्दर्भमा विभिन्न आख्यान, संवाद, प्रश्नोत्तर, कथाका वाद र जल्प आदिको माध्यम अत्यन्त कुशलतापूर्वक अपनाएको पाइन्छ । सामान्य ज्ञान भएका जिज्ञासु पाठकलाई यस बृहदारण्यकोपनिषद्भित्र पसेर पार पाउनु भनेको एउटा अनजान बालकले अनकण्टार जङ्गलभित्र पसेर पार पाउन खोज्नु जस्तै हो । विज्ञ तथा विद्वान्का लागि यो खास उपयोगी नहुन सक्तछ । तर सामान्य पाठकका लागि भने यो ग्रन्थ उपयोगी हुनसक्तछ । किनभने विशालकाय तथा दुरूह बृहदारण्यकोपनिषद् ग्रन्थको सामान्य परिचय गराउन मात्रै यो प्रयास गरिएको हो । यो उपनिषत्सार आद्यजगद्गुरु श्रीशङ्कराचार्यको विचार र भाष्यसमेतको आधारमा लेखिएको छ । अस्तु । श्रीकृष्णार्पणमस्तु ।



# शान्तिपाठ

१. ऋग्वेदको ऐतरेय आरण्यक अन्तर्गत ऐतरेयोपनिषद् पर्दछ ।
ॐ वाङ् मे मनसिप्रतिष्ठिता मनो मे वाचि प्रतिष्ठितमाविरार्वीम एधि । वेदस्य म आणीस्थः श्रुतं मे मा प्रहासीः । अनेनाधीतेनाहोरात्रान्सन्दधाम्यृतं वदिष्यामि । सत्यं वदिष्यामि । तन्मामवतु । तद्वक्तारमवतु । अवतु मामवतु । वक्तारमवतु वक्तारम् ।

ॐ शान्तिः! ॐ शान्तिः!! ॐ शान्तिः!!!

२. शुक्लयजुर्वेद अन्तर्गत दुईओटा उपनिषद्हरू पर्दछन् ।

(क) ईशावास्योपनिषद् मन्त्रभाग अन्तर्गत पर्दछ ।

(ख) बृहदारण्यकोपनिषद् शतपथ ब्राह्मणभाग अन्तर्गत पर्दछ ।

ॐ पूर्णमदः पूर्णमिदं पूर्णात्पूर्णमुदच्यते ।
पूर्णस्य पूर्णमादाय पूर्णमेवावशिष्यते ।

ॐ शान्तिः! ॐ शान्तिः!! ॐ शान्तिः!!!

तीनओटा उपनिषद्हरू कृष्णयजुर्वेद अन्तर्गत पर्दछन् ।

(क) कठोपनिषद् कठशाखा अन्तर्गत पर्दछ ।

(ख) तैत्तिरीयोपनिषद् तैत्तिरीय आरण्यक अन्तर्गत पर्दछ ।

(ग) श्वेताश्वतरोपनिषद् मन्त्रभाग अन्तर्गत पर्दछ ।

ॐ सहनाववतु । सह नौ भुनक्तु । सह वीर्यं करवावहै । तेजस्विनावधीतमस्तु । मा विद्विषावहै ।

ॐ शान्तिः! ॐ शान्तिः!! ॐ शान्तिः!!!

३. सामवेद अन्तर्गत यी दुई उपनिषद्हरू पर्दछन् –

(क) केनोपनिषद् तलवकार ब्राह्मणभाग अन्तर्गत पर्दछ ।

(ख) छान्दोग्योपनिषद् तलवकार ब्राह्मणभाग अन्तर्गत पर्दछ ।

ॐ आप्यायन्तु ममाङ्गानी वाक्प्राणश्चक्षुः श्रोत्रमथो बलमिन्द्रियाणि च सर्वाणि । सर्वं ब्रह्मौपनिषदं माहं ब्रह्म निराकुर्यां मा मा ब्रह्म निराकरोदनिराकरण- मस्त्वनिराकरणं मेऽस्तु । तदात्मनि निरत यं उपनिषत्सु धर्मास्ते मयि सन्तु । ते मयि सन्तु ॥

ॐ शान्तिः! ॐ शान्तिः!! ॐ शान्तिः!!!

४. अथर्ववेद अन्तर्गत यी तीन उपनिषद्हरू पर्दछन् ।

(क) माण्डूक्योपनिषद् ब्राह्मणभाग अन्तर्गत पर्दछ ।

(ख) मुण्डकोपनिषद् मन्त्रभाग अन्तर्गत पर्दछ ।

(ग) प्रश्नोपनिषद् ब्राह्मणभाग अन्तर्गत पर्दछ ।

ॐ भद्रं कर्णेभिः शृणुयाम देवा भद्रं पश्येमाक्षभिर्यजत्राः ।
स्थिरैरङ्गैस्तुष्टवा ँसस्तनूभिर्व्यशेमहि देवहितं यदायुः ॥

ॐ स्वस्ति न इन्द्रो वृद्धश्रवाः स्वस्ति नः पूषा विश्ववेदाः ।
स्वस्ति नस्ताक्ष्र्यो अरिष्टनेमिः स्वस्ति नो बृहस्पतिर्दधातु ॥

# उपनिषत्सारका सन्दर्भग्रन्थहरू


१. **ईशावास्योपनिषद्**
सानुवाद शाङ्करभाष्यसहित
प्रकाशक – गोविन्दभवन कार्यालय,
गीताप्रेस, गोरखपुर, संवत् २०५६ साल ।

२. **केनोपनिषद्**
सानुवाद शाङ्करभाष्यसहित, पद एवं वाक्यभाष्य
मुद्रक एवं प्रकाशक – हनुमानप्रसाद पोद्दार,
गीताप्रेस, गोरखपुर, संवत् २०१५ साल ।

३. **कठोपनिषद्**
सानुवाद शाङ्करभाष्यसहित
मुद्रक तथा प्रकाशक – हनुमानप्रसाद पोद्दार,
गीताप्रेस, गोरखपुर, संवत् २०१७ साल ।

४. **प्रश्नोपनिषद्**
सानुवाद शाङ्करभाष्यसहित
मुद्रक तथा प्रकाशक – हनुमानप्रसाद पोद्दार,
गीताप्रेस, गोरखपुर, संवत् २०१६ साल ।

५. **मुण्डकोपनिषद्**
सानुवाद शाङ्करभाष्यसहित
प्रकाशक – गोविन्दभवन कार्यालय,
गीताप्रेस, गोरखपुर संवत् २०५५ साल ।

६. **माण्डूक्योपनिषद्**
गौडपादीय कारिका, सानुवाद शाङ्करभाष्यसहित
मुद्रक तथा प्रकाशक – हनुमानप्रसाद पोद्दार
गीताप्रेस, गोरखपुर, संवत् २०१६ साल ।

७. **तैत्तिरीयोपनिषद्**

सानुवाद शाङ्करभाष्यसहित

प्रकाशक एवं मुद्रक – गीताप्रेस, गोरखपुर, संवत् २०६० साल ।

८. **ऐतरेयोपनिषद्**

सानुवाद शाङ्करभाष्यसहित

प्रकाशक – गोविन्दभवनकार्यालय,

गीताप्रेस, गोरखपुर, संवत् २०५६ साल ।

९. **श्वेताश्वतरोपनिषद्**

सानुवाद शाङ्करभाष्यसहित

प्रकाशक – गोविन्दभवनकार्यालय

गीताप्रेस, गोरखपुर, संवत् २०५१ साल ।

१०. **छान्दोग्योपनिषद्**

सानुवाद शाङ्करभाष्यसहित

प्रकाशक – मोतीलाल जालान

गीताप्रेस, गोरखपुर, संवत् २०२३ साल ।

११. **बृहदारण्यकोपनिषद्**

सानुवाद शाङ्करभाष्यसहित

प्रकाशक – मोतीलाल जालान

गीताप्रेस, गोरखपुर, संवत् २०२५ साल ।

१२. **ईशादि नौ उपनिषद्**

व्याख्याकार – हरिकृष्ण गोयन्दका

प्रकाशक – गोविन्दभवन कार्यालय

गीताप्रेस, गोरखपुर, संवत् २०४० साल ।

१३. **कल्याण उपनिषद् अङ्क**

सम्पादक – हनुमानप्रसाद पोद्दार, चिम्मनलाल गोस्वामी

प्रकाशक तथा मुद्रक – केशोराम अग्रवाल

गोविन्दभवन अग्रवाल, गीताप्रेस, गोरखपुर, संवत् २०५२ साल ।

१४. **उपनिषत्सङ्ग्रहः**

सम्पादक – पण्डित जगदीश शास्त्री

प्रकाशक – मोतीलाल बनारसीदास, प्रा.लि. दिल्ली, सन् १९९८







१. उसैको लागि र फेरि उसैको लागि एक अध्ययन – २०२६
२. ऋतुमन्थन, समीक्षात्मकग्रन्थ – २०४४
३. सिर्जनाका फूलहरू, कवितासङ्ग्रह – २०५१
४. बहादुर शाह, खण्डकाव्य – २०५२
५. श्रद्धाञ्जलि, शोककाव्य – २०५२
६. गीत तथा भजनहरू – २०५२
७. अमरसिंहको चिट्ठी, खण्डकाव्य (ने.रा.प्र.प्र.) – २०५३
८. क्रान्तिदूत, खण्डकाव्य – २०५३
९. विविधयात्रा, कवितासङ्ग्रह (साझाप्रकाशन) – २०५५
१०. यात्रैयात्रा, कवितासङ्ग्रह – २०५८
११. पत्रैपत्र, कवितासङ्ग्रह – २०५९
१२. पृथ्वीविजय, काव्य – २०६२
१३. ज्ञान र भक्ति – २०६३
१४. रासपञ्चाध्यायी – २०६४
१५. तीर्थहरूको यात्रावृत्तान्त – २०६४
१६. ब्रह्मसाक्षात्कार – २०६५
१७. उपनिषत्सार – २०६७
१८. ब्रह्मसूत्रसार – २०६७
१९. अनुस्मृति – २०६७